

# जातक कथाहरु

भावानुवाद
बुद्धशरण

**जातक कथाहरुः बुद्धका पूर्वजन्मका कथाहरु**

पहिलो संस्करण, १००० प्रति

नेपाली संस्करण



**प्रकाशक**
लीला मैनाली
फोनः ५२०२०५७
महालक्ष्मी २, ललितपुर
इमेलः deviprasai@yahoo.com (सुझाव र प्रतिक्रियाका लागि)

**मुद्रणः** अजीमा अफसेट प्रेस, बागबजार

**मूल्यः** धम्मदान

# भावानुवाद बारे

बुद्धधर्म बारे लेखिएका ग्रन्थहरु मध्ये ज्यादै थोरै मात्र नेपाली भाषामा अनुवाद भएका पाइन्छन् । धम्मपद सबैभन्दा लोकप्रिय पुस्तक हो र यो नेपाली लगायत संसारका सबै भाषामा उपलब्ध छ । त्यसपछिको लोकप्रिय पुस्तक जातक कथा नै हो । जातक कथाहरु शिक्षाले भरपूर छन् भन्ने धेरै पहिले सुनेको थिएँ तर मैले त्यो बेला पुस्तक बजारमा पाइन । भगबान बुद्धले भिक्षुहरु मार्फत सबै व्यक्तिहरुले यी कथाहरु जानून् र थोपा थोपा गरेर दशवटै पारमिताका घैला भर्न सकून् भनेरै यी कथाहरु भन्नुभएको हो । त्यसैले समयले दिएमा सबै ४५५ कथाहरु पढनुहोस् यदि समय छैन भने कम्तिमा दशवटा प्रमुख जातकहरु चाही पढनुहोस र सो अनुसारको पारमिता प्राप्त गर्न साधना गर्नुहोस् । जातकहरु पढनुभयो तर साधना गर्नु भएन भने पढनु नपढनुले केही फरक पार्दैन ।

प्रत्येक कथाले एउटा मुख्य पारमिता प्राप्त गर्ने बिषयबस्तु बनाएको छ । प्रमुख दश जातक बाहेक अन्य केही जातकहरु पनि अति नै रोचक र शिक्षाप्रद भएकाले अन्य आठ जातक कथालाई समेत नेपालीमा अनुबाद गरी पुस्तकको आकार दिएको छु । म आफू न त बौद्ध दर्शनको ज्ञाता न त पाली र अंग्रेजी भाषाको बिज्ञ खोई केले हो मलाई अनुवाद गर्न अभिप्ररित गऱ्यो । मैले शब्दकोषको सहायताले जातक कथाहरुको भावानुवाद गरी हजुरहरु समक्ष प्रस्तुत गरेकोछु । बौद्ध दर्शनका ज्ञाताहरुबाट भावानुवादमा भएका गल्ति औंल्याई दिनु भएमा आगामी संस्करणमा सुधार गर्ने थिएँ ।

यस जातक कथाहरुको भावानुवादलाई परिष्कृत गर्न सहयोग गर्नुहुने श्री राममणि दुवाडीज्यू प्रति आभार व्यक्त गर्दछु ।

बुद्धशरण, ललितपुर, नेपाल

असोज १५, २०७५

# विषयसूचि

# तेमिया जातक

वनारसका राजा काशीराजसँग प्रशस्त धन सम्पत्ति भए पनि उनी बेखुश थिए । उनका १६ हजार रानीहरु भए पनि उनका कुनै सन्तान थिएनन् । प्रत्येक रानीले छोरा पाउनका लागि भगवानसँग प्रार्थना गर्दथे तर पनि कुनै रानीलाई पुत्रलाभ भएन । उनकी मुख्य रानी चन्दादेवीले पनि भगवान शक्रसँग प्रार्थना गरेर भनिन् "मैले जीवनमा राम्रो काम मात्र गरेको छु । मलाई एउटा छोरा दिनुहोस् ।"

उनको पुकार तभतिम्स स्वर्गमा पुग्यो । पृथ्वीमा अन्याय भयो भनेर शक्रले पहलकदमी लिनुभयो । त्यसपछि उनले पृथ्वीमा पठाउन धेरै देवताहरु मध्ये बोधिसत्वलाई चुन्नुभयो । वहाँले थाहा पाउनु भयो कि बनारसको राजा हुन बोधिसत्व मात्र योग्य छन् । त्यसपछि वहाँलाई रानी चन्दादेवीको गर्भमा पठाइदिनु भयो । ती बोधीसत्वका साथी हुन सकुन भनेर पाँच हजार जनालाई विभिन्न मन्त्री पत्नी र उच्च ओहोदाका महिलाहरुको गर्भमा पठाइदिनुभयो । जब मुख्य रानी चन्दादेवीले आफ्नो गर्भमा हिरा आएको अनुभव गरिन् । राजा रानी दुवै जना खुशी भए । धेरै धाई सुसारेहरुले सुत्केरी हुने दिनसम्म चन्दादेवीको राम्रो हेरचाह गरे । छोरा जन्मेको खबर सुनेर राजा धेरै खुशी भए र उनले हृदयबाटै अभिभावकीय माया र स्नेह प्रदान गरे । त्यसैबेला अरु ५ हजार महिलाहरुले पनि पुत्रलाभ गरे । बोधीसत्व ती ५ हजार शिशु सँगै बढ्दै गए । उनलाई चौसठ्ठी जना भर्खरै सुत्केरी भएका परिचारीकाहरुले स्तनपान गराए । ती चौसठ्ठी जना भर्खरै सुत्केरी भएका परिचारीकाहरु अत्यन्त दयालु र सुन्दर थिए । राजाले ती परिचारीकाहरुलाई रानीको जिम्मा लगाएर भन्नु भयो कि यिनीहरुले नवजात शिशुलाई राम्रो हेरचाह गर्नेछन, तिमीलाई थप केही सहायता चाहिएमा मलाई खबर गर्नु । रानी, म तिमीसंग धेरै प्रसन्न छु के वर माग्छ्यौ माग भन्नुभयो । रानीले राजसंग भन्नुभयो पछि चाहिएको बेला मागौला ।

बच्चाको नामाकरण गर्न बोलाएका ब्रह्मणले भने कि यो राजकुमार सबै लक्षण र चिन्हले भाग्यवानी छन् । उनको नाम तेमिया कुमार राखियो । तेमियाको अर्थ "मुसलधारे बर्षा" हुन्छ किनकी जन्मेको दिन उनी मुसलधारे पानीमा भिजेका थिए । एक महिना भएपछि ती शिशुलाई राम्रो कपडा लगाई दिएर सर्वसाधारणको दर्शनका लागि राजगद्दीमा बसेका राजाको काखमा राखिदिएका थिए । सबै व्यक्तिहरु उनको सुन्दरता देखेर भावविभोर भए र सबै मुख हेर्न आएका व्यक्तिहरुले बाटोमा सुन्दरताको वर्णन गर्दै आ आफ्ना घर फर्किए । त्यसपछि ४ वटा डाँकाहरुलाई राजाको अगाडि उपस्थित गराइयो । ती चार डाकाहरु कस्ता थिए भने एउटाको शरीर भरि नै कोर्राले हानेर चोटै चोट भएको, अर्को साङ्लाले बाँधेर राखेको, अर्को यातना दिएर मर्नु न बाँच्नुको दोसाँधमा भएको र अर्को चाही मृत्युदण्ड कुरेर बसेको थियो । बोधिसत्व बालक यी मानिस देखेर डराए । उनी आफ्ना बाबुको क्रुरता देखेर झनै डराएका थिए । राजाले न्यायाधिशको भूमिका निर्वाह गर्नु पर्ने हुन्छ । मैले पनि राजा भएँ भने प्रतिदिन यस्तै क्रुर क्रियाकलाप गर्नुपर्छ भन्ने बुझेर उनी ज्यादै दुःखी भए । "मानिसलाई मृत्युको मुखमा पठाउने यातना दिनुभन्दा बरु आफै नर्क जानु राम्रो ।" उनले मनमनै भने ।

अर्को दिन छोटो निन्द्राबाट उठ्नासाथ उनले आफूमाथि सेतो छाता ओढाएको र चौका चदुवा टाँगेको देखे । ती शिशुले सोच्न थाले कि राजा हुनु भनेको के हो ? उनको सोचाईले उनलाई नै हल्लाई दियो । उनले ध्यानबाट यो जानकारी पाए कि उनी अघिल्लो जन्ममा बनारसको राजकूलमा जन्मेर २० वर्ष राजा भएपछि उनले राजाबाट राजिनामा दिएका थिए । त्यो जन्ममा पनि राजाले गर्नुपर्ने यस्तै डरलाग्दा निर्णयका कारण राजिनामा दिनुपरेको थियो । उनले त्यसबेला यस्तो कार्य गरेको भए ८४ हजार बर्ष सम्म नर्कबास हुने थियो । फेरी राजा भएर त्यही बनारसमा कुकर्म गर्न पठाइएको हो ? मेरो भाग्य यस्तै हो त ? उनले त्यो सहन सक्ने कुरा थिएन । अघिल्लो जन्मकी उनकी आमाले उनी माथि ओढाएको सेतो छाताका मुनि आएर भनिन् "मेरो छोरा म तिमीलाई सहयोग गर्छु । मैले जे भन्छु त्यो तिमीले मान । तिमी लाटो र लंगडो बन । तिम्रा ओठ पनि नचलाऊ र तिमीले आवाज पनि ननिकाल । त्यस पछि तिमीलाई राजाको श्रीपेच लगाउन मान्ने छैनन् । त्यसपछि त तिमी मुक्त भै हाल्छौं ।

त्यसपछि ती वोधिसत्वले अरु ५ हजार शिशुभन्दा फरक चिन्ह देखाउन थाले । जब अरु बच्चाहरु दुध माग्न रुन्थे, तेमियाले चाँही आवाज सम्म निकालेनन् । त्यो बच्चालाई आमाले हातमा लिदा र बोक्दा न त रुन्छ, न हाँस्छ, न त हिड्छ र सुन्छ नै । तर उनको शरीर चाँही स्वस्थ बच्चाको जस्तो थियो । यो देखेर उनको

सेवामा राखिएका परिचारीकाहरु छक्क परे । आवाज निकालोस् भनेर चुसाई रहेको दुधको खोसिदिन्थे । दुधको मुन्टो मुखबाट बाहिर निकाली दिन्थे । उनलाई दिनभरी दुध नचुसाइकन भोकै राख्थे । तर पनि ती बच्चाले आवाज निकालेनन् । अर्को वर्ष उसलाई लोभ्याउन विभिन्न प्रकारका केक र मिठाईहरु अगाडि राखी दिए, त्यो देखेर अरु बच्चाहरु केक र मिठाई खान लडाई गर्थे । तर बोधिसत्व तेमियाले कुनै प्रतिक्रिया देखाएनन् । उनले मनमनै भने "नर्क जाने इच्छा भए त्यो केक खाऊ ।" त्यसैले उनले देखेको नदेख्यै जस्तो गरे । सबै किसिमका खाना, फलफूल, खेलौनाले उनलाई आकर्षण गर्न सकेन, जवकी अरु बच्चाहरु ती सामान समाउन प्रतिस्पर्धा गर्थे ।

जब उनी पाँच वर्षका भए उनलाई बोलेर डर देखाउन खोजियो । एक पटक उनलाई खजुरको पातले छाएको घरको छानाको बीचमा राखेर आगो लगाई दिए । साधारण बच्चाहरु भए रुदै कराउँदै भाग्थे होलान् तर उनी त गतिहीन भै छानामै बसिरहे । आगो उनको छेऊसम्म आउदा पनि र आगोले समात्नै लाग्दा पनि चुपचाप बसिरहे । उनी ६ वर्षको हुँदा उनलाई जंगली हात्तिमाथि राखी दिए । ७ वर्षको हुँदा उनकै अगाडी सपेराले सर्प राखेको ढाकी खोली दिएर सर्प लगाई दिए तर पनि उनी भागेनन् र कुनै प्रतिक्रिया पनि जनाएनन् । अर्को वर्ष दुई जना तरवार बोकेका डरलाग्दा मानिसहरुले उनलाई डर देखाए र विछ्यौनाको चारैतिर तरवारले घोचेर प्वाल बनाए । त्यहाँ विष्फोटको ठूलो आवाज निकाले । उनलाई तर्साउन रातको बाह्र बजेतिर ठूलो दमाह बजाएर डरलाग्दो आवाज निकाले । उनलाई तर्साउन मध्यरातमा एक्कासी बत्ति बालिदिए तरपनि उनीहरुले बोधिसत्वको ध्यान तोड्न सकेनन् । उनको शरीर भरी खुदो दलि दिए र खागा ( भीर मौरी) छोडिदिए तर पनि बोधिसत्वलाई ती खागाले चिलेनन् । धेरै दिनसम्म ननुहाइकन राखे । त्यसले पनि उनलाई कुनै फरक पारेन । तातो तेलको कराई उनको विछ्यौना तल राखे र तातो तेल उनको शरीरमा खन्याउन र तातो तेलमा डुवाउन प्रयत्न गरे तर पनि उनी चुपचाप बसिरहे । उनले विचार गरे कि नर्क यो भन्दा हजारौं गुणा खराब हुन्छ । उनका बुवा उनी बोलेको, हिडेको र सुनेको हेर्न चाहन्थे तर उनले त्यस्तो कुनै क्रियाकलाप गरेनन् ।

सोह्र वर्षको भए पछि उनलाई मोहमा पार्नका लागि सुन्दरी परीहरु भएको एउटा कोठामा लगे तर ती अत्तर लगाएका सुन्दरी परीहरुले उनमा कुनै प्रभाव पार्न सकेनन् । अन्त्यमा, राजाले तन्त्रविद् र ज्योतिषहरुलाई बच्चा जन्मेको बेला किन तिमीहरुले यस्तो जीवनमा आइपर्ने गम्भीर व्यवहारहरु वारे किन भनेनौं भनी प्रश्न गरे ? उनीहरुले तेमियाको व्यवहारको यथार्थ कुरा भनेनन् बरु आफूहरुले नै यो विषय नजानेको कुरा स्वीकार गरे । यतिका वर्ष पछि छोरा जन्मिएको त्यो खुशी

यति छिट्टै छायामा पर्छ भन्ने थाहा नभएको बताए तर अहिले यो राज्यको सुरक्षाको चुनौति रहेको र राजगद्दीलाई नै अप्ठ्यारो पर्न गएको कुरा बताउदै तेमिया देशमा भए खतरा हुने कुरा बताए । यो कुरा सुने पछि राजाले के गर्न सकिन्छ भनेर ती तन्त्रविद् र ज्योतिषसँग परामर्श मागे । राजाले रथका लागि केही घोडाहरु तयार गरी राख्न लगाए र छोरालाई त्यसमा राखेर पश्चिम ढोकाबाट बाहिर निकाली उसलाई चिहानमा पुर्नु भन्ने आदेश दिए ।

जब यो योजना रानीले थाहा पाइन् । राजाले छोरा पाएको बेला तिमीलाई के माग्नु छ माग भन्दा पछि आवश्यक परेको बेलामा मागौला भनेर थाँती राखेकी थिइन । त्यही मौका छोपी रानीले मेरो छोरालाई राज्य दिनुहोस् भनेर वर माग्नु भयो । जब उनीमाथि राजमुकुट राखिन्छ त्यो बेला ऊ अवश्य पनि बोल्ने छ ।" राजाले त्यो कुरा मानेनन् । असम्भव रानी । "तेरो छोराले दुर्भाग्य मात्र ल्यायो ।" त्यसो भए राजा, मेरो छोरालाई सात महिना त राज्य दिनुहोस् भनेर रानीले राजालाई विन्ती गरिन् । पुनः राजाले मानेनन् र भने 'रानी म मान्दै मान्दिन । सात महिना, त्यत्रो अवधि, यो त हुनै सक्तैन । मैले सोह्र वर्षमा गरेको काम केबल एक सेकेण्डमा खतम हुन्छ ।' रानी पुनः राजालाई विन्ती गर्छिन् । अन्त्यमा राजा ७ दिन राज्य दिन राजी हुन्छन् । तेमियालाई हात्तिमा राखेर पूरै शहर परिक्रमा गराइयो, मानिसको काँधमा राखी पुनः शहर परिक्रमा गराइयो । तर पनि न त उनको खुट्टा हल्लियो न त उनको ओठ नै । सातौं दिनमा मेरो छोरा एक पटक भए पनि बोल न भनेर आमाले विन्ती गरिन् । उनले भनिन् "त बोलिनस् भने मृत्युको मुखमा पर्नेछस् ।" बोधिसत्वले सोचे "मैले बोलिन भने मेरी आमाको मुटु फुट्छ । यदि बोले भने सोह्र वर्ष सम्म मैले गरेको तप नष्ट हुन्छ । यदि मैले आफ्नो तपलाई निरन्तरता दिएँ भने म र मेरा बा आमा नर्क जानबाट बच्नेछन् ।" तसर्थ तेमियाले मौन बस्ने निर्णय गरे । उनको सात दिनको राज्यावधि समाप्त हुँदै थियो । उनी बोल्न त सक्थे तर पनि बोलेनन् । अर्को दिन विहानै राजाले सुनन्दालाई घोडा र रथ तयार गर्ने आदेश दिए । बोधिसत्वलाई त्यो रथमा राखी पश्चिमतिरको ढोकाबाट बाहिर निकाली चिहान खनी उसलाई खाडलमा हुत्याईदिनु र बेल्चाले उसको टाउकोमा हानी मार्नु । त्यसपछि उसलाई माटोले पुर्नु । त्यसपछि तिमीले नुहाई धुवाई फर्केर आउनु ।" राजाको आदेश हुन्छ ।

सुनन्दाले बोधिसत्वलाई पश्चिमतिरको मृत्युको ढोकाबाट ननिकाली पूर्वतिरको ढोकाबाट बाहिर निकाल्छन् । पूर्वको ढोका भनेको विजयको ढोका हो । ढोकाबाट बाहिर निस्कदै गर्दा त्यो रथको एउटा चक्का ढोकामा ठोकियो त्यो सुनेर बोधिसत्वले सोचे कि अब मैले मुक्ति पाउँछु । भगवानको आशिर्वादले उनलाई

बनाएको चिहान उनले टाढैबाट देखे । सुनन्दाले रथलाई रोके । सुनन्दाले बोधिसत्व तेमियाका सबै गरगहना निकाले र तेमियालाई रथबाट उतारे ।

जब सुनन्दा चिहान खन्न थाले तब उनले आफू मुक्त हुन्छु भन्ने सोचे । सोह्र वर्ष सम्म मैले मेरो हात खुट्टा चलाएको छैन । अब म चलाउन सक्छु । त्यसपछि विस्तारै उठे र खुट्टालाई हातले मालिस गरे हातलाई पनि मालिस गरे अनि उफ्रिए । उनलाई उफ्रिदा हावामै उडेको जस्तो र हावामै कुसन भरिएको महसुस भयो । उनीले अगाडि पछाडि हिडेर खुट्टाको अभ्यास गरे र विश्वस्त भए कि उनमा अब प्रशस्त बल छ । उनका लागि यो नै जंगलमा गई सन्यास लिने उपयुक्त अवसर थियो । यदि सुनन्दाले उनलाई भाग्नबाट रोक्न खोजेको भए पनि सुनन्दालाई हराउने उनीसँग प्रयाप्त बल थियो ।

चित्र १ तेमियाले एउटै हातले पुरै रथलाई उचालको ।



उनको बलको जाँच गर्न उनले रथको पछाडिपट्टि एउटा हातले समाते र पुरै रथलाई उचाले । उनमा पर्याप्त बल भएको यकिन भयो । उनी रथ हाक्ने मानिसको अगाडिबाटै हिडेर सुनन्दालाई चुनौति दिदै भने । “जुन मानिसलाई तिमी मार्न गइरहेका छौं त्यो न त बहिरो छ न त लंगडो नै । तिमी त्यही रोक र नर्क जान तयार हौं । तिमी मर्दैछौं ।”

सुनन्दाले माथि हेऱ्यो र बोधिसत्वको सुन्दरता देखेर ऊ आश्चर्यमा पऱ्यो । उसले बोधिसत्वलाई चिन्नै सकेन । तेमियाले आफै आफ्नो परिचय दिए । अचानक सुनन्दा बोधिसत्वको खुट्टामा झुके र उनलाई आदर गरेर सुरक्षापूर्वक राजदरबारमा लैजाने अठोट गरे । बोधिसत्व जसले बुद्धत्व प्राप्त गर्ने यात्रा तय गरिसकेका थिए उनलाई कसले रोक्न सक्थ्यो र ? उनले आफ्नो पूर्वजन्मको वर्णन गरे । त्यसअघिका जन्मको सबै कुरा बताए । आफूले नर्कमा बिताएका केही जन्मको पनि विस्तारपूर्वक बताए । उनले सुनन्दालाई भने तुरुन्त फर्किएर राजदरवार जाऊ र बा आमालाई आफ्नो छोरा जीवित रहेको बताऊ, ताकि वहाँहरु छोराको मृत्युको शोकमा नपरुन् ।

त्यो रथ लिएर सुनन्दा एक्लै राजदरबार फर्किए । सुनन्दा एक्लै फर्केको देखपछि रानीले अनुमान गरिन् कि मेरो छोरालाई जंगलमा मारियो । त्यसपछि उनी रुन लागिन् । जब सुनन्दाले सबै कथा भने तब उनी चुप लागिन् । तेमियाले विजय प्राप्त गरेको कुरा राजाले रानीलाई बताए । तब राजा र रानी दुवै जना छोरा घरमा ल्याउनका लागि खोजतलास गर्न भनी पूर्व गेटबाट बाहिर निस्किए । त्यो बेला तेमियाले सन्यास धारण गरिसकेका थिए । धेरै परबाट रथहरुको लामो ताँती आएर एक ठाउँमा रोकियो । जहाँ उनी शक्रले बनाइदिएको कुटीमा बसिरहेका थिए । त्यो कुटीको छानो पातहरुले छाइएको थियो । उनी सन्यास धारण गरेर चीवर र चितुवाको छाला लगाएर बसिरहेका थिए । काँधमा कालो छाला राखिएको थियो । कपाल बाटेर माथि लगी बाँधिएको थियो । उनले आफ्ना बा-आमालाई स्वागत गरे । आफ्नो पूर्व जन्मका सबै कथाहरु बताए । उनी १६ वर्ष सम्म मौन बसेको कारण समेत बताए । बोधिसत्व आफ्नो अगाडि घुडा टेकेर बसिरहेका राजा रानीलाई धर्मदेशना दिईरहेका थिए । बोधिसत्वको सबै कुरा सुनिसके पछि राजा रानी दुवै दरबारमा फर्किए । दरबारमा रहेको धन सम्पत्ति सुन चाँदी सबै गरिब दुःखीलाई बाँडिदिए । राजा मात्र नभएर सबै प्रजाहरु भिक्षुमा रुपान्तर भए । त्यसपछि पूरै राज्य नै भिक्षुहरुको राज्यमा परिणत भयो ।

(मौलिक कथाः मुगापक्ख जातक कथा नं. ५३८)

(स्रोतः http://www.buddha-images.com )

## यो कथाबाट प्राप्त शिक्षा

यो जातक यसरी बनेको छ कि एउटै जातकबाट चारवटा पारमिता प्राप्त गर्न सन्देश दिएको छ् । यो कथाबाट धेरै भन्दा धेरै शिक्षा प्रदान गरिएको छ, ती शिक्षाहरु मध्ये मैले बुझेका केही मुख्य शिक्षाहरु तल दिइएका छन् ।

- दृढ संकल्प पारमिताः यो कथाको प्रमुख शिक्षा भनेकै दृढ संकल्प पारमिता संकलन गर्नु हो । तेमिया बुद्धको पूर्वजन्म थियो । उहाँ बोधिसत्व हुनुहुन्थ्यो । उहाँले यस्तो दृढ संकल्प गर्नु भयो कि उहाँलाई छ्यानामाथि राखेर आगो लगाउदा पनि भाग्नु भएन, राजा बनाउदा पनि बोल्नु भएन । आमा रुदा पनि बोल्नु भएन । आफूलाई मार्न लाग्दा पनि बोल्नु भएन । यसको सिधा शिक्षा भनेको मौन बस्ने दृढ संकल्प नै हो । हामीले पनि जीवन सार्थक बनाउन दृढ संकल्प पारमिताको साधना गर्नुपर्छ । अन्त्यमा सन्यास नै धारण गर्नुभयो । सन्यास नै प्रमुख पारमिता हो ।

- दोश्रो शिक्षा भनेको वीर्य पारमिता नै हो । उनीसंग आध्यात्मिक र भौतिक दुबै वीर्यता थियो । राजकीय कर्मको त्याग र संन्यास धारण गर्नु र परिवर्जित हुनु आध्यात्मिक वीर्यता थियो भने सुनन्दाको रथलाई एउटै हातले उचाल्नु र भिड्न तयार हुनु उनको भौतिक वीर्यता थियो । उनमा आध्यात्मिक र भौतिक वीर्यता थियो ।

- तेश्रो शिक्षा भनेको प्रज्ञा पारमिता हुनुपर्छ भन्ने नै हो । उहाँले आफ्नो आश्रममा ध्यान गर्नुभयो ध्यानबाट प्राप्त प्रज्ञा बाँडनुभयो । आफ्ना माता पिता र अरु व्यक्तिहरुलाई धर्मदेशना दिनुभयो, उहाँ किन बोल्नुभएन ? किन खुट्टा चलाउनु भएन ? र आगो लगाउदा पनि किन भाग्नु भएन ? त्यो बिषयमा उपदेश दिनुभयो । आफूले ध्यान मार्फत प्राप्त प्रज्ञा सबैलाई प्रदान गर्नुभयो र पूरै राज्यलाई भिक्षुहरुको राज्य बनाउनु भयो ।

- धैर्यता पारमिताको साधना चौथो शिक्षा हो । तेमीयाले जस्तो धैर्यता लिन सक्नुपर्छ । त्यति ठुल्ठुला जोखिम आइलाग्दा पनि ज्यान नै जान लाग्दा पनि लामो समयसम्म उहाँले धैर्यता लिन सक्नुभयो र सहेर बसिरहनुभयो ।

- जस्तो मति उस्तै गति, तेमीयाले असल कर्म गर्नुभयो तसर्थ उनको जन्म बुद्धको रुपमा भयो ।

# महाजनक जातक

भारतवर्षमा एउटा मिथिला नामको समृद्ध राज्य थियो । त्यहाँ विदेह नामका राजा थिए । उनका अरिथाजनक र पोलाजनक नामका दुईवटा छोरा थिए । जब राजा विदेह वृद्ध भए तव तत्कालीन राजपरिषदको सिफारिसमा जेठो छोरो अरिथाजनक राजा भए भने कान्छो छोरो पोलाजनक चाँही प्रधानसेनापति भए । मिथिलामा अरिथाजनक राजा भए पनि उनका कान्छो भाइ पोलाजनक चाँही ज्यादै लोकप्रिय थिए । पोलाजनक दाजुप्रति धेरै श्रद्धा गर्थे भने अरिथाजनक भने भाइको लोकप्रियता प्रति डाहा गर्दथे र सधैं शंकाको दृष्टिकोणले हेर्दथे । भाइको कारण राजगद्दी पो जान्छ कि भनी शंकै शंका गर्दथे । भाइको लोकप्रियताबाट डराएर एकदिन अरिथाजनकले आफ्ना भाइ पोलाजनकलाई कोठाभित्र साङ्लाले बाँधेर राखे । पोलाजनकले आफू निर्दोष भएको भनेर शक्र (देवेन्द्र)संग धेरै पुकार गरे । अचम्मको कुरा उनीले पुकार गरिरहेकै बेला उनलाई बाँधेर राखेको साङ्लो आफै फुस्किएर भूईमा झ्र्यो । त्यहाँबाट उनी भाग्न सफल भए र त्यो राज्यको सिमाना पार गरेर एउटा सानो गाउँमा शरण लिएर बसे । उनी ज्यादै लोकप्रिय भएको र जनताको नेता भएको कारण धेरै व्यक्तिहरु उनको कार्यकर्ता बने । उनमा साहस र लोकप्रियता थियो । तसर्थ उनले आफ्नो दाजु अरिथाजनकको राज्यमा धावा बोले । राजा अरिथाजनक भाइ पोलाजनकसँग धेरै डराएका थिए । उनले आफ्नी श्रीमतीलाई भने की “म युद्धमा मारिन पनि सक्छु तसर्थ गर्भमा रहेका बालकको रक्षाका लागि तिमी मिथिला छोडेर अन्यत्रै जाऊ ।”

नभन्दै उनले आफ्ना देवर पोलाजनकद्वारा आफ्नो श्रीमानको हत्या भएको अप्रिय खबर सुनिन् । उनले आफ्ना सबै सुनका गरगहनालाई एउटा ढाकीमा (डालो ) राखिन् र त्यसलाई धानले छोपिन् । त्यहाँ माथि केही सामान राखिन् र त्यो माथि फोहोर कपडाले ढाकीदिइन् । मानिसले नचिनुन भनेर उनले मुखमा हल्का कालो रंग लगाइन् अनि साडीको घुम्टो अडेर मुख छोपिन् र उत्तरतिरको ढोकाबाट बाहिर निस्की टाप ठोकिन् । उनको गर्भमा रहेको बच्चा महामानव वा बोधिसत्व थियो । त्यहीबेला देवताका राजा शक्र एउटा रथ चलाउँदै गइरहेका थिए । शक्रले अचानक उनलाई देखेर सोधे “तिमी कहाँ जान लागेकी ?” उनले भनिन् “म

कलाकम्पा हिडेकी ।" त्यहाँ पुग्न ६० माइल टाडाको यात्रा गर्नु पर्ने थियो तर उनलाई त्यहाँ पुग्ने बाटो थाहा थिएन । ती देवताका राजा शक्रले भन्नुभयो, "म तिमीलाई त्यो शहरमा पुऱ्याई दिन्छु,, आऊ मेरो रथमा बस ।"  उनी त्यो रथमा बस्नासाथ उनी मस्त निन्द्रामा परिन् । निन्द्रा खुल्दा त उनी कलाकम्पा शहरको किनारमा पुगी सकेकी थिइन् । उनी छक्क परेर देवराज शक्रलाई सोधिन् "कसरी यति छिटो यो शहरमा आइपुगियो ?" शक्रले भन्नुभयो, "हामीहरु छिटो बाटोबाट आयौं जुन बाटो केवल देवताहरुले मात्र देखेका छन् ।" यति भनेर शक्र आफ्नो बाटो लाग्नु भयो ।

कलाकम्पामा तिनी अपरिचित महिलालाई उत्तरतिरका एकजना ब्राह्मण शिक्षकले चिनिहाले । उनले ती ब्राह्मणलाई भनिन् "म मिथिलाका भर्खरै मारिएका राजा अरिथाजनककी मुख्य रानी हुँ । म मेरो गर्भमा रहेको बच्चालाई बचाउनको लागि यहाँ आएकी हुँ ।" ती ब्राह्मण दयालु र ज्ञानी थिए । उनले ती महिलालाई आफ्नै आश्रममा बस्न निमन्त्रणा दिए । आश्रममा बसेको छोटो समय पछि नै उनले बच्चा जन्माइन् । ती बच्चाको नाम आफ्नै हजुरबाको नाम "महाजनक" राखियो । ती बच्चा दिनको सूर्य र रातको चन्द्रमा भैंm बढ्दै गए । तर उनका बालसखाहरुले उनलाई गिज्याउन थाले । खेल खेल्दा "यो विधवाको छोरो हो" यसको बाबु छैन" भन्न थाले । यी शब्दहरुले उनको हृदयमा चोट पुग्यो । उनले आफ्नी आमालाई भन्न लागे "मेरो बुबा को हो ? भन्नु भएन भने म तपाईको छातिमा टोकिदिन्छु ।" उनी गोप्य कुरा भन्न बाध्य भइन् । उनले भनिन् "तिमी मिथिलाका पूर्व राजा अरिथाजनकका छोरा हौं । तिम्रा बुवा युध्दमा मरे, राज्य पनि गुम्यो ।" उनले सबै कुरा सुनाइन् । सोह्र वर्षको भए पछि उनले आफ्नो बुवाको राज्य पुनः प्राप्त गर्ने दृढ प्रतिज्ञा गरे । उनले आफ्नो सबै योजना आफ्नी आमालाई बताए । आमाले आफूसँग भएको सुनका गरगहना छोरालाई दिइन् । उनले मन मनै विचार गरे । यति सुनले त म सजिलै मेरो बुबाको राज्य लिन सक्छु । उनले आमालाई भने "मलाई आधा भए पुग्छ । म व्यापार गरेर अरु धेरै कमाउछु ।" उनले छोरालाई सुरक्षाको बारेमा बताइन् । समुन्द्रमा हुन सक्ने खतरा र जोखिमबारे सचेत गराइन् । तर उनले आमाले भनेको कुरा सुनेको नसुने भैंm गरे । महाजनकले त्यसै समयमा आफ्ना काका पोलाजनक बिरामी भएको समाचार सुने । महाजनकले व्यापारका लागि केही सामानहरु किनेर हिन्द महासागरबाट सुवर्णभूमितर्फ लगे । द्रुत गतिको पानीजहाजको यात्रा पछि सामान र मानिसहरु सुवर्णभूमिमा जादै गर्दा सातौं दिनमा जहाजमा बढी सामानको भएको कारण असन्तुलित  बन्न पुग्यो । बढी सामान र मानिस भएकैले जहाजमा पानीको सतह बढ्दै गयो र जहाजको बेरा भत्किइ जहाज भित्र पानी पस्यो । महाजनकले जहाज समुन्द्रमा डुब्दैछ भन्ने

थाहा पाए । धेरै मानिसहरु समुन्द्रमा डुबे, किनकी उनीहरुले भक्ति मात्र गरे कर्म गरेनन् । आफू कसरी बच्ने भन्ने विचार गरेनन् । तर उनले चाँही आफै सक्खर र घ्यू मिलाएर ढकने तयार गरे र खाए । जब जहाज डुब्न लागेको थियो त्यतिवेला जनावरहरु समुन्द्रमा तैरिदै थिए । ठीक त्यसै बखत जहाजको टुप्पो चाँही माथि उठ्यो त्यहीबाट महाजनक जहाजबाट टाढा पुग्ने गरी हामफालेर पौडिन थाले ।

उनी आफू पौडिएर अरु व्यक्तिलाई पनि बचाउनतिर लागे । ठीक त्यही दिन पोलाजनकको मृत्यु भयो र मिथिला राज्यको राजगद्दी खाली भयो । खाना नखाईकन पनि महाजनक सात दिन सम्म समुन्द्रमा पौडिरहे । त्यही बेला स्वर्गबाट मनिमेखला चाँही त्यो दृश्य हेरेर महाजनकको वीर्यता देखेर आनन्दित भइन् । उनी समुन्द्रकी महारानी थिइन् । त्यो पौडिरहेको महाजनकलाई देखेर मनिमेखलाले सोचिन् कि यिनी सामान्य मानिस होइनन् । मनिमेखलाले महाजनकलाई तानी आमाले नवजात शिशुलाई जस्तै अंगालो हालिन् र अंगालोमा च्यापेर उड्दै मिथिलाको एउटा सुन्दर आँपको बगैचामा पुगिन् । बगैचाको बीचमा रहेको एउटा ढुंगाको दाहिने पट्टि उनलाई राखिन् र आफू देब्रेतिर बसिन् । महाजनकले कर्म र भक्ति दुवै गरे जसको कारण मनिमेखला आइन् र उनको उद्धार गरिन् ।

चित्र ३ मनिमेखलाले महाजनकलाई उद्धार गर्दै ।



ठीक त्यही बेला मृत्युशैयामा रहेका मिथिलाका राजाले उनका मन्त्रीहरुलाई भने कि जसले यो बलियो धनुको ताँधो तोड्न सक्छ, र आफ्नी छोरी शिभालीलाई खुशी बनाउन सक्छ, त्यसैलाई म राजा बनाउने घोषणा गर्दछु । राजगद्दीका लागि धेरै उम्मेदवारहरु थिए र सबैले आ-आफ्नो परिश्रमले प्रतिस्पर्धामा जित्ने र शिभाली लाई खुशी बनाउन खुबै प्रयत्न गरे तर जति उनलाई खुशी गराउन प्रयत्न गर्थे शिभाली चाँही तिनीहरुलाई हटाउन लाग्थिन् । एकजनाले पनि शिभालीले सोधेको प्रश्नको उत्तर दिन सकेनन् र कसैसंग पनि राजकीय धनुको ताँधो चढाउन सकेनन् ।

अन्त्यमा मन्त्रीहरुले उत्सव पाल्कीलाई (रथ) अगाडि बढाउन आदेश दिए । उनीहरुले सहरलाई सिंगार पटार गरेका थिए । चारजना भलादमीहरुलाई त्यो सुन्दर पाल्की बोक्न लगाए । पाल्कीको पछाडि बाजागाजाले सुसज्जित जुलुस थियो । मिथिलाको राजा हुन योग्य ब्यक्तिको खोजी गर्न त्यो पाल्की राजदरवारको पूर्व ढोकाबाट बाहिर निकाल्ने आदेश प्राप्त भयो । पाल्की महाजनक सुतिरहेको पार्कको स्थानमा पुग्यो । जहाँ महाजनक ढुंगामा सुतिरहेका थिए, त्यो ढुंगालाई परिक्रमा गरेर पाल्की बोक्ने मानिसले पाल्की विसाए् । मन्त्रीहरुले त्यो सुतिरहेको मानिसको निरीक्षण गरे र उनका खुट्टाहरुको अवलोकन गरे । त्यहीबेला मन्त्रीहरुले उनको खुट्टामा राजा हुने चिन्ह देखे । त्यो व्यक्तिमा राजा हुने मात्र होइन, चारै भुवनको वादशाह हुने चिन्ह र लक्षण थिए । मन्त्रीहरुले वाजागाजा बजाउने आदेश दिए । त्यो आवाज सुनेर महाजनक निन्द्राबाट बिउँझिए् । उठ्दा उनका वरिपरि धेरै मानिसले घेरेर राखेका थिए । राजाको लागि तयार गरेको सेतो छाता उनलाई ओढाइएको थियो । उनले सोधे "राजा कहाँ हुनुहुन्छ ?" मन्त्रीहरुले भने "उहाँको स्वर्गारोहण भयो ।" त्यसपछि उनले राजा हुन मन्जुर गरे ।

त्यसबेला शिभाली राजालाई पर्खेर कोठामा बसिरहेकी थिइन् तर नयाँ राजा उनलाई भेट्न गएनन् र उनको कुनै वास्ता नै गरेनन् । एकदिन जव महाजनक बगैचामा घुमिरहेका थिए उनले त्यो बेवास्ता खप्न सकिनन् र उनले राजालाई अंकमाल गर्दै आफ्ना जीउ राजा कहाँ अडेस लगाइन् ताकी राजाले उनलाई खुस गराउन सकुन् ।

राजाले रानीका चतुर सांसारिक प्रश्नहरुको उत्तर सजिलै दिए । उनले शिभालीका आध्यात्मिक प्रश्नहरुको पनि उत्तर दिए । उनले त्यो राजकीय धनुषको ताँदो पनि सजिलै तोड्न सके र तीनवटै परीक्षामा उतीर्ण भए । त्यसरी उनले राजा हुने सबै सर्तहरुको पालन गरे । उनले बुद्धिमानी तरिकाले सात हजार वर्षसम्म शासन गरे । रानी शिभालीले भविष्यको राजाको लागि एउटा छोरा जन्माइन् ।

एकदिन राजा उनका मन्त्रीसंग राज्यको भ्रमण गरिरहेका थिए । उनले दुईवटा आँपका रुखहरु देखे । एउटामा लटरम्म आँप फलेका थिए । आँप खान आउने मानिसहरुले त्यो रुखका हाँगा नुहाएर पातहरु लुछिएका थिए । कति हाँगाहरु भाँचीदिएका र लछारीदिएका थिए । अर्को रुख राम्रो हरियो थियो र हाँगा पातहरु सबै सग्ला थिए किनकि त्यो रुख चाहि बाँझो थियो, त्यहाँ फलहरु थिएनन् । राजा अगाडि थिए र ती दुई रुखको अवलोकन गर्दै थिए । रानी चाँही उनको पछि पछि हिड्दै थिइन् । राजाले भने "यी हाँगा र पातहरु रुखमा पुनः जोडिन सक्दैनन् र पुनः रुख हराभरा हुन सक्दैन ।" उनले विचार गरे, धन सम्पत्तिले केवल दुःख मात्र निम्त्याउँछ । त्यसैकारण उनले त्यो धनसम्पत्ति र राज्य छोडेर सन्यास धारण गर्ने निश्चय गरे । राजाले आफ्नो कपाल काट्न लगाए र गेरुवस्त्र (चीवर) धारण गरी सन्यासी बनेर राजदरबारबाट निस्किएर हिडे । रानी राजालाई अति माया गर्थिन्, उनी रोइकराई गरेर राजालाई पछ्याइरहेकी थिइन् । तर पनि राजा अगाडि बढ्दै गए । राजालाई असह्य भयो । घाँसको एउटा पात चुडेर भने "जसरी यो पात पुनः जोडिन सक्दैन त्यसरी नै तिमी र म पनि जोडिन सक्दैनौं ।" यो कुरा सुनेर रानी भुईमा मुर्छा परिन् । सुन्दरी सुसारेहरुले उनलाई समालिरहेका थिए । महाजनक अगाडि बढदै गए र जंगलमा हराए । जब रानी मुर्छाबाट विउझिइन् उनले महाजनकलाई कतै पनि देखिनन् । महाजनक पुनः कहिल्यै पनि मानिसको नजरमा देखा परेनन् । उनी हिमवत्खण्डको जंगल हुँदै अन्त्यमा ब्रह्मलोक पुगे । ती मुर्छाबाट विउझिएकी रानी फर्किएर मिथिलाको दरवारमा आइन् र आफ्नो छोराको राज्याभिषेक गर्न मन्जुर भइन् । राजकाजका सबै कामकाजहरु छोरालाई विस्तारै बुझाईकन उनीले पनि सन्यास धारण गरिन् । धेरै बर्षको सन्यासी जीवन पछि उनले पनि देवलोकमा (स्वर्ग) प्रवेश गरिन् ।

(मौलिक कथाः महाजनक जातक कथा नं. ५३९)

(स्रोतः http://www.buddha-images.com बाट साभार)

## यो कथाबाट प्राप्त शिक्षा

यो जातक पनि यसरी बनेको छ कि एउटै जातकबाट धेरै भन्दा धेरै शिक्षा प्रदान गरिएको छ । ती शिक्षाहरु मध्ये मैले बुझेका केही मुख्य मुख्य शिक्षा तल दिइएका छन् ।

- महाजनकमा वीर्य पारमिता थियो तसर्थ सात दिन सम्म निरन्तर पानीमा पौडिरहे । त्यो साहस देखेर समुन्द्रकी रानी जलकी देवी मनिमेखला आएर

उनलाई अंगालोमा हाली उडाएर बगैचामा पुऱ्याइन् । जोसँग धैर्यता र साहस छ, त्यसलाई समुद्रकी महारानी मनिमेखला आएर संकटबाट मुक्त गरिदिइन् । महाजनकले भक्ति मात्र गरेनन् कर्म पनि गरे । तसर्थ हामीले पनि वीर्य पारमिता प्राप्त गर्न साधना गर्नुपर्छ ।

- बुद्ध दर्शनमा दुईवटा आँपका रुखको दर्शन सर्वाधिक लोकप्रिय छ । एउटा आँपको रुखमा लटरम्म आँप फलेका छन् । मानिस आँप टिपेर खान रुखमा चढ्छन् । नजिक नजिकका हाँगाका आँप हातले टिपेर खान्छन् । टाढाका हाँगाका आँप हातले भेट्न सक्दैनन् । त्यसपछि त्यो हाँगालाई नुहाइएर आँप टिप्छन् । नुहाउने क्रममा आँपका हाँगा लछारिन्छ, पातहरु सोहोरिएर झर्छन् । रुख चढ्न नसक्नेहरुले आँपमा खुड्किला बनाउन रुखको फेदमा काट्दछन् । साना बच्चाहरु जो रुख चढ्न सक्दैनन् भुईबाटै ढुँगाले हानेर आँप झार्न लाग्छन् । आँपको रुखमा सयौं ढुँगाका चोटहरु लाग्छन् । अर्का एकथरी मानिस टाँगो लिएर आँपका हाँगा नुहाएर फल टिप्न लाग्दा आँपका धेरै हाँगाहरु कि त लछारिन्छन् कि त भाँचिन्छन् । आँपले मानिसलाई यति मीठो फल प्रदान गर्छ तर मानिसले आँपलाई दुःख बाहेक केही दिदैन । फलेको आँपको रुख धनी छ, त्यसैले उसले धेरै दुःखहरु भोग्नु पर्छ । अथवा जो व्यक्तिसँग धन सम्पत्ति छ, उसले धेरै दुःख भोग्नु पर्छ । धन सम्पत्तिले खुशी ल्याउदैन बरु दुःख र पीडा निम्त्याउँछ । जति पनि धनी व्यक्तिहरु छन् राजादेखि साहु महाजन सम्म उनीहरुले फलेको आँपको रुखले व्यहोरे जस्तै धेरै दुःख पीडा भोग्नु पर्छ । धन सम्पत्तिले सुख होइन दुःखहरु ल्याउँछन् । त्यसैले सन्यास पारमिता नै यो कथाको केन्द्रीय शिक्षा हो ।

- तपाईहरुमध्ये जजसले कर्म गरेर धेरै भन्दा धेरै सम्पत्ति जम्मा गर्नुहुन्छ त्यसले तपाइहरुलाई आनन्द दिदैन बरु दुःख मात्रै दिन्छ । फलेको आँपको रुख यसको राम्रो उदाहरण हो । अर्को रुख बाँझो छ, त्यसमा कुनै फल फलेको छैन । हरियो छ र हाँगा पात सबै सग्ला छन् । कसैले पनि त्यो रुखलाई दुःख दिएका छैनन् । रुख आनन्दपूर्वक बाँचिरहेको छ । कसैले पनि त्यो रुखमा नजरसम्म पनि लगाउँदैनन् । उसमा न त हाँगा लाछिने वा भाँचिने डर न त चोटपटक लाग्ने भय न त फल कसैलाई दिन पाएकोमा हर्ष न त कसैलाई दिन नपाएकोमा कुण्ठात नै छ । उ त बरु एकाग्रताका साथ ध्यानमा  मग्न छ । यसले आनन्द र शान्ति प्रदान गर्दछ । त्यसैले सन्यास पारमिता यो कथाको दाश्रो शिक्षा हो ।

- राज्यले राग र द्वेष बढाउँछ । राजा अरिथाजनकमा राज्यप्रति राग थियो र त्यही राजगद्दी बचाउन उनमा अरु त के आफ्नै भाई पोलाजनकप्रति द्वेष थियो । बच्चामा दुई दाजुभाइ बीचको प्रेम राज्यको मोहका कारण द्वेषमा परिवर्तन भयो । दुई दाजुभाइ बीच झैझगडा भयो । अन्त्यमा युद्ध नै भयो र राजा अरिथाजनकको ज्यान नै गयो । अरिथाजनकमा राग र द्वेष थियो । त्यही राग र द्वेषले उनलाई मृत्युको मुखमा धकेली दियो ।

- तेश्रो शिक्षा हो सत्यको जीत । पोलाजनकमा दाजु राजा हुनु भएकोमा न त द्वेषभाव थियो न त उनी राज्यको रागमा थिए । उनी निष्काम कर्म गर्दथे । त्यसैले उनी ज्यादै लोकप्रिय भए । त्यो लोकप्रियता प्रति दाजु अरिथाजनकको द्वेष/डाहा थियो र राज्य हडप्छ कि भन्ने शंका थियो । त्यसैले पोलाजनकलाई साँग्लाले बाँधेर राखे । उनी निर्दोष थिए । उनको पुकारलाई शक्रले सुन्नुभयो । त्यसपछि निर्दोष पोलाजनकलाई बाँधिएका साँग्ला आफसेआफ भुईमा झरे । उनी बन्धनमुक्त भए । पोलाजनकमा लोभ, मोह, द्वेष, आडम्बर केही थिएन । तसर्थ उनी मुक्त भए । त्यो भौतिक साँङ्लो मात्र नभएर लोभ, मोह, द्वेष र आडम्बरको साङ्लो पनि हो । त्यो साँङ्लोले पोलाजनकलाई बाँध्न सकेन । आफै साङ्लो भुईमा झऱ्यो ।

- उनीसङ्ग धैर्यता पनि थियो । हामी मध्ये जोसँग कर्म छ, वीर्यता र धैर्यता छ, साहस छ, त्यस्ता व्यक्ति संकटमा परे भने शक्रले मुक्त गरिदिनुहुन्छ ।

- महाजनकमा राजा हुनका लागि चाहिने आध्यात्मिक, बौद्धिक र भौतिक गुणहरु थिए । उनीसँग तीक्ष्ण बुद्धि थियो र उनी भौतिक रुपले बलवान पनि थिए । राजकुमारीका प्रश्नको उनले एक एक गरेर सजिलै उत्तर दिए । यो उनको बौद्धिकताको परीक्षा थियो । अर्को राजकीय धनुको ताँदो तोड्न सक्नु उनको भौतिक बलको परीक्षा थियो । अर्को आध्यात्मिक परीक्षा थियो जुन उनले मैत्रीपूर्ण तरीकाले उत्तर दिए । उनी बौद्धिक, आध्यात्मिक र भौतिक तीनवटै परीक्षामा सफल भएर राजा हुन योग्य भए । यो भन्दा पनि उनमा राज सिंहासनको कुनै लोभ लालचा थिएन न त सुन्दरी रानी प्रति कामवासना नै थियो । तसर्थ महाजनकले आक्रमण गरेर राज्य पाएका होइनन् बरु उनीसँग भएका बौद्धिक, भौतिक र आध्यात्मिक गुणको कारण राजा हुन सके ।

- धन सम्पत्ति प्रतिको असंग आध्यात्मिक गुण हो । राजा महाजनकमा राज्यप्रति मोह थिएन । जब उनले फलेको आँपको रुख देखे । उनले बुझिहाले, धन सम्पत्तिले सुख दिदैन बरु दुःख दिन्छ । उनी दृढ संकल्प गर्न वा सम्यक् संकल्प गर्न सक्थे त्यसैले उनले सन्यास लिने निर्णय गरे । उनमा राज्यप्रति राग थिएन । त्यसैले तुरुन्त राज सिंहासन छोड्न सके । तसर्थ दृढ संकल्प वा सम्यक् संकल्प पारमिता पनि हुन अनिवार्य छ ।

- यस जातक कथामा पाइने सबैभन्दा महत्वपूर्ण शिक्षा भनेको सन्यास नै अन्तिम गन्तव्य भन्ने नै हो । राजा महाजनकले राजाभन्दा पनि ठूलो कुरा सन्यास हो भन्ने ठाने त्यसैले उनी परिबर्जित भई हिमवत् खण्डमा ध्यान गरेर बसे र अन्त्यमा ब्रह्मलोक पुगे । उनकी रानीले पनि राज्यको मोह, पुत्रको मोह, पतिको (राजाको) मोह छोडेर राज्य सुम्पिएर परिवर्जित भएर ध्यान गर्न थालिन् । उनको त्यो ध्यानबाट देवताहरुले देवलोकको ढोका खोली दिए र उनी पनि देवलोकमा प्रवेश गरिन् ।

- प्राय सबै बुद्धकालीन जातकमा भाँचिएको हाँगा रुखमा जोड्न सकिदैन, झरेको पात पुन जोड्न सकिदैन । घाँसको पात एकचोटी चुडिएपछि पुनः जोड्न सकिदैन भन्ने सन्देशहरु छन् । सन्यासी भएपछि भिक्षु भएपछि पुन गृहस्थावस्थामा आउन सकिदैन । मरेपछि पुनः बचाउन सकिदैन । सुक्ष्म संसारमा गए पछि पुनः स्थूल वा भौतिक संसारमा आउन सकिदैन भन्ने सन्देश यो जातकबाट प्राप्त हुन्छ ।

अरु शिक्षा पाठक बर्गले खोज्नु हुनेछ ।

# सम जातक

प्राचीन समयमा वनारस निकै संमृद्ध र शक्तिशाली राज्य थियो । गंगा नदीको पारी पट्टिको किनारमा दुईवटा गाउँ थिए । ती दुई गाउँले बनारसका दुई राज्यलाई छुट्याउथे । त्यहाँ दुई साथी शिकारीहरु थिए । शिकारीहरुका दुई बच्चाहरुका बीच विवाहको कुरा छिनिएको थियो । यी दुई बच्चाहरु अरु बच्चा जस्ता थिएनन् । उनीहरुको छाला सुनौला रंग मिसिएर बनेको थियो । उनीहरु खराब व्यक्तिहरुको संसर्गमा रहे पनि र शिकारीबाट घेरिएर रहे पनि उनीहरुले कुनै पनि जीवलाई हानी गर्ने कार्य गर्दैनथे । उनीहरुको गन्तव्यस्थल नै फरक थियो । उनीहरुले पूर्वजन्मबाटै राम्रो संस्कार लिएर आएका थिए । उनीहरुको हृदय पवित्र थियो । उनीहरुले पूर्वजन्ममा एकजना आँखाका डाक्टरको सन्तानका रुपमा जन्म लिएका थिए । त्यो बेला एकजना धनी विरामीले डाक्टरको आँखा जाँचको शुल्क कम भएर उपचार खर्च इन्कार गरेर रिसाएका थिए । डाक्टरले विरामीलाई केही औषधी दिए । त्यसको कारण उनको एउटा आँखाको दृश्य गुमेको थियो । खराब काम ती बच्चाका बाआमाले गरेका थिए तर परिणाम चाही उनीहरुका बच्चाले भोग्नु पर्‍यो । त्यसैका कारण ती बच्चाहरुले शिकारीका कोखमा जन्म लिनु पर्‍यो । उनीहरुको बिहेको कुरा टुङ्गीए पनि उनीहरुले इन्द्रियजन्य सुखलाई त्याग गरेर सन्यास धारण गर्ने निश्चय गरे । उनीहरु दुवैले आफ्ना बाआमालाई विवाह नगरीदिन अनुरोध गरे तर पनि उनीहरुको केही लागेन, उनीहरुको इच्छा विपरीत विवाह भयो तर उनीहरु बीच दाजु बहिनीको रुपमा जीवन विताउने गोप्य सल्लाह भयो ।

केटालाई दुकुलाक र केटीलाई परिका भनेर बोलाइन्थ्यो । त्यो केटोलाई शिकार खेल्न इच्छा नै भएन र बाबु आमाबाट प्राप्त धन सम्पत्तिको भोग चलन गर्न र सुख प्राप्त गर्न मन नै लागेन । उनलाई जंगलमा गएर आश्रममा बस्न अनुमति दिइयो । जहाँ उनीहरुले ध्यान र पवित्र जीवन यापन गर्नु पर्थ्यो । त्यहाँ शक्र( इन्द्र)ले उनलाई सहयोग पुर्‍याउनु भएको थियो । उनलाई थाहा थियो कि पूर्वजन्ममा भएका उनका नराम्रा कुराहरु धोएर मन सफा गरिएको थिएन । शक्रले थाहा पाए कि उनको जीवनमा कुनै दुर्भाग्य आइलागेको थियो । शक्रले

उनीहरुलाई भने कि उनीहरुले दुख परेका बेला हेरचाहका लागि एउटा छोरा जन्माउनु पर्छ । उनीहरुले भने “कदापि हुदैन, यो असम्भव कुरा ।” यो सन्यासतिरको बाटो होइन । अन्त्यमा शक्रले भने कि यदि ठीक समयमा दुकुलाकले एउटा औंला मात्र पनि महिला भित्र राख्यो भने पवित्र गर्भ रहन सक्छ । त्यसै प्रकारको कर्मबाट बोधिसत्वको पुनर्जन्म भयो तर त्यो मानवीय संसार थिएन । सन्यासीहरु जंगलमा ऐंसेलु, जामुनो र ओखरहरु संकलन गर्न आउदा त्यो बालकलाई हेरेर जान्थे । यी सन्यासीहरुले त्यो बालकलाई प्रेमपूर्वक व्यवहार गर्दथे तिनै बालकको नाम थियो “बोधिसत्व सम ।” उनको पवित्र जीवन हिमवत् खण्डमा नै शुरु भयो । जुन स्थान देवताहरुका राजा शक्रको दरवारको फेदमा थियो । तल बोधिसत्व बसेको स्थानका बाटाहरु पहाडको टुप्पोमा रहेको शक्रको दरवारसम्म पुग्दथे । त्यहाँका मानिसहरुलाई त्यो अप्ठ्यारो उकालो बाटो खतरापूर्ण लाग्दथ्यो । भविष्यवाणी गरे अनुसार जब सम १६ वर्ष पुगेका थिए, उनीहरुका बाआमालाई दुर्भाग्य आइपर्‍यो । जब उनीहरु जंगलका फलफूल जम्मा गरेर घर फर्कदै थिए एक्कासी वर्षा भयो । उनीहरु एउटा रुखको फेदमा ओत लागे । जहाँ उनीहरु ओत लागेर बसेका थिए त्यही रुखको फेदमा नै विषालु सर्प पनि बसेको रहेछ । जब उनीहरुबाट पसिना र पानी त्यो सर्प माथि खस्यो, सर्प ज्यादै रिसायो । उसले रिसले फ्वा गर्दै विष उनीहरुको आँखामा फ्याक्यो र उनीहरु तुरुन्तै अन्धा भए । समले आफ्‌ना बा आमालाई बढी माया गर्दथे, उनीँहरुको राम्रो हेरचाह गर्दथे । समले बाँसका टुप्पाहरुमा डोरीले बाँध्दै गए र दुईवटा बाँसका टोकरी तयार गरी त्यही टोकरीमा आफ्‌ना बाआमालाइ राखी भारमा बोकेर विस्तारै त्यो पहाडबाट तल ल्याए । उनले किथ्रा फट्याङ्ग्रा बढारेर जमिन सफा गरे, पातपतिगरलाई सफा गरेर विछ्यौना बनाए र खाने कुराहरु बटुले । उनीहरुलाई फलफूको रस खुवाए । उनीहरुको लागि गाग्रोमा पानी ल्याईदिए । उनीहरुलाई नुहाई दिए र आरामदायी विछ्यौनामा राखे । समलाई हरिणले यति मन पराउथे कि काँतर हरिण पनि समलाई देखेर भाग्दैनथे बरु ती हरिणहरु पनि साथी लागेर उनी सँग सँगै खेल्न जान्थे । खरायोहरु पनि उनीसंग खेल्न आउथे । पुतली पनि उनीसंगै खेल्थे र उनको हातमा आएर बस्थे । उनी ती वन्यजन्तु र किरा फट्याङ्गलाई धेरै माया गर्दथे ।

उनी घैलामा पानी लिन जाँदा हरिण पनि संगै जान्थे । उनले एक वेलुका हरिणको पिठ्यौमा पानीको घैला राखेर ल्याउदै थिए । त्यहीबेला बनारसका राजा पिलियाका शिकार खेल्न जंगलमा गएका थिए । त्यो देखेर उनी छक्क परे । उनी एक छिन रोकिएर सम उभिइरहेको स्थानमा हेरे । राजालाई जंगलमा त्यो हरिण र सम वीचको प्रेमको दृश्य देखेर स्वर्गकै प्राणी देखे जस्तो लाग्यो । उनलाई कौतुहलता

लाग्यो । उनी त्यो दृश्य दरवारमा लगेर उनका मन्त्रीहरुलाई पुरस्कारको रुपमा दिन चाहन्थे । राजाले ताँदोमा  विष भएको तीर राखे, धनुको ताँदो तानेर समलाई ताकेर हाने । सम जहीको तही ढले । हरिण डराएर भाग्दा पानीको घैला छचल्केर भुँइमा खसी फुट्यो र पानी सबै पोखियो । सम विस्तारै बालुवाको चिहानमा डुब्नु भयो । उनको ओठबाट रगत बगेर बाहिर आयो । उनले कराएर भन्नु भयो, “त्यो को हो जसले मलाई मार्‍यो ? यस्तो कार्यबाट उसले के प्राप्त गर्‍यो ?”

समले मृत्युको आरोप लगाउलान् भनेर राजाले सोचेका थिए तर समका शब्द सुनेर उनी छक्क परे । राजाले बहाना बनाई रहेका थिए, उनले भने “समलाई नभएर मैले हरिणलाई ताकेर वाण हानेको हुँ ।” तर समले झुटो बोलेको कुरा थाहा पाइहाले र राजा पिलियकाले सत्य कुरा भन्नु नै पर्‍यो । तर पनि त्यो बच्चा (सम) ले कुनै दुस्मनी साँधेन । बरु आफ्ना बाबुआमाका बारेमा दुख प्रकट गरे । उनीहरुलाई अब कसले पाल्छ ? कसले उनीहरुलाई प्रतिदिन पानी भरेर ल्याइदिन्छ ? कसले उनीहरुलाई नुहाइदिन्छ ? त्यसपछि समले चेतना गुमाउनु भयो । सम मरिसके भनेर पिलियकाले उनलाई श्रद्धान्जली दिए ।

समकी पूर्वजन्मकी आमा भगवतीकी छोरी थिइन र त्यो उनको १७ औं अवतार थियो । आफ्नो छोराको त्यो हाल देखेर उनी दुखी भइन् । उनले यस्तो दुख परेको बेला केही नगरेमा छोरा र उनका बाआमा मर्नेछन् भन्ने सोचिन् । उनले समलाई उद्धार गर्नुपर्छ भन्ने निश्चय गरिन् । उनकी आमाले अदृश्य रुपमा आएर रुखबाट भनिन् “समका बाआमालाई कसले हेरचाह गर्छ ? ए राजा, तिमीले ज्यादै दुखदायी काम गर्‍यौं । तिमी गएर ती अन्धा बाबु आमाको सेवा गर र तिम्रो कुकर्मलाई पखाल ।” उनले भनिन्, “तिमीले परोपकारी काम गर्‍यौ भने स्वर्ग प्राप्त गर्नेछौं ।”

भगवतीका यी शब्दहरु सुनेर पिलियका राजाले एउटा आश्रम बनाए । राजा पिलियकाले समको मृत्यु भएको खबर उनका बाआमालाई सुनाए । त्यो सुनेर उनका बाआमा दुख र पीडाको सागरमा डुब्न गए । यस्तो दुखमा परे कि उनीहरुले धेरै पूर्वजन्मका कुराहरु सम्झिएर रोए । त्यही समयमा पूर्वजन्मका सबै पापहरु समाप्त भए । तर आफूहरु पापबाट मुक्त भै पवित्र भएका कुरा उनीहरुलाई थाहा थिएन । त्यसपछि राजाले उनीहरुलाई आफ्ना छोरा भएको स्थानमा लगे । राजाले अप्ठ्यारो मान्दै त्यो घटना सुनाए । छोराको छेऊमै पुगेर ती दुवै अन्धा बाआमा घुँडा  टेकेर रुन लागे । त्यसबाट उनीहरुका पूर्वजन्मका सबै पापहरु आफ्नै आँसुले धोएर सफा भए र आफ्ना छोरालाई जीवित गराउन सक्षम भए । जब उनकी आमाले प्रार्थना गरिन्, समको एकातिरको शरीर विस्तारै हल्लिएको जस्तो देखियो । जव उनका बा आमाले पवित्र शब्दहरु निकाले तव

उनको अर्कोतिरको शरीर पनि विस्तारै चल्न थाल्यो । भगवती जसले यो सम्पूर्ण दृश्यहरु आफू अदृश्य भै हेरिरहेकी थिइन । उनले दर्शन दिइन । उनले समको भाग्य निर्माण गरि दिइन् । हावा सरसर बहिरहेको थियो । समलाई हेरचाह गर्ने सुसारेहरु पनि उनी पुनः जीवित भएको आश्चर्यलाग्दो समय  पर्खेर बसीरहेका थिए ।

रातभरी उनीहरु समको छेऊमै बसीरहे । संसार छाडेर स्वर्ग पुगेकाहरु पनि समको पुनर्जीवन माग्नका लागि झुकेर प्रार्थना गरिरहेका थिए । अन्त्यमा सम छटपटाए र उनी विस्तारै उठे, उनी घाइते अवस्थाबाट पूर्ण रुपमा निको भए । समका बाआमा उनी पुनः जीवित भएको दृश्य आफ्नै आँखाले देखिरहेका थिए । उनीहरुको लामो दुख कष्टका कारण उनीहरुको नेत्रहीन आँखामा ज्योति प्राप्त भयो । राजा पिलियाक त्यो पाप नष्ट गरेर उनीहरुको आँखामा ज्योति ल्याउनका लागि एउटा पात्र बनेर आएका थिए । यसले उनलाई पवित्र र शान्त संसारतिर ल्यायो । राजा पिलियका यी सबै कुरा देखेर आश्चर्यचकित भए । उनी अति राम्रो कुराका साक्षी थिए । राजालाई असल पात्र भएर सेवा गरेको कुरा उनीलाई थाहा थिएन । उनले त्यो दुखदायी कर्म नगरेको भए समका बाआमाको पाप पखालिने थिएन ।

(मौलिक कथाः सम जातक कथा नं. ५४०)

(स्रोतः http://www.buddha-images.com साभार)

## यो कथाबाट प्राप्त शिक्षा

- यो जातकको केन्द्रीय शिक्षा भनेको दया र मैत्री पारमिता प्राप्त गर्नु नै हो । सममा धेरै करुणा र मैत्री थियो, त्यसैकारण उनीसंग हरिण, पुतली र चराचुरुङ्गी खेल्न आउथे । जंगली जनावरहरु पनि उनीसंग खेल्थे । हरिणले उनलाई पानी लिन सघाउथे । यी समका अनुपम उदाहरणहरु हुन् । सम दयावान थिए त्यसैले उनले आफूलाई मार्ने राजा प्रति पनि मैत्रीपूर्ण व्यवहार गरे । सबैले दया र मैत्री पारमिता संकलन गर्नुपर्छ ।

- समलाई विषालु तीर लागे पछि उनकी सात जन्म अघि कि आमा आएर राजा पिलियाखलाई पापबाट मुक्त हुनका लागि समका नेत्रहीन बा आमा लाई मैत्री प्रदान गर्नुहुन्छ । पिलियाकले समका नेत्रहीन बाआमाको सेवा गर्नुभयो ।

समले पनि आफ्ना बाआमाको सेवा गर्नुभयो । हरिणले पनि समका बृद्ध बाआमाको सेवा गरे । त्यसैले यो कथाको शिक्षा भनेको "सेवा नै धर्म हो । "

- राजा पिलियाकको तीरबाट सम घायल नहुनुभएको भए न त समका बा आमाको गुमेको आँखामा ज्योती आउथ्यो न त समले धर्मदेशना नै दिन पाउँथे । त्यो तीरले समका बाआमाको पाप पखालियो ।
- नराम्रा कर्मकै कारण सर्पको बिष समका बा आमाको आँखामा परेर अन्धा भए र समका राम्रा कर्मका कारण सम मृत्युबाट फर्किनुभयो, समका बाआमाले गुमेको ज्योती प्राप्त गर्नुभयो र आफ्नो छोरालाई जीवित नै हेर्न पाउनुभयो । दया र मैत्रीबाट सबैको मंगल भयो ।
- आफ्नो छोरालाई बिषालु तीर हान्ने राजालाई न त दुकलक न परीकाले अभद्र व्यवहार नै गरे । उनीहरु दुबैले क्रोधलाई मैत्रीमा रुपान्तरण गर्नुभयो ।

अरु शिक्षा पाठक बर्गले खोज्नु हुनेछ ।

# निमी जातक

पूर्वप्राचीन कालमा मिथिला राज्यमा महादेव नाम गरेका एउटा राजा थिए । उनको पहिलो केश फुल्नासाथ उनले ठाकुरलाई त्यो फूलेको कपाल उखेल्न लगाए । ठाकुरले पनि त्यो फुलेको कपाल उखलेर राजाको हातमा राखी दिए । ती ठाकुरले फुलेको कपाल किन उखेल्न लगाएको भनी राजालाई सोधे । राजाले भन्नु भयो यो फुलेको कपाल स्वर्गको निम्तो हो । "चौरासी हजार वर्षसम्म मैले यो राज्यमा राज्य गरेँ । यो राजगद्दी अब मैले परित्याग गर्नु पर्छ र अरु चौरासी हजार वर्षसम्म सन्यास लिई बाँच्नु पर्छ ।" राजाले भने । राजाले आफ्ना छोरालाई राजगद्दीमा बसाई भने कि तिमीले पनि आफ्नो पहिलो केश फुल्नासाथ त्यसैगरी तिम्रो छोरालाई राजगद्दीमा बसाली आफू सन्यासी जीवन बिताउनू ।" त्यस्तै तरिकाले यो राज्य हस्तान्तरण गर्दै जानू । नभन्दै त्यस्तै प्रकारले सबै राजाहरुले पहिलो पटक कपाल फुल्ने वित्तिकै सन्यास धारण गर्दै राजगद्दी परित्याग गर्दै गए । मृत्युपछि उनीहरु सबैले ब्रह्मलोकमा प्रवेश गरे । राजा महादेवले चौरासी वर्षमा दुई वर्ष कम आनन्दपूर्वक ब्रह्मलोकमा विताए । उनका उत्तराधिकारीहरुले पनि त्यही अनुपम उदाहरणलाई पालन गर्दै गए । उनीहरु मध्ये कसैले निर्वाण पाउछन् कि भन्ने उनलाई कौतुहलता थियो । उनी र उनका उत्तराधिकारीहरु मध्ये कसैले पनि पुनः जन्मनु नपर्ने अथवा जीवनबाट मुक्ति वा निर्वाण प्राप्त गर्न सकेनन् । एवं प्रकारले महादेव र उनका सबै उत्तराधिकारीहरुले पुनर्जन्म लिई राजकाज गर्दै गरे । एउटा छोरा जन्मायो कपाल फूले पछि त्यो छोरालाई राज्य सुम्पिई पुनः सन्यासी जीवन विताएका महादेवले ब्रह्मलोकबाट हेरीरहेका हुन्थे ।

जब महादेव बोधिसत्वको रुपमा पुनः ब्रह्मलोकबाट मृत्युलोकमा जन्म लिएर आउनुभयो त्यहीबेला ज्योतिषीहरुले उनका चिन्हहरु हेरेर भने कि यो बोधिसत्व उनै पहिलेका राजा महादेव नै हुन् । उनीले पुनर्जन्म लिएका हुन् । रथको चक्काको छेउमा जन्मेकाले उनको नाम निमीकुमार रहन गयो । परम्परा अनुसार जब उनका बुबाको कपाल फुल्यो त्यहीबेला राजकुमार निमी राजा भए ।

राजा निमी कुनै गल्ती गर्दैनथे । दान दिन्थे, गरिबको हेरचाह गर्थे र गरिब जनतालाई आफ्नै सन्तान जस्तो व्यवहार गर्दथे । उनी कहिले सन्यास लिन पाइन्छ भनेर कुरेर बसिरहेका थिए । उनको कर्म देखेर धेरै मानिसहरुमा उनैको प्रभाव पऱ्यो र उनका जनता पनि देवलोक (शक्रको लोक) जान सत्कर्महरु गर्दथे ।

निमी असल र लोकप्रिय राजा भै सकेका थिए, तैपनि एउटा प्रश्नको उत्तर दिन नसकेर उनी असन्तुष्ट थिए । सन्यास जीवन राम्रो कि कर्म गरी विश्वासपूर्वक दान दिनु राम्रो ? सत्य जान्ने इच्छा यति कडा थियो कि शक्रको राजगद्दी नै उनको सत्य बुझ्ने इच्छाले तात्न लाग्यो । शक्रले निमीको दरवारमा देवतालाई नै पठाउनु पऱ्यो । निमीको दरबारमा जब शक्र अदृश्य रुपमा प्रवेश गर्नु भयो । उनको दरवार नै प्रकाशको कारण धपधप गरी बल्न लाग्यो । उनले भने "राजा निमी म तिम्रो प्रश्नको जवाफ दिन आएको छु । सुन ! सन्यासी धेरै आध्यात्मिक रुपले सुन्दर जीवन हो । जसले ध्यान गर्छन् उनीहरु शक्रको लोक (देवलोक) भन्दा पनि माथि निर्वाण तहसम्म पुग्न सक्छन् । हामी देवताहरु त शक्रको लोक मात्र पुग्छौं । यो लोकमा हामीमा चेतना र अनुभूति हुन्छ । त्यहाँ बुद्धि तत्व रहन्छ तर त्यो भन्दा माथि चाही निर्वाण प्राप्त हुन्छ । शक्रलोक (देवलोक) र ब्रह्मलोक प्राप्त नभए पनि जाती, वर्ण, लिंग आदि नहेरी दान दिनाले मानिसलाई धेरै फाइदा हुन्छ । तिमी जस्तो राजालाई धेरै फाइदा पुग्छ ।" यति शब्दहरु भनेर शक्र त्यहाँबाट बाहिर निस्किए ।

जब शक्र (देवेन्द्र) उनको तभतिम्स स्वर्ग पुगे, देवताहरुलाई राजा निमीको विषयमा धेरै लामो वर्णन गरे । तिनै देवता मध्ये केही उनै निमी राजाका प्रजा पनि थिए । उनीहरुले शक्रलाई भने कि उनलाई तुरुन्त यहाँ ल्याउनु पर्छ । कुनै समयमा उनीहरुले राजा निमीको धर्मदेशना सुनेका थिए । त्यही धर्मदेशना सुनेरै उनीहरुले देवत्व प्राप्त गरेका थिए । राजालाई देवलोकमा ल्याउन उनीहरुले धेरै कोशिस गरेपछि शक्र उनलाई ल्याउन राजी भए ।

त्यसपछि शक्रले रथ पृथ्वीमा पठाउन तयार गरे । राजाले रथका सारथी मतालीलाई करोडौं माइलको यात्रा पूरा गरी पृथ्वीमा पुगी राजा निमीलाई लिएर देवताहरुको अगाडि उपस्थित गराउने आदेश दिए ।

त्यो दिन पवित्र पूर्णिमा पर्वको दिन थियो,। धेरै दिनको पृथ्वीतिरको यात्रा पछि त्यो रथ विदेह राजाको राज्य मिथिला पुग्दा मध्य रात भैसकेको थियो तर पनि त्यहाँका नागरिकहरु पूर्णिमा पर्व भव्य रुपमा मनाईरहेका थिए । आकाशमा प्रज्वालित रथ नागरिकहरुको आफ्नै टाउकामा झर्ला जसरी झरिरहेको थियो । उनीहरुले दैविक रुपमा केही हुन गइरहेको छ भन्ने महशुस गरे । त्यो अर्को चन्द्रमा जस्तै थियो ।

त्यो पवित्र पर्वको उपलक्ष्यमा प्राप्त भएको चम्किलो प्रकाश जस्तै थियो । जब त्यहाँका प्रजाहरुले नियालेर हेरे त्यो त रथ रहेछ । उनीहरुले अनुमान गरे कि यो शक्रको वाहन हुनुपर्छ र यो रथ हाम्रा राजा कहाँ आएको हुनुपर्छ । शक्रका आँखाले हेर्दा राजा निमीका पुण्य कर्महरु देख्नु भयो त्यसैले उनलाई भेट्न आएका हुनुपर्छ ।

सारथी मातलीले रथलाई राजाको पूर्वी ढोकातर्फ लगे जहाँ राजा पूर्ण चन्द्रमाको रातमा ध्यान गरेर बसिरहेका थिए । जब चन्द्रमाले पूर्ण रुप लिदै थियो, ठीक त्यही बेला मातलीले भन्नु भयो "राजा निमी लगायत देवलोकका सबै देवताहरु तपाई सँग ज्यादै प्रसंग र खुशी छन् र तपाईलाई स्वागत गर्न उत्सुक छन् ।" हजुरलाई ल्याउनकै लागि शक्रले मलाई यहाँ पठाउनु भएको हो । निमीले उनको निम्तालाई सहर्ष स्वीकार गर्नुभयो । तर रथमा चढ्नु अगाडी उनले आफ्ना प्रजाहरुसंग विदा माग्दै भन्नुभयो "म लामो समयसम्म आफ्ना नागरिकहरुबाट टाढा रहेर बस्न सक्दिन । केही दिन पछि फर्केर आउछु ।" जब उनी आकाशमार्गबाट माथि उडेर जादै हुनुहुन्थ्यो । सारथी मातलीले भन्नुभयो "तपाई कुन मार्गबाट जान चाहनु हुन्छ, पहिला स्वर्ग जाने कि नर्कको बाटो जाने । जुन बाटो गए पनि अन्तमा स्वर्ग त देख्न पाइन्छ नै ।" जानी बुझीकनै उनले नर्कको बाटो लैजान मातलीलाई अनुरोध गर्नु भयो । "अपराधीहरु नर्कमा कसरी आफ्नो समय व्यतित गरिरहेका छन् ? मलाई त्यही बाटो लैजाऊ ।"

मातलीले रथलाई अध्याँरा धेरै नर्क भएको बाटोतिर लैजानु भयो । सबैभन्दा पहिला उनले आगो बलिरहेको वैतरणी  नदी देखे जहाँ हाडमासु सँगसँगै नदी बगिरहेको थियो । त्यहाँ मरेको सिनोको दुर्गन्ध आइरहेको थियो । त्यो नदीभरी पापीहरु वगिरहेका थिए । त्यस्तो विभत्स र दुखपूर्ण दृश्यहरु देखेर राजा निमीले भन्नु भयो "ती मानिसहरुले के काम गरेर त्यस्तो आगो बलीरहेको नदीमा हालीदिएको होलान् ।" निमी त्यो देखेर रुन लागे । मातलीले भन्नुभयो कि उनीहरुले क्रुर र पाप कर्महरु गरे र त्यसैको परिणाम भोगि रहेकाछन् ।

मातलीले रथ अर्को नर्कतिर लैजादा लैजादै गर्दा वैतरर्णी नदी देखिन छाड्यो तर अर्को नर्क देखियो जहाँ काला कुकुरहरु, कागहरु र गिद्धहरुले ती स्वार्थी मानिसको शरीर चिथोरेर च्यातीच्याती खाइरहेका थिए । ती व्यक्तिहरुले पहिलेका जन्ममा कुनै सन्यासी, भिक्षु र ब्राह्मणलाई दान नगरी सम्पत्तिको भोग चलन गरेका थिए । त्यो देखेर राजा निमी स्तब्ध भए र अर्को नर्क हेर्न इच्छा गरे जहाँ तातो कोइला बलेको आगोमा राखेर मानिसहरुलाई सेकुवा बनाए जसरी नै निर्मम यातना दिइरहेका थिए । त्यहाँ घुस खाई गलत न्याय दिने व्यक्तिहरु त्यो अग्नी कुण्डमाथि

चिच्याउदै चढी उम्केर भाग्न खोज्दथे । त्यो नर्कको अर्को दृश्यमा चाही पशु हिँसा गर्ने र पशु वध गर्ने व्यक्तिहरुलाई ठुलो पानी उमाल्ने भाडो (ठुलो कितली) भित्र रहेको तातो फलामे रडमा परेर जीउदै पानीमा पाकीरहेका थिए । निमी त्यो देखेर आँत्तिए र ज्यादै डराए ।

तर मातलीमा भने कुनै परिवर्तन आएन । उनी सबै नर्कहरु देखाउन चाहन्थे । अर्को नर्कमा चाही कम तौल गरेर र कमसल अन्नलाई असल अन्नसंग मिसाएर बेच्नेलाई राखिएको थियो । तिनीहरुलाई चाही पिसाब फेर्ने ठाउँमा आगो लगाई दिन्थे । जसले चोरी गरेको छ र ठगी गरेको छ, जसले पशुलाई क्रुरतापूर्वक वध गरेको छ, तिनीहरुलाई जीउँदै काँकाका लामा लामा चिरा झै चिरेर चीरा चीरा बनाइन्थ्यो । त्यहाँबाट टाढा रहेको नर्कमा चाँही अरुलाई पीडा दिने व्यक्तिहरुलाई फोहोर मैला खान बाध्य बनाइन्थ्यो । आमाबाबुको हत्या गर्ने व्यक्तिलाई नदीमा बगीरहेको रगत र पीप खान लगाइन्थ्यो । त्यहाँबाट टाढा रहेको अर्को नर्कमा व्यक्तिलाई क्रुरतापूर्वक टुक्रा टुक्रा बनाइन्थ्यो । महिलाहरु जो व्यभिचारी थिए तिनीहरु रोएर चिच्याई रहेका थिए । उनीहरुलाई पाता कसेर राखिएको थियो । उनीहरुको तलको आधा शरीर जमिनमुनि गाडेर राखिएको थियो । माथिको आधा शरीरमा चाही आगोको ज्वाला बलिरहेको थियो । अरु केही व्यक्तिहरु चाही नर्कको झ्यालबाट भाग्न नर्कको पर्खालमा चढन खोज्दै गर्थे तर चढन नसकेर पुनः तल खस्दै थिए । तिनीहरु मध्ये कोही पनि झ्यालबाट बाहिर निस्कन सकेनन् । निमी ती दृष्य देखेर ज्यादै दुखी हुनुभयो । उनीहरुको कुकर्मको कारणले नै यो गति भोग्नु पऱ्यो भन्ने उनलाई बोध भयो ।

उता स्वर्गमा शक्रका देवताहरु चाही निमी आउन किन ढिला गर्नुभयो भनेर पीर मानिरहेका थिए । "मातलीले सबै नर्कको भ्रमण गराएर निमीको समयलाई बरबाद गरिरहेका छन् ।" उनीहरुले शक्रलाई कराउन थाले । वहाँलाई छिट्टो लिएर आउने आदेश दिनुहोस् । शक्रले आफ्ना दुतलाई द्रुत गतिमा समाचार दिन नर्कमा पठाउनु भयो । ती दुतले नर्कमा पुगेर भने कि "मातली सबै नर्कहरुको एकैचोटी अवलोकन गराउनु होस् र उनको भ्रमण छोट्याउनुहोस् र छोटो बाटोबाट सिधै स्वर्ग लैजानुहोस् । स्वर्गका देवताहरु निमीको समय बरबाद भएको थाहा पाएर रिसाएका छन् ।" त्यसपछि मातलीले सबै नर्कका ढोकाहरु एकैचोटी खोलीदिनुभयो । ती नर्कका सबै ढोकाबाट देखिएका डरलाग्दा दृश्यका कारण आत्तिएका निमीलाई छोटोबाटोबाट सिधै स्वर्गतिर लगे । त्यो रथ द्रुत गतिमा उड्यो, बाटामा उनले सुन्दर कुँदिएका ढुँगाका पर्खाल देखे । सुन्दर बगैचाले हावामा अत्तर पठाई रहेका थिए । मीठो अत्तरको बास्ना आइरहेको थियो । हिरा मोती जस्तै टल्किने दरवारबाट मगमग बास्ना आइरहेको थियो, मधुरो स्वरमा आध्यात्मिक धुन

बजिरहेको थियो । चरा चुरुङ्गीहरु मीठो गीत गाइरहेका थिए । निमी जति जति नयाँ ठाउँ हेर्दै जान्थे त्यो नयाँ ठाउँ उनलाई झन सुन्दर लाग्थे र हेरेका सबै ठाउँको विषयमा मातलीलाई सोध्दथे । यी दश्ष्यहरुको मृत्युलोकमा के प्रयोजन हुन सक्छ ? कस्ता व्यक्तिले यस्तो स्वर्गीय सुन्दर राज्यमा बस्न पाउँछन् ? मातलीले भन्नुभयो "जसले आफ्नो जीवनमा प्रत्येक सन्यास आश्रममा ७ जना सन्यासी बस्ने प्रबन्ध सहितको सातवटा आश्रम बनाई दान दिन्छ उसले  सात चोक भएको (एक चोकको दरवार ९० एकडमा फैलिएको) अति भव्य दरवारमा बस्न पाउँछ ।" जुन महिलाले आफ्ना सबै दिन पवित्रका साथ बिताउछिन् ती महिलाले १०० वटा खम्बा भएको विशाल दरबार पाउँछिन्, जहाँ हजारौ घण्टीहरु, ब्यानरहरु, फूलहरु सजाएर र राखिएका छन् । रमणीय तलाउ पनि छन्, त्यहाँ धेरै पार्क र कुवाहरु पनि छन् । त्यहाँ ती महिलाले बस्न पाउछिन् । मातलीले वर्णन गर्नु हुन्छ यो अर्को हिरा मोती जडित यस दरबारमा चाही स्वर्गीय संगीतकारहरु जो आफ्नो बाजा बजाउँदै गाइरहेका हुन्छन् । यहाँ चाही धेरै पवित्र व्यक्तिलाई संगीतको धुनमा खाना खुवाइन्छ ।

बाटाका त्यस्ता वार्तालापबाट समय ढीला भइरहेको थियो । देवताहरुले निमीको समयलाई बरबाद नगरी छिट्टै लिएर आउनका लागि पुन: अर्को समाचारदाता पठाउन आग्रह गरे । सल्लाह अनुसार शक्रले पनि तुरुन्त अर्को समाचारदाता पठाउनु भयो । "छिटै आउनु होला ढीला नगर्नुहोस् ।" समाचारदाताले भन्नुभयो । निमीलाई सबै स्वर्गहरु एकैचोटी देखाउनुहोस् । मातलीले सबै स्वर्गका ढोकाहरु हुदै रथ अगाडि बढाउनु भयो । रथ आकाशतिर उड्यो सुमेरु पर्वतलाई घेरेर बसेका सात पहाडहरु रथले छिचोल्यो । बितेका महान प्रजाप्रेमी राजा रहेका स्वर्गहरु देख्नु भयो त्यसपछि टाढा शक्रको एउटा ठूलो शालिक देख्नु भयो । त्यो सालिकको बाहिर चारैतिर पर्खालले घेरएको  थियो त्यो स्वर्गको मुख्य ढोकामा चित्रकुट बसेका थिए । मातलीले रथलाई एक हजार माइल दौडिए पछि रोक्नु भयो । उनले रथलाई एक छेऊमा राखेर एउटा ठूलो दरवारै दरवार भएको शहर देखाएर भन्नु भयो, यो तभतिम्स दरवार हो यहाँ ३३ दरबारहरु छन् यहाँ देवताहरु छलफलका लागि भेला हुन्छन् । त्यहाँ आठ पाटा भएको हिरामोतीले जडित खम्बाहरु थिए । त्यहाँ सबै ३३ वटा देवताहरुका मालिक शक्र थिए । उनले मानिस र देवतालाई समान व्यवहार गर्दथे । उनले नै दरवारमा प्रवेश गर्न अनुमति दिन्थे । कतिलाई चाही नर्कमा पठाउथे । यो ज्यादै सुन्दर र सम्वेदनशील ठाउँ हो । "ए राजा तिमीले यो हेर्न पाउनु हुनेछ" मातलीले भन्नु भयो ।

जब निमी त्यहा पुगे, तव देवताहरु हातमा फूलका गुच्छा  र अत्तर लिएर उनको स्वागत गर्न  ढोकामा खडा हुन दौडिए । शक्रले आफ्नो राजगद्दीमा बस्न र

स्वर्गको आनन्द लिन निमीलाई अनुरोध गर्नुभयो । निमीले शक्रलाई भने म स्वर्गको आनन्द लिन आएको होइन केबल शास्त्रार्थ गर्न र धर्मदेशना दिन मात्र आएको हुँ । निमी सात दिन सम्म शास्त्रार्थ गरेर स्वर्गमा बसे । उनले स्वर्गमा देवताहरुलाई धर्मदेशना दिए । अन्त्यमा उनले भने "म स्वर्गमा बस्दिन । उनले भने की मेरा जनताले मेरो बाटो हेरीरहेका छन्, मलाई खोजिरहेका छन् । उनले भने "अब म जान्छु ।"

चित्र ४ राजा निमीद्वारा स्वर्गमा धर्मदेशना दिइएको ।



मातलीलाई रथ तयार गर्ने आदेश भयो । राजा निमीलाई सबै देवताहरुले प्रेमपूर्वक विदाई गरे । उनी पुनः आफ्नै राज्य मिथिलामा फर्किए । जब रथ शहरवासीहरुले देखे उनीहरुले माथि आकाशमा आश्चर्यपूर्वक हेरे । उनीहरुले रथमा बसेका आफ्ना राजालाई चिनिहाले । उनीहरु खुशीले चिच्याईरहेका थिए । मातलीले रथलाई शहरतिर बढाए । दरवारको पूर्वी झ्यालको छेऊमा रथ रोके र निमीलाई प्रणाम गरी पुनः स्वर्गको बाटो लागे ।

यता, निमीले स्वर्गमा देखेका सबै दृश्यहरुको एक/एक गरेर जनतालाई बताए । उनले नर्कमा देखेका क्रुर र डरलाग्दा दृश्यहरु पनि बताए । उनले जनतालाई भने

“राम्रो काम गर । परोपकारी  बन र हृदयलाई शुद्ध बनाऊ ।” त्यसो गऱ्यौ भने तिम्रो पुनर्जन्म स्वर्गमा हुनेछ । यो शहरमा राम्रो काम गरेका केही व्यक्तिलाई पनि मैले स्वर्गमा भेटे । राम्रो काम गऱ्यौ भने तिमीहरु सबैले स्वर्ग प्राप्त गर्ने छौ । तर साबधान गलत काम गऱ्यौ भने तिमीहरुको बास नर्कमा हुन्छ । त्यस्तो नर्कको यातना र पीडा म तिमीहरुलाई बताउन सक्दिन ।

बर्षौ पछि राजाका ठाकुरले उनको फूलेको पहिलो केश राजालाई देखाए । उनले थाहा पाए अब राज्य आफ्नो छोरालाई सुम्पेर सन्यास धारण गर्नु पर्छ । त्यसपछि उनीले सन्यास धारण गरी मिथिलाकै आँपको बगैचामा आफ्नो बाँकी समय विताए । जब उनको मृत्यु भयो उनले शक्रको तभतिम्स स्वर्ग भन्दा पनि माथिको लोक प्राप्त गरे जहाँ ज्ञान र प्रज्ञा प्राप्त गरेका व्यक्ति मात्र पुग्दथे । आफ्ना पूर्खा महादेवको प्रचलनलाई पुरा गरेर ८४००० जुनी पुरा गरी जन्म मृत्युबाट मुक्ति प्राप्त गरे ।

(मौलिक कथा: निमी जातक कथा नं. ५४१)

(स्रोत: http://www.buddha-images.com)

## यो कथाबाट प्राप्त शिक्षा

- **सन्यास पारमिता:** निमी ज्यादै लाकप्रीय राजा थिए । जनता उनलाई सधैं राजा भएको र सिहांसनमा बसेको हेर्न चाहान्थे । त्यस्ता लोकप्रीय राजाले पनि जब ठाकुरले (हजाम) जुन दिन फुलेको केश देखाए  तब उनले सोही दिन सन्यास धारण गरे । उनमा वीर्यता थियो त्यसैले उनले सन्यास लिन सके । सन्यास लिन ज्यादै ठूलो  वीर्यता चाहिन्छ । उनले स्वर्ग त्यागे, समृद्ध मिथिला राज्य त्यागे, राज्य र परिवारको मोह त्यागे र अन्त्यमा सन्यास धारण गरे ।

- **दृढ संकल्प पारमिता:** सबैभन्दा ठूलो कुरा भनेको सन्यास अथवा त्याग नै हो । राजा निमीले प्रजाका खातिर तभतिम्स स्वर्गका राजाको पद पनि छोडेर मिथिलामै आउनुभयो । त्यस्ता प्रिय प्रजालाई पनि छोडेर केश फुल्नासाथ सन्यास धारण गर्नुभयो । त्यसकारण दृढ संकल्प नै यो कथाको केन्द्रीय शिक्षा हो ।

- **प्रज्ञा पारमिता:** उनले स्वर्गमा शक्र (देवेन्द्र) र अरु धेरै देवताहरुलाई धर्मदेशना दिनुभयो । उनी आफ्ना धेरै भन्दा धेरै प्रजाहरुलाई स्वर्गमा पुऱ्याउन चहान्थे,

त्यसैले स्वर्गबाट फर्के पछि धर्मदेशना मार्फत आफ्ना प्रजाहरुलाई असल कर्म गर्न प्रेरणा दिए । उनले स्वर्गको बर्णन गरे । आफ्नै राज्यमा राम्रो काम गरेर स्वर्ग प्राप्त गरेका केही प्रजासंग भेटेका कुरा पनि उनले सुनाए ।  राम्रो काम गरेऊ भने स्वर्गमा बास पाउछौ भन्ने शिक्षा दिए  । दोश्रो शिक्षा भनेको असल कर्म गर्नु, प्रज्ञा प्राप्त गर्नु र अरुलाई पनि प्रदान गर्नु हो ।

- **रागविहीनताः** निमी राजा राग र व्देष विहीन थिए । उनलाई स्वर्गको राग थिएन न त नर्कमा परिन्छ कि भन्ने डर नै थियो । त्यसैले उनले मातलीलाई पहिला नर्क देखाउन अनुरोध गरे । पहिला कहालीलाग्दो नर्क हेर्नुभयो । त्यसपछि मात्र स्वर्गको अवलोकन गर्नुभयो । स्वर्गको दृष्यले उनलाई आकर्षण गरेन र शक्रले स्वर्गको राजा हुन गरेको अनुरोधले पनि कुनै असर गरेन् । आफ्ना प्रजाको सेवाको लागि मिथिलामा फर्केर आउनुभयो । उनले स्वर्गमा आफ्ना केही प्रजाहरु पनि भेटे, ती प्रजाहरुले मिथिलामा राम्रो कार्य गरेका थिए । उनले राम्रो काम गर्नुभयो भने स्वर्ग जान पाउछौ भन्दै मिथिलामा पनि धर्मदेशना दिनुभयो ।

- **सन्यास प्रधानः** राजा निमी त्यति लोकप्रिय भएपनि उनले सन्यास धारण गरे । राजा भइरहन उनका जनताबाट गरेको अनुरोधलाई उनले इन्कार गरेर सन्यास लिने प्रचलन चलाए त्यसपछिका धेरै राजाहरुले त्यो प्रथाको अनुशरण गर्दे गए । शिक्षा सिधा थियो राजा भन्दा पनि सन्यासी हुनु ठूलो कुरा हो । निमी विदेही राजा थिए त्यसकारण अझ पनि मिथिलाबासीको आँखाको नानीमा निमी बिराजमान हुनुहुन्छ भन्ने विश्वास छ ।

अरु शिक्षा पाठक बर्गले खोज्नु हुनेछ ।

# राजा निमीको चाख लाग्दो कथा

धर्मशास्त्रमा नयाँ युगको सुरुवात सूर्यका छोरा मनुको पालादेखि सुरु भयो भनिन्छ । मनुका नाति, इक्ष्वाकुका छोरा निमीको एउटा चाखलाग्दो कथा छ । एक पटक निमीले एउटा ठूलो र कठीन यज्ञ आयोजना गरेका थिए । त्यो यज्ञ सफल भएमा निमीका जनतालाई धेरै नै फाइदा पुग्थ्यो । निमीले यज्ञका सरसामानहरुको व्यवस्था गर्दै थिए, त्यसबेला उनलाई ज्यादै गम्भीर समस्या पर्‍यो । त्यो साधारण यज्ञ थिएन । त्यो यज्ञ सञ्चालन गर्न ज्यादै शक्तिशाली ऋषिको आवश्यकता पर्थ्यो । ठूला ऋषिले त्यो यज्ञको मुख्य पुरोहित हुनुपर्थ्यो । निमीले वशिष्ट ऋषिको आश्रममा गई यज्ञको मुख्य पुरोहित (मूल ऋषि) बनी यज्ञ सञ्चालन गरिदिनु हुन भनी झुकेर अनुरोध गरे । यो यज्ञ भगवानका लागि विशेष समर्पण थियो । वशिष्टले सोधे “कहिले यज्ञको आयोजना गर्नु हुन्छ त ?” निमीले उत्तर दिए, “यथासक्य चाडो ।” वशिष्ट ऋषिको अनुहारमा निराशा छायो । उनले भने “म भ्याउदिन । हजुरलाई थाहा छ देवताका राजा इन्द्र त्यहीबेला नै यज्ञको आयोजना गर्दै हुनुहुन्छ । त्यो यज्ञ मैले नै मूल पुरोहितको रुपमा सञ्चालन गराउँछु भनी इन्द्रलाई बचन दिइसकेको छु । म त्यो वचनबद्धता तोड्न सक्दिन ।” राजा निमी चुपचाप रहे । निमीले सोचे कि वशिष्ट ऋषि इन्द्रको यज्ञ चाडै सम्पन्न गरेर मेरो यज्ञ गराउन आउनु हुनेछ । इन्द्रको यज्ञ धेरै लामो नहुन सक्छ । यज्ञ भनेकै जनताको भलाइको लागि हो । इन्द्रको यज्ञ केही समयमा सम्पन्न भइहाल्छ, म त्यतिन्जेल पर्खन्छु ।

अर्को तर्फ ऋषि वशिष्टले पनि सोच्नु भयो कि राजा पहिला मलाई भेट्न आउनु भएको हो । उनको म प्रति धेरै अपेक्षा छ । मानवीय गुण छ, प्रेम र आदर छ । म उनलाई कसरी खाली हात पठाऊँ ? उनले पर्खन सक्छन् । म नाई भन्न सक्दिन । इन्द्रको यज्ञ समाप्त गरेपछि म तुरुन्त उनको यज्ञ गराउन जान्छु । दुवै जनाले केही भनेनन् र आफ्नो बाटो लागे ।

देवताहरुका राजा इन्द्रको कठीन यज्ञ गराउन लामो समय लाग्यो । तर पनि ऋषि वशिष्ट खुशी थिए किनकी त्यो लामो र झन्झटिलो यज्ञ उनले सफलतापूर्वक सम्पन्न गराएका थिए । इन्द्रको यज्ञ सकिना साथ उनले राजा निमीको अनुरोध सम्झन पुगे । उनी निमीको यज्ञ गराउन तुरुन्तै निस्किए । तर निमीको दरबारमा पुग्नासाथ ऋषि वशिष्ट स्तब्ध भए । पर्खदा पर्खदा वाक्क भएका प्रजाहरुको वैकल्पिक ऋषि खोज्न गरेको अनुरोध स्वीकार गरी राजा निमीले गौतम ऋषिलाई बोलाएर मूल पुरोहित बनाई यज्ञ गराइरहेका थिए । ऋषि वशिष्ट त्यो देखेर रिसले आगो भए । उनले सोचे कि राजा निमीले जानी बुझीकनै मलाई तिरस्कार गर्न गौतम ऋषिलाई बोलाएर यज्ञ गराएका हुन् । वशिष्ट ऋषिले भने "मैले तिमीलाइ श्राप दिएँ । तिमी विना शरीरको हुनु परोस् ।" अर्को तर्फ राजा निमीले पनि सोचे कि वशिष्ट ऋषि अविवेकी छन् यत्रो समय आफै ढीला गर्ने, हामीलाई कुराएर राख्ने अनि उल्टै रिसाउने । राजा निमी कर्तव्यपालक थिए । उनी जनताको अनुरोधलाई वेवास्ता गर्न सक्दैनथे । उनी जनताको हीतका लागि सबै काम गर्दथे । उनको शक्ति, श्रम, स्रोत र साधन जनताका लागि नै प्रयोग गर्दथे । यदी उनले वशिष्ट ऋषिलाई पर्खेर बसेको भए उनका प्रजा पनि लामो समय सम्म ऋषिलाई पर्खेर बस्नु पर्ने थियो । मैले जे गरेँ, ठीक नै गरेँ बरु ऋषिले मलाई जे श्राप दिनु छ दिऊन"् भनेर जनताको राय मुताविक उनले गौतम ऋषिलाई बोलाएर यज्ञ संचालन गराएका थिए । रिसाएका राजा निमीले भने तपाई अविवेकी हुनुहुन्छ । मैले यो यज्ञ प्रजाको भलाईको लागि गरेको हो । मैले तिमीलाई पर्खेर गल्ती गरे । उनले श्राप दिए "तिमी पनि विना शरीरको हुनु परोस् ।"

राजा निमी न्यायिक राजा थिए र उनीसँग पनि प्रशस्त आध्यात्मिक शक्ति थियो । उनका शब्दहरु सही हुन पुगे । ऋषि वशिष्ट पनि देहविहीन हुन पुगे । वशिष्ट ऋषिले अर्को जन्ममा शरीर लिएर आउनु भयो तर राजा निमीको आत्मा चाही ब्रह्माको वरपर नै घुमिरह्यो । अव उनीसँग शरीर नभएपछि कुनै पनि उत्तरदायित्व वहन गर्नु परेन । ब्रह्मामा लीन भएपछि उनी झन् आनन्दित हुन पुगे । राजा आध्यात्मिक शक्तिको कारण झन् झन बलिया हुँदै गए । उनले लगातार ध्यान गर्दै गए । तर राजा निमीका प्रजा धेरै दुखी भए । आफ्ना वावुझै व्यवहार गर्ने राजा नहुँदा प्रजाले धेरै पीर मानेका थिए । जब यज्ञ सम्पन्न भयो भगवानहरु उनले चढाएको वस्तु ग्रहण गर्न आएका थिए ठीक त्यही बेला प्रजाले शक्र भगवानलाई आफ्ना राजा पठाइदिन अनुरोध गरे । उनीहरुले भने कि "हाम्रा राजा संसारकै उत्कृष्ट राजा हनुहुन्छ ।" यो यज्ञ उनले हाम्रो भलाइका लागि गराएका हुन् । हाम्रो सल्लाह अनुसार नै राजाले गौतम ऋषिलाई यज्ञ संचालन गर्न बोलाउनुभएको हो । त्यही यज्ञका कारण उनी प्राणविहीन भै लडिरहेका छन्

। हामीलाई सहयोग गर्नु होस् । हाम्रा राजाको छुटेको प्राणलाई पुनः राजाको शरीरमा राखी दिनुहोस् । हामी हाम्रा राजालाई फर्काउन चाहन्छौँ । प्रजाको प्रेमबाट प्रसन्न भै जनताको इच्छा बमोजिम निमीको छुटेको प्राणलाई पुनः शरीर भित्र राख्न भगवान शक्र मंजुर हुनुभयो ।

तर राजा चिच्याए “नाई नाई तपाई त्यसो गर्न पाउनु हुन्न ।” जब सुक्ष्म शरीर भएका राजाले ती व्यक्तिलाई देखे पछि भगवान पनि छक्क पर्नु भयो । राजाले भने “म अहिले मुक्त छु, म अब कुनै बन्धनमा बाँधिन चाहन्न ।” मलाई पुनः त्यो शरीरमा नराखी दिनुहोस् । म लगातार मुक्त भएर रहन चाहन्छु । ब्रह्मकै अंशको रुपमा रहन चाहन्छु । भगवानले भन्नुभयो ”तपाईका प्रजा तपाईलाई चाहन्छन् त्यसकारण तपाईलाई पुनः शरीर भित्र राख्न लागेको हो ।”

राजा निमीले आफ्ना प्रजालाई हेरे र पुनर्जन्ममा जस्तै उनलाई सबै कुरा याद भयो । यी प्रजाहरु उनलाई साच्ची नै प्रेम गर्दथे । राजा निमीले भगवानलाई हेरेर हाँस्दै भन्नु भयो । यदी मेरा प्रजाले मलाई चाहन्छन् भने म उनीहरुसँग बस्न मन्जुर छु । तर उनीहरुले इच्छा गरे जस्तो गरेर होइन । भगवान राजा निमीलाई देखेर छक्क पर्नु भयो । निमीले भने मैले सुक्ष्म शरीर लिएर बसेको धेरै समय भयो । त्यसकारण म पुनः स्थूल शरीरमा पस्न सक्दिन । तरपनि म मेरा प्रजासँग रहन चाहन्छु । म उनीहरुको बीचमा सूक्ष्म शरीरकै रुपमा सधै सधैका लागि सँगै रहन चाहन्छु । भगवानले उनलाई वरदान दिनु भयो । अझ पनि उनी मिथिलाका प्रजाको आँखाको नानीमा बसिरहेको विश्वास गरिन्छ । त्यसैकारण आँखा खोल्ने र चिम्लिने कार्यलाई मिथिलामा निमेष भनिन्छ ।

यो मौलिक जातक कथा होइन, यो राजा निमीलाई बुझ्न उपयोगी कथा भएकोले समेटिएको हो।

(स्रोतः http://hindumythologyforgennext.blogspot.com/2014/03/king-nimi.html )

## यो कथाबाट प्राप्त शिक्षा

- **प्रजापालकः** राजा निमि प्रजापालक थिए । उनी प्रजाको अनुरोधलाई अस्वीकार गर्न सक्दैनथे । उनले प्रजालाई लामो समय सम्म कुराउन सक्दैनथे । त्यसैले उनले वशिष्ट ऋषिलाई कुर्न सकेनन् । उनले गौतम ऋषिलाई बोलाएर यज्ञ गर्न लगाए । त्यस बापत बरु दण्ड व्यहोर्न राजी भए ।

- **सच्चा प्रेमः** निमिका प्रजाहरु उनलाई औधि नै प्रेम गर्दथे । उनीहरुले मरेका राजालाई फिर्ता पठाउन भगवानसंग अनुरोध गरे । भगवानले पनि प्रजाको अनुरोधलाई अस्वीकार गर्न सकेनन्, उनी राजा निमिलाई फिर्ता पठाउन राजी भए । राजा निमि प्रजाप्रेमी थिए, त्यसैले उनी सूक्ष्म शरीर धारण गरेर आफ्ना प्रजासंग बस्न मन्जुर हुनुभयो । उनी मिथिलाका प्रजाको आँखाको नानीको रुपमा अझै पनि बसिरहेका छन् भन्ने विश्वास छ ।

- **द्वेष विहीनताः** वशिष्ट ऋषिमा द्वेष थियो त्यसले उनलाई हानी नै पुऱ्यायो । राजा निमीलाई हानी पुऱ्याउन सकेन किनकी उनमा द्वेष कम थियो । उनी त ब्रह्मलोकमा बसे भने बशिष्ट ऋषि चाही शरीर लिएर जन्मिनु पऱ्यो र सुख दुख, जरा, मरण भोग्नु पऱ्यो ।

अरु शिक्षा पाठक वर्गले खोज्नु हुनेछ ।

# कण्डकुमार जातक

राजकुमार कण्ड कुमारका बाबु राजा एकराज वाराणसी नजिकैको पुफावती नामको राज्यमा राज्य गर्दथे । उनी अरु औपनिवेशिक राज्यहरुमा समेत आफ्नो अधिकारको प्रयोग गरी शासन गर्दथे । उनी मुद्दा मामिला मिलाउदा ज्यादै धर्मवान बनी निष्पक्ष रुपमा न्याय प्रदान गर्दथे । त्यो बेलाका मुख्य न्यायधिश ब्राह्मण थिए । उनको नाम खण्डहल थियो । उनी नै राजाका कान थिए, उनले आध्यात्मिक र भौतिक सबै विषयका मुद्दा हेर्दथे । खण्डहल नै यो राज्यको लागि दुर्भाग्य थिए । किनकी खण्डहल न्यायिक मुख्य पुरोहित थिएनन् बरु दुष्ट बलका प्रतिनिधि थिए । उनले सोर्सफोर्स लगाएर कृत्रिम योग्यता देखाई न्यायाधिशमा नियुक्ति लिएका थिए । त्यसैले उनी निष्पक्ष र इमान्दार थिएनन् । त्यसैले खण्डहल राजकुमार कण्ड कुमारलाई खत्तम बनाउन तिकडम रच्दथे । ती राजकुमार कण्ड कुमार चाही ज्यादै विवेकी थिए । प्राकृतिक रुपले पनि योग्य थिए । उनी वास्तवमा बोधिसत्व नै थिए र सबै भगवानको शक्तिले उनलाई मुद्दा छिन्न सहयोग पुऱ्याएका थिए ।

एकदिन यस्तो घटना घट्यो कि घुस खाएर न्यायाधिश खण्डहलले छिनेको एउटा मुद्दा राजकुमार कण्डले उल्टाउन सफल भए । जसको सम्पत्ति अन्यायपूर्वक हडपेको हो पुनः त्यो सम्पत्ति उनलाई नै फिर्ता दिलाउन सफल  भए । त्यो असल कर्मको समाचार जनतामा फैलियो जसको कारण राजकुमार कण्डको सबैले प्रशंसा गरे । उनलाई त्यहाँका सबै झगडियाहरुले मध्यस्थता गर्न अनुरोध गरे । अन्त्यमा, राजाले त्यो न्यायालय प्रमुखको पद साथै न्यायका सम्पूर्ण काम, कर्तब्य र अधिकार राजकुमार कण्डलाई प्रदान गरे । खण्डहल राजकुमार कण्ड प्रति झन् झन् इर्ष्यालु बन्दै गए । राजकुमारको लोकप्रियता नष्ट गर्नका लागि उनले अनगन्ति षडयन्त्र रचे । खण्डहल त्यो लोकप्रियता आफू लिन चाहन्थे । उनले राजकुमार कण्ड र सारा समुदायसंग बदला लिन चाहन्थे । धेरै समय पहिले नै उनी त्यो योजनालाई कार्यान्वयन गर्न सक्थे तर पनि असल मौका हेरेर बसिरहेका थिए ।

एक रात राजा एकराज भव्य हिरामोतीले सुसज्जित भएर आफ्ना प्रजाहरुसँग बसिरहेका थिए । त्यो प्रकाशले भरिपूर्ण स्वर्गको शक्तिमा प्रवेश गर्ने उनको इच्छा थियो तर उनी विउझिना साथ सकियो । उनीसँग थोरै धार्मिक विश्वास थियो । त्यसैले उनी राजकीय सभा हलमा प्रवेश गरे र मुख्य ब्राह्मणलाई उनी कहाँ आउन आदेश दिए । उनी त्यो बेला पनि अर्धनिन्द्रा मै थिए । उनले त्यो आकर्षित प्रकाशपूर्ण दृश्य भएको ठाउँमा पुग्न सक्ने बाटो कुन हो भनी सोधे । खण्डहलले यही नै बदला लिने उपर्युक्त अवसर हो भन्ने सोचे । उनले  राजाको अगाडी घुँडा टेकेर विन्ति गरे "त्यो राज्यमा पुग्न त्यति सजिलो छैन ।" यसको मूल्य धेरै छ । भगवानका लागि हजुरले ज्यादै ठूलो त्याग गर्नु पर्छ । यो चार चरणमा गर्नु पर्छ । त्यस्तो कर्मका कारण मात्र त्यति उच्च स्थानमा पुग्न सक्नु हुन्छ । ती चार त्यागहरु पुत्र, रानी, व्यापारी र जनावर हुन् । यी प्रिय बस्तु असल कर्मकाण्ड गरी त्याग गर्नु पर्छ । त्यसो गर्नुभयो भने तपाईले स्वर्गमा प्रवेश पाउनु हुनेछ । राजाको त्यो सपनाले यसरी प्रभाव पार्‍यो कि उनको मन कुनै चिजमा अड्न सकेन । त्यो दुष्ट खण्डहलको सल्लाहको नतिजा बारे उनले सोच्न थाले ।

राजाले शहरको बाहिर एउटा ठूलो यज्ञ आयोजना गरी ती ४ वटा वस्तुको बलिदान (पुत्र, रानी, व्यापारी र जनावर) गर्ने आदेश दिए । यो सुनेर राजकुमार ज्यादै दुखित भए । यति धेरै मानिस र पशुको बलिदानले धेरैको जीवन गुम्छ । तसर्थ उनले राजालाई भने हजुर यस्तो कार्य नगर्नु होस् । म मेरो ज्यानको रक्षाको नभई अरुको जीवन रक्षाका लागि हजुरलाई यो सल्लाह दिइरहेको छु । यी निरपराधी अज्ञानी मानिस र पशुलाई किन यस्तो दण्ड दिनुहुन्छ ? यो खवरले शहर भरी ठूलो निराशा छायो । राजाका नजिकका जो जो व्यक्तिहरु हुनुहुन्थ्यो ती सबैले एक एक गरेर राजालाई भने कि त्यो ब्राह्मणले भनेको सबै झुटा कुरा हुन् । राजालाई त्यही फटाहा ब्राह्मणले भनेको चाही ठीक लाग्यो तर अरु धेरै जना ब्राह्मणले भनेको सबै झुटा कुरा हुन् भन्ने लाग्यो । अन्त्यमा, सबै प्रजाले राजालाई त्यो धेरै जनाको ज्यान लिने रक्तपूर्ण कार्यको आदेशलाई अन्त्य गर्न सल्लाह दिए तर पनि राजाले टाउको हल्लाएनन् । त्यो खण्डहल ब्राह्मणले यस्तरी प्रभाव पार्‍यो कि राजाले कसैको कुरा सुनेनन् । मन्त्रीहरुले, आफ्नी बुहारीले र यतिसम्म कि सानो नाति समेतले राजालाई यस्तो यज्ञ नगर्न अनुरोध गरे । जब राजा यो गलत हो कि भनेर अलिक सोधी खोजी गर्दथे, त्यहीबेला त्यो खण्डहल ब्राह्मण तुरुन्त राजा कहाँ गएर स्वर्ग पुग्ने यो एउटा मात्र बाटो हो भनी सम्झाउन पुग्दथे । जब धेरै मानिस शहरमा बसेर चिच्याउथे राजा ती निर्दोष व्यक्तिहरुलाई छोडिदिन्थे तर त्यो दुष्ट ब्राह्मणको दबाबमा आएर पुनः तिनीहरुलाई थुनामा राख्दथे ।

अन्त्यमा यज्ञस्थल सफा गरियो र मन्च तयार पारियो । तुलहरु झुण्डयाइए । चौका चदुवा टाँगियो, छाता उघारियो । विचरा ती घोडाहरु र साँढेहरुलाई मृत्युमा चढ्न लागिरहेका छौं भन्ने थाहा थिएन । ती निर्दोष जनावरहरु निदाउरो मुख लगाएर नाकबाट फुँ फुँ आवाज निकाल्दै थिए । तर पनि छुटकारा पाउन सकेका थिएनन् । राजकुमार कण्ड ती आफ्ना पिडित साथी र मायालु जनावरसँग त्यहीँ दुर्भाग्य कुरेर बसीरहेका थिए । उनीहरुसँगै राजकुमार कण्डकी पत्नी पनि साथै बसिरहेकी थिइन । उनीहरु भेला भएर मौन रुपमा बसेका थिए । राजकुमार कण्डकी पत्नीले हिडेजस्तो गरी भगवानलाई पुकार गरिन् र चाँडै हजुर मेरो कुरा ध्यान दिएर सुन्नु होस् भनिन् । उनले भनिन् “हामी पृथ्वीमा छौं केही पनि गर्न सक्दैनौं । यहाँ न्याय दिन आत्माहरु पनि अन्धा छन् । उनीहरु पनि गलत र धुर्त छन् ।” उनले अझ अगाडि भनिन् ”यी निर्दोष व्यक्ति र जनावरहरु मृत्युको मुखमा पर्न अगावै यो यज्ञको अन्त्य गरिदिन म हजुरलाई पुकार गरिरहेकी छु ।”

चित्र : शक्रको छोराले राजकीय चौका चदुवा र छाता च्यात्दै



तुरुन्तै चट्याङ परे जस्तै आवाज आयो र शक्तिशाली शक्रका छोरा देखा परे । उनको टाउकाबाट ज्योती आईरहेको थियो । उनले त्यो राजकीय चौका चदुवा र छाता च्याती दिए । चौका चदुवा र छाता टुक्रा टुक्रा भयो । त्यो यज्ञ त्यतिकैमा सकियो । चौका र चदुवा नभएपछि त्यो समारोह पवित्र हुदैनथ्यो । त्यो अचम्मको दृश्य देखेर त्यो भीडमा खुशीको संचार भयो । ती पिडित जनावरहरु बन्धनविहिन भै नाच्न लागे । मानिसहरु ती मारिने व्यक्तिहरुको तल भेला भए । राजा हतार हतार हात्ति चढेर भाग्न लागेका थिए तर फर्कने बाटो नै पाएनन् । भीड त्यो दुष्ट खण्डहल ब्राह्मणतिर खनियो । त्यसलाई कुटेरै मारे । यदि शक्रको छोरा राजकुमार कण्डको सुरक्षामा त्यहा नभइदिएको भए उनीहरुले राजालाई पनि मार्थे । तैपनि उनीहरुले राजालाई बहिष्कार गरे र निर्वासनमा पठाए । तर उनका छोराले बाबुलाई बिर्सिन सक्दैनथे र त्यसैले उनका लागि लुगाफाटो र सातु चामल हालिदिएर निर्वासनमा पठाए ।

देवता र मानिस एकजुट भएर राजकुमार कण्डको राज्यभिषेक गर्न भव्य समारोहको आयोजना गरे । नयाँ राजा न्यायिक र विवेकी थिए । उनको शासनकालमा चिर शान्ति कायम भयो र तिनै राजा भविष्यको बुद्ध हुन योग्य भए ।

जब देवदत्तले बुद्धलाई मार्न खोजे त्यही बेला बुद्धले यो कथा सुनाउनु भएको हो । खण्डहल त्यो बेला देवदत्त थिए भने कण्ड कुमार चाँही वोधिसत्व हुनुहुन्थ्यो ।

(मौलिक कथाः कण्डकुमार जातक कथा नं. ५४२)

(स्रोतः http://www.buddha-images.com)

## यो कथाबाट प्राप्त शिक्षा

- **धैर्यता पारमिताः** यो कथाको मुख्य शिक्षा भनेको धैर्यता राख्नुपर्छ भन्ने नै हो । तिकडम गर्न सिपालु ब्राह्मणले गरेको षडयन्त्रबाट आफूलाई, आफ्नी आमालाई, व्यापारीलाई र जनावरलाई यज्ञस्थलमा बलि दिने कुरा पनि राजकुमार कण्डले धर्यतापूर्वक सुनीरहे । राजकुमारको बढ्दो लोकप्रियता देखेर खण्डहल ईर्ष्यालु बनेका थिए । अनेक षडयन्त्र रचे पनि राजकुमार कण्डले धैर्यतापूर्वक सहदै गए । उनी अन्त्यमा यज्ञस्थलमा जनावरहरुसंग बसेर धैर्यतापूर्वक मृत्यु कुरेर बसीरहेका थिए । उनकी श्रीमती सत्य र न्यायका लागि कर्म गर्दथिन् । तसर्थ राजकुमार कण्डकी श्रीमतीको पुकार सुनेर शक्रले आफ्ना छोरालाई कण्ड, उनकी आमा र

जनावरलाई बचाउन पृथ्वीमा पठाउनु पऱ्यो । चट्याङ्ग परे जस्तै आवाज आयो । यज्ञका चौका चदुवा छाता सबै च्यातिएर टुका टुका भए । यसरी शकले धैर्यताको बाँध अन्तिम अवस्था सम्म भत्किन दिनुभएन र सबैलाई मुक्त गर्नुभयो ।

- **सत्य र न्यायको जीतः** यो कथाको अर्को मुख्य शिक्षा भनेको सत्य बाटो हिडनु पर्छ भन्ने नै हो । राजकुमार कण्ड सत्य र न्यायको बाटो हिड्नु हुन्थ्यो त्यसैकारण उनी, उनकी आमा, जनावर सबैले मुक्ति पाए । शिक्षा सरल छ, सत्यबाटो हिड्यो र धैर्य गऱ्यो भने मुक्ति पाइन्छ । यहाँ सत्य र न्यायको जीत भयो । कसैले पनि न्याय गरेनन् भने शकले न्याय दिनुहुन्छ । त्यसैले सत्य बाटो हिडनुपर्छ ।

- **कर्म अनुसारको फलः** राजकुमार कण्डकुमारकी श्रीमतीको असल कर्म वा पुण्य कर्मकै कारण कण्डकुमारकी श्रीमतीको पुकार शकले सुन्नुभयो र उनका श्रीमान्, सासृ र अबोध जनावरको जीवन रक्षा गर्नुभयो । अर्को तर्फ कुकर्मका कारण जनताले खण्डहललाई कुटेरै मारे । राजाले आफ्नो कुकर्मका कारण निर्वासनमा जानुपऱ्यो ।

अरु शिक्षा विद्वान पाठकले आफै पढेर पाउनु हुनेछ ।

# भुरीदत्त जातक

पृथ्वीको गर्भभित्र मानिसका लागि जंगल र खेत थियो, त्यहीँ नागहरु पनि बस्थे । पृथ्वीको बाहिर चाही सपेरा र जादुगर मानिसहरु बस्थे । आवश्यक परेको बेलामा ती नागहरुले मानव चोला धारण गर्दथे र अरु बेला चाही नाग भएरै जीवन बिताउथे । उनीहरुको राज्यमा दुर्लभ गरगहना र अति महँगा खनिज वस्तु भएकाले उनीहरु धनी र वैभवशाली भएर बसेका थिए । ती नागहरु समय समयमा आफ्नो राज्य र वासस्थान परिवर्तन गरी रहन्थे । पृथ्वीको सतहमा मानिससँग पनि बस्तथे । उनीहरुको मुख्य दुष्मन भनेको गरुड थियो । गरुड भनेको ठूलो पंक्षी हो जो  धेरै माथिको आकाशमा उड्छ र सूर्य किरणमा रमाउछ ।

जब गरुड भोकाउँथे उनीहरुले नागलाई समाउथे र उडाएर आकाशमा लगी खान्थे । गरुडका खुट्टाले नागको टाउको समाउथ्यो  । नाग यति लामो थियो कि उसका शरीर र पुच्छरले पिपलको बोटलाई पुरै बेरेर छोप्थ्यो तर गरुडको बल पनि यति थियो कि त्यो पिपलको बोट नै उखालेर जरा सहित आकाशमा उडाएर लग्थ्यो । जब गरुडले नागलाई हतार हतार निल्यो, तव गरुडले सम्झियो कि त्यो पिपलको बोटले भिक्षु, साधु र सन्तलाई आश्रय दिएको थियो र त्यही झुप्रोमा धेरै भिक्षु, साधु, र सन्तहरु बस्तथे । त्यो नागले महशुस गऱ्यो कि त्यो पाप कर्मले उसलाई दुर्भाग्य निम्त्याउँछ । त्यसपछि ऊ त्यो आश्रममा फर्कियो र उसले भिक्षुहरुलाई भन्यो कि मेरो खराब कर्मले मलाई बिरामी नबनाओस, मैले भिक्षु, साधु सन्तलाई हानी पुऱ्याउने उद्देश्यले गरेको होइन । गरुडले उनीहरुलाई भन्यो कि नागको शक्ति मलाई प्राप्त भएकोले म तपाईहरुलाई पुरस्कृत गर्न गइरहेको छु ।

तर त्यो आश्रमका भिक्षुलाई कुनै वर वा पुरस्कार माग्नु पर्ने कुनै कारण नै छैन । गरुडले त्यो पुरस्कार ब्राह्मण अलम्वयानलाई दिए । अलम्बयानले त्यो वर ( पुरस्कार) शक्तिशाली नागहरुलाई नियन्त्रण गर्न प्रयोग गऱ्यो । यसबाट उसले धेरै धन र सुवास प्राप्त गऱ्यो । ब्राह्मण अलम्वयानले त्यो आश्रमको सेवा छोड्यो र जंगल वरपर घुम्न थाल्यो र अन्तिममा यमुना नदीमा पुग्यो । त्यहाँ उसले युवा

नागहरुलाई आक्रमण गऱ्यो । ती नागसँग बहुमूल्य गरगहना थिए । ती गहना जो सँग हुन्थ्यो उसले जे चितायो त्यही पुग्दथ्यो । तुरुन्त नै उसले गरुडले दिएको जादुगरी वरलाई प्रयोग गऱ्यो । उनीहरु डरले काम्न थाले र हिरामोती छोडी तुरुन्त भागेर पानी मुनि पुगे । अलम्वयान त्यो छरिएका हिरामोती टिपेर अहोभाग्य सम्झी आनन्दित भयो । उसले सबै गरगहना मणि बटुलेर राख्यो । ऊ जादुगरी वर पाएर पनि नजान्ने जस्तै भई जंगलमा घुम्न थाल्यो ।

एकैछिन पछि अलम्वयानले शिकारी दाउरेलाई भेट्यो । त्यो दाउरेको छोरा जंगलका जनावरहरु पक्रिएर आफ्नो जीविकोपार्जन गर्दथ्यो । जब सिकारीले अलम्बयानसँग गरगहना भएको पत्तो पायो उसमा लोभ बढ्यो र नराम्रो भावना पलायो, उसले सुराकी गर्न थाल्यो । धेरै पहिला पनि एक पटक शिकारी दाउरेले गरगहना प्राप्त गर्ने अवसर पाएको थियो तर उसले त्यो मौका त्यसै गुमाएको थियो । त्यो घटना उसले झलझली सम्झियो । उसले त्यो दिन जंगलमा सोच विचारमै बितायो । त्यसको भोलीपल्ट विहान नागकन्याको सुमधुर संगीत र उनीहरुको हाँसो सुन्यो । नाग राजकुमारसंग भएको गरगहना थाहा पाए पछि दाउरे शिकारीमा ती गरगहना प्राप्त गर्ने चाहना पलायो, त्यस पछि उसले राजकुमारलाई पछयाउन थाल्यो । त्यो थाहा पाएर नाग राजकुमारले राम्रो कपडामा बेरिएर एउटा धमिराको पहाड बनाएर बसे । जब दाउरेले उसलाई सोध्यो । अनि राजकुमारले भने कि मेरो नाम भुरीहत्त हो म नागहरुको राजकुमार हुँ । ती नाग राजकुमारका प्रज्ञा र असल कर्मका कारण उनी भगवान झै भएकाले उनको नाम भुरीदत्त रहेको थियो । अझ बढी असल कर्म गर्नका लागि उनले आफ्नो राजदरबार र श्रीमतीलाई छोडेर सन्यास धारण गरेको कुरा ती नाग राजकुमारले त्यो दाउरेलाई भने । उनले त्यो भत्किएको धमिरो लागेको पहाड मानिसको संसारमा प्राप्त गरे । उनीले भने “म हरेक दिन बेरिएर त्यही धमिरोको पहाडमा निश्चल भै रहने गरेको छु । कसैलाई इच्छा भए मेरो काँचुली, छाला र हाड मासु र रगत लैजान सक्छ । हरेक दिन विहानै दश जना नागकन्याहरु र सुसारेहरु मलाई आफ्नो नाग दरबारमा लैजानका लागि आउँछन् ।“ भुरीदत्तले आफ्नो ध्यान गर्ने ठाउँ कसैलाई पनि बताउदैनथे तापनि उक्त गोप्य कुरा भन्न उपयुक्त लागेर उनले दाउरे शिकारीलाई त्यो स्थान बताए । त्यो दाउरे (शिकारी) र उनका छोरालाई नागराज्य हेर्नका लागि निम्ता दिए । साथै उनले तिनलाई त्यो राज्यको सुख भोग गर्नुहोस् भने । ती दाउरेले उनको निम्ता स्वीकारे र नाग राज्यको भ्रमण गरे । त्यहाँ नागहरुले ठूलो सुविधायुक्त र विलासपूर्ण जीवन बिताएको देखे । उनले केही बर्ष नागराज्यमा बसेर सुख सुविधा प्राप्त गरे पछि त्यो शिकारीले पुन मानिसको संसारमै फर्कन चाह्यो । भुरीदत्तले उनलाई धेरै धन

सम्पत्ति तथा मणिमाणिक्यादि गरगहना दिने वचन दिए । जसले ती गरगहना र मणि प्राप्त गर्छ उसले जे चाहयो त्यति लिन सक्दथ्यो तर त्यो दाउरे शिकारीले भुरीदत्तले प्रस्ताव गरेजति सबै लिन इन्कार गरे । उल्टै ती दाउरे शिकारीले भने कि म पनि भुरीदत्त जस्तै भिक्षु सन्यासी बन्न चाहन्छु । त्यसपछि ती दाउरे शिकारी र उनका छोरा आफ्नै काममा फर्किए । जब दाउरे शिकारीले आफू भिक्षु सन्यासी बन्छु र तिमीलाई छोड्छु भनेर उनकी पत्नीलाई भने उनकी पत्नीले उनलाई रिसाएर भनिन् कि तपाई मसँगै बस्नैपर्छ र परिवारलाई सहयोग गर्नुपर्छ । श्रीमतीको यो आग्रहपछि उनी पहिला जस्तै शिकारी बनेर जीवन बिताउन थाले ।

जब दाउरे शिकारीले ब्राह्मण अलम्बयानको हातमा जादुको गहना देखे । भुरीदत्तले दिएको त्यो जादुको गहना नलिएकोमा मनमनै पश्चात्ताप गरे । अब उनले त्यो गहना पाए लिने निश्चय गरे । दाउरे शिकारीले अलम्बयनलाई यो गहना ज्यादै खतरा कुरा हो भनेर बुझाउने कोशिस गर्छु  भन्ने विचार गरे । फेरी उनले मन मनै सोचे त्यो लोभी ब्राह्मणले मेरो कुरा नमान्न पनि सक्छ । त्यसपछि दाउरे शिकारीले त्यो नाग राजकुमारसंग के आश्चर्यको कुराको छ भनेर बुझ्ने कोशिस गरे । अलम्बयानको उद्देश्य शक्तिशाली नागलाई नियन्त्रणमा लिनु थियो र जसबाट उसको नाम र कीर्तिको सुवास यत्रतत्र फैलियोस् भन्ने चाहन्थे । यसै बीचमा अलम्बयानले जसले त्यो सर्पको विषयमा सूचना दिन्छ उसलाई यो सबै हिरामोती गरगहना दिने कबोल सहितको घोषणा गरे । अलम्बयानसंग ती नागको शक्तिको साक्षात्कार भएको थिएन ।

उता शिकारीले पनि कसरी त्यो धन सम्पत्ति प्राप्त गर्ने भन्ने एउटा जुक्ति निकाल्यो । जब उसले नागको राजकुमार अन्तरध्यान भएको ठाउँ बारे अलम्वयानलाई भन्न लागेका थिए तव उनका छोराले त्यसरी विश्वास गरेर सुनाइएको गोप्य कुरा कसैलाई पनि नभन्नु भनेको छ भनेर सम्झाए । उनले एक वर्ष सम्म हामीलाई नाग राज्यमा बसाएका थिए । उसले आफ्ना बाबुलाई नाग राजकुमारको जानकारी चाहने हो भने त्यो मानिसले आफै थाहा पाए भइहाल्यो नि । किन त्यस्तो सुराकी गर्नु पर्‍यो ? आदि कुरा भनेर आफ्ना बाबुलाई सम्झायो । उनलाई निश्चय थियो कि नाग राजकुमारले कुनै दिन त्यो धन प्रदान गर्नु हुनेछ ।

तर त्यो लोभी शिकारीले आफ्नो छोराका कुरा सुनेन । उसले अलम्बयानलाई डोर्‍याउँदै भुरीदत्त बेरिएर ध्यान बसेको त्यो धमिराको पहाड तिर लिएर गए । त्यो अलम्बयान नागलाई समाउन चिन्तित भयो । अलम्बयानले उसलाई पुरस्कार थमायो । अलम्बयानले पुरस्कार स्वरुप त्यो “जादुको गहना” हातमा राखिदिन

लागिरहेको के थियो, त्यो लोभी शिकारीले तुरुन्त त्यो “जादुको गहना” थुतेर लिने कोशिस गऱ्यो । थुतेर लिदा त्यो जादुको गहना हातको औंलाबाट खसेर चिरिएको भुइ भित्र पस्यो र हरायो । त्यो जादुको गहना पुनः नाग राज्यमै पुग्यो । त्यो मूर्ख शिकारी त्यही पापका कारण रुदै कराउँदै गयो ।

अलम्वयान उसका कुकर्म साथ भुरीदत्त कहाँ गयो र त्यो जादुगरी  वर फलाक्दै र पंखा हम्केरै उसले सजिलै  ती नाग राजकुमार बोधिसत्वलाई नियन्त्रणमा लियो । ती भुरीदत्त बोधिसत्वले भने “तपाई मेरो छाला, मासु, हड्डी र रगत लैजान सक्नु हुन्छ ।” अलम्बयानले त्यसपछि भुरीदत्तलाई एउटा ढाकीमा कोचे । नाग राजकुमार भुरीदत्तले ज्यादै ठूलो पीडा सहेर त्यो ब्राह्मण प्रति नरिसाइकन आफैं आफ्नो शरीर लैजान स्वीकृत दिए ।

अलम्बयानले आफ्ना कैदी भुरीदत्तलाई नजिकैको गाउँमा लिएर गए र उसलाई नाच्न लगाए । क्रुर यातनाको डरले भुरीदत्तले विभिन्न रंग र रुपमा नाचे । अलम्बयानले उनलाई जबरजस्ती धुवा लगाउँथे र कहिले जबरजस्ती चिसो पानी खन्याइदिन्थे । यो देखेर गाउँलेहरु छक्क पर्थे  । बोधिसत्वको यो प्रतिभाबाट त्यो अलम्बयान ब्राह्मणले धेरै लाभ प्राप्त गऱ्यो । त्यो नागको नाच हेर्न मानिसहरु अलम्बयानलाई पैसा दिन्थे । उसले त्यो नाग लिएर गाउँ गाउँ गएर धेरै पैसा जम्मा गऱ्यो । बनारस नपुगुन्जेल उसले धेरै नाम र दाम कमायो ।

चित्रः अलम्बयानले भुरीदत्तलाई बनारसका राजाको अगाडि नाच्न लगाउदै



त्यहीबेला भुरीदत्तलाई आफ्नी श्रीमती र आमालाई धेरै दिनदेखि गुमाउनु परेकोले धेरै नियास्रो लागेकाले उनका भाइलाई खोज्न पठाए । एउटा भाइले देवलोकमा गएर खोजे भने अर्कोले हिमवतखण्डका जंगलमा गई खोजे । जेठो दाइले चाही मनुष्य लोकमा पुगेर यत्रतत्र खोजे । जेठा दाजुले चाँही सन्यासीको पहिरनमा भुरिदत्तकी प्रिय बहिनीलाई साथै लिएर खोज्नु भयो ।

जेठा दाजु सुदासन र भुरीदत्तकी बहिनी मनुष्य लोकमा खोज्दै खोज्दै बनारस पगे जहाँ उनका मामा राजा थिए । अरु सर्वसाधारण मानिस जस्तै उनीहरु पनि ठूलो सर्पको नाच हेर्न बजार गए । ढाकीबाट जब भुरीदत्तले टाउको उठाए र उनले त्यो भीडमा आफ्ना दाजुलाई देखे । उनले आफ्ना दाजुका खुट्टामा ढोगे । उनी रोए र उनका दाजु सुदासन पनि रोए । अलम्बयानले टाढाबाट त्यो दृश्य हेरिरहेका थिए । उनलाई लाग्यो कि त्यो सर्पले त्यो सन्यासीलाई टोक्यो भने त्यो सर्प विषरहित हुन्छ ।

सुदासनले घमण्डपूर्वक भन्नुभयो कि कुनै सर्पको विषले वा अन्य प्राणीको विषले उनलाई हानी गर्दैन । यो उद्घोषले अलम्बयान रिसाएर सुदासनलाई आफ्नो शक्ति प्रदर्शन गर्न चुनौति दिनुभयो । ती सन्यासीले आफ्नी बहिनीलाई भन्नु भयो, यी भ्यागुतोको रुपमा छिन् । उनीसँग सबैभन्दा बढी विषालु थुक छ । उनले आफ्नी बहिनीलाई हातमा टोक्न र तीन थोपा विष खसाउन अनुरोध गरे । सुदासनले भने कसले यी विषका थोपाहरु मेरो पाखुरामा हेर्न चाहन्छ ? जोसँग यस्तो शक्ति हुन्छ उ बनारसका पूरै शहरमा हावा जस्तै वहन सक्छ । म हजुरहरुलाई देखाउ कि ? सुदासनले भन्नु भयो ।

अलम्बयानले पछाडि फर्केर हेरे । मानिसहरु डरले कराइरहेका थिए । केबल राजा मात्र शान्तपूर्वक बसेका थिए । उनले सोधे "यो विष कसरी नष्ट गर्ने ?" सुदासनले भन्नु भयो "यसको एउटै तरिका छ । तीनवटा गहिरा खाल्टा खनेर एउटामा लागु औषधिले भर्नु, अर्कोमा गाईको गोबर भर्नु र तेस्रो खाल्डोमा औषधिले भर्नु ।" जसअनुसार ती खाल्डो भरिए पछि उनले तीन थोपा विष तीनवटा प्वालमा खसालिदिए । त्यहाँ तुरुन्तै विस्फोट भयो । आकाश र हावा भरी चट्याङ जस्तै गरी सारा शहर नै थर्किएको आवाज आयो । अलम्बयानले यस्तो देखेर डरले निलो कालो हुँदै भन्छन् कि "म नागा राजकुमारलाई मुक्त गर्छु ।"

त्यसपछि भुरीदत्त ढाकीबाट बाहिर निस्कन्छन् । उनी प्रकाशको रुपमा विजयको भीडमा उभिन्छन् । त्यो पापी ब्राह्मण अलम्बयान लुसुक्क घस्रेर भाग्छ पुनः कहिलै देखिदैन ।

त्यसपछि ती दुई दाजुभाइ भान्जाको रुपमा वनारसका राजा भए । उनी नाग राज्यमा आइपुग्नु अगाडि नै उनको भव्य समारोह बीच राज्यारोहण गरियो । यसरी जीवनको अन्त्यमा भुरीदत्त उनका उत्तराधिकारी तयार गरी विजयी नागहरुलाई राज्य दिई स्वर्गको बाटो लागे ।

(मौलिकः भुरीदत्त जातक, कथा नं. ५४३)

(स्रोतः http://www.buddha-images.com)

## यो कथाबाट प्राप्त शिक्षा

- **शील पारमिताः** यो कथाको केन्द्रीय शिक्षा भनेको शीलको पालना गर्नु हो । भुरीदत्तलाई ढाकर (सानो डालो) भित्र कोचेर राख्दा पनि कोचिएर बस्नुभयो । झुटो बोल्नु भएन । वहाँले दुख सहेर पनि अर्कालाई हानी हुने कुनै कर्म गर्नु भएन । सहनशील भएर बस्नुभयो । हिंसाकर्म गर्नु भएन । बरु आफ्नो रगत, मासु र हड्डी पनि दान दिन राजी हुनुभयो ।

- **ध्यान पारमिताः** भुरीदत्त नागको रुप लिएर बेरिएर ध्यान गरेर बस्नुभयो । उनको चित्तमा कुनैपनि खराब कुरा आएनन् । ध्यानका कारण मनका सबै विकृतिहरु भस्म भए । उनको चित्त शुद्ध भयो र उनको चित्तमा कहिल्यै नराम्रा विचार आएनन् । बरु आफ्ना छाला, हाड र रगत दिन तयार हुनुभयो ।

- **दान र परोपकारी पारमिताः** यो कथाको अर्को शिक्षा भनेको थोपा थोपा गरी दान गरेर परोपकारी पारमिता जम्मा गर्नु पर्छ भन्ने नै हो । भुरीदत्त आफ्नो शरीरको छाला, मासु, हड्डी, रगत पनि दान दिन राजी हुनुभयो । उहाले दाउरेलाई खान, लाउन, बस्न दिनुभयो र जीवनभरी दान दिएर परोपकारी कार्य गर्नुभयो ।

- **नैतिकताः** भुरीदत्त जातकको अर्को शिक्षा नैतिकता हो । दाउरेसंग नैतिकता थिएन । हिरामोति गरगहनाको लोभमा परी उनको नैतिकता हरायो । पहिला भुरीदत्त जस्तै सन्यासी हुने बिचार गरेका दाउरे लोभका कारण नैतिकता गुमाउन पुगे । जब दाउरे शिकारीले गहनाको थैली थुतेर लिन कोशिस गरे, पहिले गरेका कुकर्मका कारण उनका हातबाट गहना खसेर चिरिएको भुँईभित्र पस्यो र हरायो ।

- **विश्वासधात गर्नु हुदैनः** भुरीदत्तले शिकारी दाउरेलाई विश्वासले नागराज्यमा राखे । नागराज्यका सबै सुविधाहरु प्रदान गरे । राम्रो व्यवहार गरे । त्यसबाट प्रभावित भएर दाउरे शिकारी पनि भुरीदत्त जस्तै सन्यासी हुने विचार गरे । दाउरे शिकारी भुरीदत्तप्रति विश्वासी बने तर पछि हिरामोति र गरगहनाको पोकोको लोभमा परेर पापी ब्यक्तिलाई भुरीदत्त बसेको स्थान बताउन पुगे । उनले भुरीदत्तप्रति विश्वासघात गरे । अन्ततः पूर्वजन्म र यही जन्मका कुकर्मका कारण उनले दुख बाहेक केही पाएनन् ।

- **राग र द्वेषहीनताः** नागराज भुरीदत्तलाई ब्राह्मणले धेरै दुख दियो । ब्राह्मणले भुरीदत्तलाई नाच्ने आदेश दिएपछि उहाँ सकी नसकी नाच्नुहुन्थ्यो । विभिन्न रंग, रुप र आकार देखाउनु हुन्थ्यो । त्यो नाच देखाए बापत त्यो ब्राह्मणले धेरै पैसा कमाउँथे । तर भुरीदत्तलाई न त त्यो पैसाप्रति राग थियो न त त्यो ब्राह्मणप्रति द्वेष थियो । राग र द्वेषविहीन हुनु पनि यो कथाको शिक्षा हो ।

- **कर्मको फलः** अलम्बयान ब्राह्मण लोभी र पापी थियो उसले भुरीदत्तलाई कोचेर ढाकर भित्र राख्यो । उसले भुरीदत्तलाई कुर व्यवहार गर्‍यो, नाच्न लगायो, चटक देखाउन लगायो र त्यस बापत धेरै रुपैया जम्मा गर्‍यो तर नागराजालाई केही पनि खान दिएन । त्यसको कर्मफल त्यो ब्राह्मणले भोग्नु पर्‍यो र शहर नै छोडेर भाग्नु पर्‍यो । दाउरे शिकारीसंग लोभ थियो उसले विश्वासघात गर्‍यो । त्यही कुकर्म र विश्वासघातका कारण हिरामोति गरगहना उसका हातमा पर्नासाथ झरेर चिरा परेको जमिनभित्र परेर हराए ।

- **वीर्य पारमिताः** सुदासनले आफ्नो वीर्य पारमिताका कारण बहाँले शक्ति प्रदर्शन गर्नुभयो । त्यो शक्ति प्रदर्शनबाट डराएर लाभी ब्राह्मण भुरीदत्तलाई छोड्न राजी भयो । त्यसैले वीर्य पारमिता पनि हुन आबश्यक छ ।

अरु शिक्षा पाठक वर्गले पत्ता लगाउनुहुनेछ ।

# महानारद जातक

विदेहको राज्य मिथिलामा एकजना अंगति नामका राजा थिए । उनकी एउटी सुन्दरी छोरी थिइन् । उनको नाम रुजा थियो । उनी नै ती राजाको खुशी र आनन्दकी स्रोत थिइन् । राजाका १६ हजार रानी थिए तर पनि उनी मात्र एक्ली छोरी थिइन् । राजा अंगतिले छोरीलाई मन खोलेर धन सम्पत्ति दिन्थे । उनले आफ्नी छोरीलाई फूलका बुकेहरु, ससाना सुनका गहना र सुनचाँदीका धागाले बुनेका चोला र साडीहरु दिन्थे । उनी छोरीलाई यति विश्वास गर्दथे कि प्रत्येक १५ दिनमा (पूणिमाको दिन) गरिब र रोगी व्यक्तिलाई वितरण गरिने एक हजार सुनका सिक्का पनि आफ्नी छोरी मार्फत नै वितरण गर्दथे । सुनका सिक्काको दानले उनलाई जनताको माया र छोरीको प्यार दुबै प्राप्त भएको थियो ।

उनी पूर्णचन्द्रका दिन सवेरै उठेर नुहाएर, लुगा लगाएर तीनजना प्रमुख सल्लाहकारसँग राजदरबारको बार्दलीमा उभिएर तलका सेता शहरका पाटा पाटामा विभाजित फाँटहरु हेरिरहेका थिए । जब उदाइरहेको चन्द्रमाको किरण शहरका सडक र गल्लीमा पऱ्यो तब राजाले ती सल्लाहकारतिर फर्किएर सोधे “हामी यो पूर्णचन्द्रको पर्व कसरी आनन्दपूर्वक मनाउन सक्छौं ? “

प्रथम सल्लाहकार जनरल अल्लातले सुझाव दिए “नयाँ भूमिमा हामीले विजय प्राप्त गर्नु पर्छ ।“ दोश्रो, राजकीय फाँट हेर्ने सल्लाहकारले भने “यो बेला नाचगान र रमाइलो गर्ने बेला हो ।“ तेस्रो सल्लाहकार तथा न्याय प्रमुख ब्राह्मणले भने “शहर बाहिरको जंगलमा नाङ्गै तपस्वी भै सन्यासी जीवन बिताउनु नै सबैभन्दा आनन्दमय हो ।“ राजा अंगती ब्राह्मण सल्लाहकारका कुरा सुनेर आनन्दित भए र उनले दिएको सल्लाहलाई शिरोधार्य गरे । त्यसपछि राजकीय रथलाई पालिस लगाएका चाँदीको गरगहना जडान गरेर सजिसजाउका साथ तयार पारियो । राजाको रात्री भ्रमणको लागि सबै बन्दोवस्तिका सामान मिलाइयो । रथका लागि चारवटा वायुपंखी सेता घोडाहरु तयार पारियो । सात तला भएको रथको लागि पाल र छाता तयार पारियो । सेतो शाही पंखा तयार पारियो । टाढाबाट हेर्दा राजा

र सेतो रथ चन्द्रमा जस्तै टलटल टल्किएर प्रकाशले भरिपूर्ण देखिनुहुन्थ्यो । त्यो रथले जंगलको मध्य भाग सम्मको यात्रा तय गऱ्यो । उनीहरुले परबाटै देखे, तपस्वी गुण धेरै नाङ्गा व्यक्तिहरुद्वारा घेरिएर बसिरहेको थिए । तपस्यामा आँच नपुऱ्याई उनले रथबाटै गुणको पाउमा प्रकाश पठाए । उनीसँग भलाकुसारी पछि खरायोको छालाले मोहारेको गजरामा बसेर आदरपूर्वक तपस्वी गुणलाई आफ्नो भ्रमणको उद्देश्य बताए । उनले भने "हामी माथि पूर्णचन्द्र उदाउदै छ त्यसैले हाम्रो मनमा रहेका केही शंकाहरु निवारण गर्नु छ ।"

त्यसपछि उनीले आमाबाबु, शिक्षक, श्रीमती, बच्चा, ब्राह्मण तथा सैनिकसँग कस्तो व्यवहार गर्ने तथा कस्तो नियम पालन गर्ने भन्नेबारे प्रवचन दिए । साथै उनले सबैभन्दा महत्वपूर्ण कुरा कसरी कोही नर्कमा पर्छन् र कोही चाही स्वर्गको बाटो लाग्छन् भन्ने कुरा पनि बताए । त्यो बेलामा त्यो भूमिमा उपयुक्त सल्लाह दिने एउटा पनि साँचो ऋषि थिएनन् । त्यसैले कोही नभएपछि गुणले नै राजालाई सल्लाह दिने गर्दथे । गुण अर्धज्ञानी, अर्धघमण्डी थिए तापनि उनी त्यस ठाउँमा ज्ञान र प्रज्ञाको लागि प्रसिद्ध थिए । उनी नास्तिक र अधर्मका सिद्धान्त यसरी रटाउथे कि धेरै व्यक्तिहरु उनलाई विश्वास गर्न पुग्थे । उनी भन्थे कि कुनै पनि व्यवहार राम्रो  र नराम्रो हुँदैन । चाहे राम्रो कर्म गर्नुहोस्, चाहे नराम्रो, यसको भविष्यमा कुनै प्रभाव पर्दैन भन्थे । उनी भन्थे "तपाईको जन्मभन्दा अगाडि नै सबै कुराको निश्चित गरिएको हुन्छ । कुनै व्यक्तिले शत्रुमाथि तरबार चलाउने विश्वास गर्नु हुन्छ भने कोही चाही भेदभाव नगरी दान दिनुहुन्छ । यी दुवै हाम्रो नियन्त्रणमा छैनन् र यसको भविष्यमा कुनै प्रभाव पर्दैन । नर्क वा स्वर्ग बेकारका कुरा हुन् । यो बाहेक अर्को संसार छैन । त्यसैले तपाईलाई जे गर्न मन लाग्छ त्यही गर्नुहोस् र आफूलाई आनन्दित तुल्याउनु होस् ।"

गुणको स्तब्ध तुल्याउने प्रबचन पछि जनरल अल्लातले बोल्नु भयो । "हो, मैले सोचेको कुरा अब यकिन (पुन सावित) भयो । अघिल्लो जन्ममा म शिकारी थिए, पवित्र गाईको हत्या गर्थे र धेरै गलत काम गरे । के मैले यो जन्ममा दुख भोग गरेको छु र म समृद्ध सैनिक जनरल छु तर पनि मलाई कसैले नर्कमा पठाएन् ।"

त्यसपछि एकजना दासले च्यातिएको लुगा लगाएर गहभरी आँशु बनाउँदै भने, मैले पूर्वजन्ममा सधै राम्रो काम गरेँ । कहिल्यै दान नदिई खाना खाइन । तर अहिले मलाई हेर्नुहोस् । अहिले मेरो जन्म वेश्याको छोराको रुपमा भयो । मुश्किलले हातमुख जोड्छु तापनि अझ पनि म आफूलाई नराखी आधा खाना म भोकाएका व्यक्तिलाई दिन्छु । कति दिन त म भोकै बस्छु । तर मेरो यो जन्म र पूर्वजन्मका कर्महरु त्यसै खेर गए ।

राजा अंगति यी कथाहरु सुनेर धेरै प्रभावित भए  उनले आफैले आफूलाई प्रश्न गरे  "मैले भक्तिपूर्वक दान दिएको वेकार भयो । उनी दान दिएकोमा सन्तुष्ट थिएनन् । मैले गरेको राम्रो कर्मबाट म सुखी भइन ।" राजाले मनमनै भने, "मैले यस्तो दान दिएकोमा मलाई कुनै खुशी पनि प्राप्त भएन ।" गुणका शब्दहरुसँग उनी  विश्वस्त भए  र ती ऋषिलाई नमस्कार समेत नगरी तुरुन्तै त्यहाँबाट फर्किए ।

त्यसपछि उनले कुनै पनि राम्रो काम गरेनन् । राम्रो कर्मतिर लाग्न कुनै मेहनत पनि गरेनन् । उनले राजाद्वारा सम्पादन गरिने सबै कर्म र राज्यको रेखदेख गर्ने कार्य उनका सल्लाहकारलाई सुम्पे । उनले कुनै निर्णय गरेनन् । अरुले गरेको काम हेरेर र खेलेर आफ्नो समय व्यतित गरे । उनी आफूले कर्म नै नगरेपछि कुनै परिणाम आउने कुरै भएन । न त कुनै कारण नै बताउन पर्‍यो । उनको जीवनमा कुनै उल्लेखनीय काम नै भएन । सबैभन्दा खराब कुरा चाही उनले दान दिन पनि छाडे ।

राजाले उनीहरुलाई पूर्ण वेवास्ता गरेको र दान नदिएकोमा धेरै गरिव दुखीहरुले रोइकराई गर्न थाले । राजाले आफ्ना कान बन्द गरेको र विलाप नसुनेकोमा राजाकी छोरी रुजा धेरै रोइन् । अर्को पूर्णचन्द्रका दिन रुजाले सबैभन्दा राम्रो लुगा लगाइन् । बुबाले उपहार स्वरुप दिएका गरगहना लगाइन् र राजाको दरबार भित्र पसिन् । राजाले उनको जीवन कसरी बितिरहेको छ भनी सोधपुछ गरे । उनले भनिन् कि मलाई एउटा चिज मात्र अपुग छ । भोली पवित्र पूर्णचन्द्रको तिथि छ, पवित्र दिन छ । हजुरलाई इच्छा छ भने तपाईका खजान्जीलाई एक हजार सुनका सिक्का ल्याउन लगाएर जनतालाई वितरण गरिदिनुहोस्, यो हाम्रो परम्परा भै सकेको छ । तर उनका बुवाले सोच्दै नसोचेको उत्तर दिदै  भने । "दान !  केको दान ! हाम्रो सुन अरुलाई वितरण गर्ने ? म यो मूर्ख परम्परालाई अगाडि बढाउन चाहन्न । प्रारब्ध भएकैले हामी अहिले यो अवस्थामा छौं । के कारणले मैले मेरो धनलाई वरवाद गर्ने ? मलाई घरीघरी   यस्ता अनावश्यक कुरा गरेर दुःख नदेऊ छोरी ।"

रुजाले बुबाका यस्ता कुरा सुनेर डराएको महसुस गरिन् । उनका बावु ती सन्यासीका कुरा सुनेर पूरै भड्किएका थिए । उनले पुनः एकपटक राजासँग बिन्ति गरेर मनाउन कोशिस गरिन् । "बुबा, मैले सुनेकी थिए जसले मूर्खका कुरा सुन्छ उ पनि मूर्ख नै हुन्छ । जसले बच्चाको कुरा सुन्छ त्यो बच्चा जस्तै हुन्छ । म डराएकी छु कि गुणको कुरा सुनेर हजुर यस्तो हुनुभयो । हजुरको जनरल अल्लातले पूजन्मको राम्रो कामको फल पाइरहेको छ र यो सकिनासाथ उ सिधै

नर्क जान्छ । त्यो भिखारी जुन छ त्यो पूर्वजन्मको कुनै खराब कामको कारण मागेर खानु परिरहेछ तर जब त्यो खराब कामको दुःख समाप्त हुन्छ अनि उसका दुःखका दिन सकिन्छन् । पूर्वजन्म र यो जन्मका असल कर्मका कारण जुन पुण्य जम्मा भएका छन् त्यसको प्रभावले उनको जीवनमा स्वर्गीय आनन्द ल्याउनेछ ।

चित्र : नारदले रुजाको पुकार सुनी उनलाई सहयोग गर्दै ।



तब रुजा आफैले आफ्ना सात जन्मका कुराहरु भनिन् । उनी पूर्व जन्ममा कामीको छोरा थिए । उसले दुष्ट साथीसँग मिलेर एउटी महिलाको बलत्कार गऱ्यो । त्यसले अर्को जन्ममा खसी पारेको बोको हुनपऱ्यो । एउटा बाँदर जसको बाबुले क्रुरतापूर्वक आफ्नो छोराको अण्डकोष निकालेको थियो उसले नपुंसक हुनु पऱ्यो । राजाले आफ्नी छोरीलाई माया गरे पनि छोरीका पूर्वजन्मका यस्ता उदाहरण र तर्कले राजालाई कुनै प्रभाव परेन । उनका धारणामा कुनै परिवर्तन आएन । रुजा त्यसपछि दरबारको एक छेउतिर गइन् र घुँडा टेकेर आफ्नो हातलाई आफ्नो टाउको माथि राखेर ब्रह्मलोकका दशै दिशाका देउताहरुलाई श्रद्धापूर्वक पुकार गरिन् र मेरो बुबालाई सद्बुद्धि देऊ भनिन् ।

त्यो बेलाका बोधिसत्व जसको नाम नारद थियो । उनी त्यो समयका ठूला ब्रह्मा थिए । उनी स्वर्गको आफ्नो कुर्सिबाट पृथ्वीतिर हेरिरहेका थिए । उनले रुजाका पुकार सुने र उनलाई सहयोग गर्ने निश्चय गरे । पृथ्वीमा आउनु अगाडि उनले विचार गरे कि म बाहेक अरु कसैले पनि राजाको शंका निवारण गर्न सक्दैन । म फरक रुपमा जानुपर्छ ता कि मेरो रुपले राजालाई प्रभाव पर्न सकोस् र मेरा

कुराले उनको ध्यान तान्न सकोस् । राजा अंगति सन्यासलाई बढी महत्व दिन्थे । त्यसैले नारदले सन्यासी मध्ये सबैभन्दा प्रभाव पार्न सक्ने सन्यासीको लुगा लगाए । उनले विश्वास  गरे कि अब उनले मेरा कुरा राम्ररी सुन्नेछन् ।

नारदले चतुर्मुखी ब्रह्माको भेष धारण गरे । कलेजी रंगको लुगा लगाए । कालो छालाको गम्चा एउटा काँधमा राखे । उनले काँधमा एउटा सुनको भार बनाएर दुईतिरै भिक्षा माग्ने कमन्डलु राखे । मोतिका दाना उनेर ती कमण्डलुहरु भारमा बाँधिएका थिए । उनको कपाल तपस्वीको जस्तो लट्टा भित्रबाट सुनका चिम्टीले चेपिएको थियो । हावा लागेको बेला बादललाई छिचोल्दै जसरी चन्द्रमा अगाडि बढ्छ त्यसरी नै उनी आकाश मार्गबाट उडेर आए र हावामै रोकिएर राजाको अगाडि उभिए ।

चित्र : नारद ब्रह्माको भेषमा राजालाई अर्ति दिदै ।



रुजा राजाको छेउमा नै बसिरहेकी थिइन् । उनले ब्रह्मालाई तुरुन्त चिनिहालिन् र उनले झुकेर श्रद्धापूर्वक ढोगिन् तर राजा भने स्वर्गीय उपस्थितिले छक्क परेका थिए । उनी राजगद्दीबाट तुरुन्त ओर्लिए र चिच्याए “तपाई को हो, कहाँबाट आउनु भएको ?” नारदले नम्रतापूर्वक भन्नुभयो “राजा अंगति, म महाब्रह्मा हुँ र म तिमीलाई अर्ति दिन ब्रह्मलोकबाट आएको हुँ ।” राजा अंगति तिमी आफै नर्क जान खोजिरहेका छौ । अंगतिले भने “मेरो विचारमा स्वर्ग र नर्क भन्ने ठाउँ छैन । यो प्रमाणित गर्नुहुन्छ भने मलाई ५०० वटा सुनका टुक्रा दिनुहोस् । म गलत भएछु भने म हजुरलाई १००० वटा सुनको टुक्रा नर्कबाट फिर्ता गरौला ।“

राजाको यस्ता कुरा सुनेर नारदले उनलाई यसरी चेतावनी दिए “तिमीले राम्रो काम गर्ने भएको भए म तिमीलाई सुन सापटी दिन्थेँ होला । स्वर्गमा सुनका हजार टुक्रा संकलन गर्न त्यति गाह्रो छैन, तर तिमी जस्तो मान्छेलाई हामी दिन इन्कार गर्छौं । शास्त्रका राम्रा कुरा नमान्ने, गलत सिद्धान्त मान्नेले नर्क त जानै पर्छ । ल सुन्नुहोस् नर्कको विषयमा म बताउँछु । नर्कमा कसैले पनि कुनै व्यक्तिबाट लिन सक्दैन । त्यसमा पनि त्यहाँ एउटा मात्र नभई हजारौं नर्कहरु छन् । सिंह देखि मुसा सम्मले तिम्रा  छाला चपाउने छन् । तिम्रा हाडहरु चपाउने छन् । काला कागका बथानले, चिल, गिद्दले तिमीलाई चिथोरेर खाने छन् । फलामे दाँत गरेका कुकुरले तिम्रो शरीर च्यातेर खानेछन् । अति कडा बाफमा, धारिला पहाडमा, बलिरहेका कोइलामा तिमीलाई यातना दिई राखिने छ । त्यस्तै तरबार जस्ता पात भएको रुखमा तिमीलाई यातना दिई राखिने छ ।

नारदका यस्ता करा सुनेर अन्त्यमा अंगती डरले थरथरी काम्न थाल्यो । उसले बोधिसत्वलाई हेऱ्यो र सहयोगको लागि अनुरोध गऱ्यो । अनि कसरी उसको मनमा रहेका शंकाका बादलहरु हटाउन सकिन्छ र कसरी आफूलाई पहिलाकै चेतना फर्काउन सक्छु भनी राजा अंगतिले बोधिसत्वलाई विन्ती गर्नुभयो ? तब बोधिसत्व नारदले भन्नुभयो “अहिले तिमी राजा छौं, तिम्रो स्वास्थ्य राम्रो छ, तिमीले राज्यका उत्तरदायित्वहरु बहन गर्नुपर्छ । गरीब, भोकमरीमा परेका, बृद्धबृद्धाहरु र ब्राह्मणलाई दान दिनुपर्छ । तिम्रो मनले शरीरलाई पथप्रदर्शन गर्न सकोस् । निश्चित हौ कि, तिमी आफैले यस्ता विकृतिहरुको प्रतिरोध गर्न सक्ने हुनेछौं । त्यसपछि मात्र तिमीले स्वर्गको बाटो पाउने छौ । तिम्री छोरीले तिमीलाई सही बाटोमा लगाउन सिकाउने छिन्  । राजा अंगतिले नारद बोधिसत्वसंग क्षमा मागे र उनकी छोरी रुजाले बोधिसत्वलाई झुकेर अभिवादन गरिन् । कृतज्ञता जाहेर गरिन् । त्यसपछि ती महाब्रह्मा  (नारद) ब्रह्मलोकमा फिर्ता भई गए ।

(मौलिकः महानारद जातक, कथा नं. ५४४)

स्रोतः http://www.buddha-images.com)

## यो कथाबाट प्राप्त शिक्षा

- **समभाव पारमिताः** यो कथाको मुख्य शिक्षा भनेकै समभाव हो । मानिसले सबैसंग समभाव राख्नुपर्छ भन्ने नै हो । रुजाले आफ्ना बाबु अंगतीले धेरै माया गर्दा र उनी मार्फत सुनका सिक्का गरीवलाई बाँडदा र उनका बुबाले उनलाई बेवास्ता गर्दा पनि उस्तै भाव राखिन् । उनले सैनिक

जनरलको भोगवादी र भिखारीको आध्यात्मवादी दर्शनमा पनि समभाव राखिन् । राजा अगति संन्यासीको कुरा सुनेर भोगबादी भएपछि रुजाले उनलाई निकै सम्झाइन् । तर पनि राजा अगतीले मानेनन् । त्यसपछि उनले ब्रह्मालाई पुकार गरिन् । रुजाले हिंसकप्रति पनि समभाव राखिन् । त्यसैकारण महानारदले रुजाको पुकार सुनेर सहयोग गरे ।

- **दान र परोपकारी पारमिताः** दान पारमिताकै कारण रुजामा यति शक्ति थियो कि उनको पुकार सुनेर नारदले ब्रह्मको रुप धारण गरेर राजा अंगति कहाँ आउनु भयो र उनलाई धर्मदेशना दिनुभयो । नारदले राजालाई दानको महत्व सिकाउनुभयो । त्यसपछि राजा अंगतिले पहिला जस्तै दान गर्न थाल्नुभयो र नर्क जानबाट जोगिनुभयो ।

- **प्रज्ञा पारमिताः** स्वर्गमा मात्र सुन पाइन्छ, नर्कमा सुन पाइदैन । त्यसैले तिमीले सुनका टुक्राहरु तिर्न सक्दैनौ । नारदले ब्रह्मको रुप धारण गरेर राजा अगतिलाई धर्मदेशना दिनुभयो । रुजाले पनि आफ्ना बाबु अगतिलाई धर्मदेशना दिनुभयो । प्रज्ञा प्राप्त गर्न ध्यान, ज्ञान र दानको महत्व बताउनुभयो । जनरल अल्लातले पूर्वजन्मको राम्रा कामको फल पाईरहेको छ । त्यो सकिए पछि ऊ सिधै नर्क जान्छ । भिखारीले पूर्व जन्मका थोरै कुकर्मका कारण मागेर खानु परिरहेको छ । अब उसका दुखका दिन सकिए । अब उसले स्वर्गीय आनन्द प्राप्त गर्छ । त्यसैले क्षणिक कर्मफल हेर्नु हुदैन् । तसर्थ असल कर्म (पुण्य) गर्नु भएको छ भने त्यसले आनन्द ल्याउछ । गलत कर्म गर्नु भएको छ भने त्यसले दु:ख ल्याउछ । रुजा परोपकारी कर्ममा बिश्वास गर्थिन् जसको कारण उनलाई मात्र होइन उनका बाबुलाई समेत नर्क जानबाट बचाइन् ।

- **कर्म अनुसारको फलः** पूर्व जन्ममा महिलालाई बलात्कार गरेकाले नै अर्को जन्ममा खसी भएर जन्मनु पऱ्यो । अन्डकोष निकाल्ने बाँदर नपुंसक भयो । सबैले कर्म अनुसारको फल भोग्नुपर्छ ।

- **धैर्यता पारमिताः** जसले जे भन्यो त्यसको पछि पछि लाग्नु हुदैन । क्षणिक कुरा भन्दा पनि पछि सम्मको कुरा हेर्नुपर्छ । धैर्यता राख्न सक्नुपर्छ ।

  अरु शिक्षा पाठक बर्गले पत्ता लगाउनु हुनेछ ।

# विदुर पण्डित जातक

हजारौं वर्ष अघि कुनै समयमा विदुर पण्डित नाम गरेका ऋषि मानिसको रुपमा पृथ्वीमा अवतरित  भएका थिए । उनी असाधारण ज्ञान र प्रज्ञा प्रप्त व्यक्ति थिए । उनको जीवनको उद्देश्य चाही सत्य कुरा बोल्नु थियो । मानिस बचनबद्ध हुनु पर्छ र बोलेको कुरा पूरा गर्नुपर्छ भन्ने नै उनको मुख्य तर्क थियो । उनी इन्द्रप्रस्थ शहरका राजा धनन्जयका प्रमुख सल्लाहकार थिए । विदुरले आफ्नो जन्मको उद्देश्य राम्ररी पूरा गरेका थिए । उनको चतुर जिब्रोमा यस्तो शक्ति थियो कि त्यस क्षेत्रका एक सय एक राजाहरुलाई उनको मीठो बोलीले मन्त्रमुग्ध बनाएका थिए  जसको कारण  उनीहरु विदुरलाई भेटेपछि आफ्नो राज्यमा फर्किएर जान नै बिर्सिन्थे । उनको कीर्ति सुवास टाढाटाढा सम्म फैलिएको थियो । उनलाई टाढाटाढाका धेरै व्यक्तिहरुले चिन्दथे ।

एकजना महिलाले आफ्ना श्रीमान्बाट एक जना अतुलनीय ऋषिका बारेमा सुनेकी थिइन् । उनी ती ऋषिको प्रवचन सुन्न लामो समय देखि प्रतिक्षारत थिइन् । तर महिला भएकैले एक्लै ऋषिलाई भेट्न जान सकिनन् र उनले  आफ्ना श्रीमान्लाई ती ऋषिलाई बोलाएर उनको घरमा ल्याउन अनुरोध गरिन् । ती महिलाले विरामी भएको अभिनय गरेर ती ऋषिलाई विरामी सुतेको बेडमा नै ल्याउन लगाइन् । उनले ठूलो स्वरमा विलाप गरेर भनिन् “एउटा चिजले मात्र मलाई निको बनाउन सक्छ । ए नागराजा, “विदुर ऋषिको मुटुले मात्र मलाई निको बनाउन सक्छ” उनले चिच्याएर भनिन् । हजुरले विदुरको हृदय ल्याइदिनुहोस् नत्र म मर्छु ।“

ती राजा धेरै उदास भए र एकछिनमा नै बूढोजस्तो देखिए । जसरी कमलको फूललाई मानिसले छुने बित्तिकै ओइलाउछ त्यसै गरी राजा पनि ओइलाए । त्यस्तो बाचा कसरी पूर्ति गराउने ? को सँग यस्तो ढुङ्गा जस्तो मन र हृदय हुन्छ  जसले आफ्नी श्रीमती बचाउन अर्काको मुटु माग्नृ जस्तो नीच कर्म गर्न सक्छ । तर जे जसरी भएपनि ती राजा आफ्नी रानीलाई बचाउन चाहन्थे । ती ऋषिका साथी

भएको भए ती साथी मार्फत त्यो कुरा ऋषिमा राख्न सकिन्थ्यो तर दुर्भाग्य ती ऋषिका कुनै साथी नै थिएनन् । त्यही बेला उनको नजर उनकी सुन्दरी छोरी राजकुमारी इन्द्रादतीमा पर्‍यो र विदुरको हृदयलाई ल्याउन कुनै जुक्ति निकाल्न सक्छे कि भनेर उनले छोरीलाई लिन पठाए । विदुरको हृदय कसले अपहरण गरेर ल्याउन सक्छ भनेर खोजी गर्न पठाइयो । जसले विदुरको हृदय अपहरण ल्याउन सक्छ त्यही मेरो पति हुनेछ भनेर इन्द्रादतीले कबोल गरिन ।

राजकुमारी इन्द्रादती विभिन्न रंगका बास्नादार जंगली फूलहरु संकलन गर्न हिमालयमा गइन् । विभिन्न आकर्षक फूलहरु मिलाएर उनी आफैले गुच्छा र मालाद्वारा सुसज्जित एउटा विछ्यौना तयार पारिन् । त्यसपछि उनले आकर्षक नाचगान प्रस्तुत गरिन । के भगवान, के मानिस, के गन्धर्व , के ऋषि, के नाग र के याक्खा जसले मेरा इच्छाहरु पूर्ति गर्न सक्छ म आज राती नै त्यस व्यक्ति सँग विवाह गर्छु ।

त्यही समयमा कलापथ्थरको हिमालमा एकजना पुन्नाका नामका याक्खा वा राक्षस थिए । उनी आफ्नो जादुको घोडामा हिड्दथे । इन्द्रादतीको प्रेम प्रस्ताव सुनेर एकछिन रोकिए । इन्द्रादतीका कुरा सुनेपछि उनी आफ्नो बाटो छोडेर ती राजकुमारीको मनको राज्य लिन तिर लागे । उसले ती राजकुमारीको हृदय प्रेमले भरिदिए र उनलाई प्रेममा डुबाए । त्यसपछि दुवैजना विवाह बन्धनको लागि बावुको अनुमति माग्न गए । राजाले मनमनै विचार गरे कि मेरो योजनाले काम गर्ने भयो । तर राजकुमारीले पुन्नकालाई खुलेरै घोषणा गरिन् कि म एउटा सर्तमा मात्र पुन्नकासँग विवाह गर्छु । त्यो के भने पुन्नकाले विदुरको हृदय ल्याउनु पर्छ । पुन्नकाको लागि पनि आफ्नो जादुको शक्ति प्रमाणित गर्ने त्यो एउटा सुवर्ण मौका थियो । पुन्नकाले त्यो चुनौतीलाई स्वीकार गरे । उनले कपाल काटेर ठीक्कको बनाए, धेरै महँगा लुगाहरु लगाए । र कानदेखि टाउकोसम्म गरगहनाले सुसज्जित भए । त्यसपछि घोडा चढेर इन्द्रप्रस्थतिर लागे जहाँ विदुर बस्दथे । उनी शहरमा पुग्नु अगावै उसले त्यो ऋषिलाई कसरी जित्न सकिन्छ भनेर योजना बनाए । उनीसँग डायस(लंगुरवुर्जा) खेलेर जीत हासिल गर्ने कुरा सोचि सकेका थिए । त्यस खेलमा उनी राजा धनन्जयलाई समेत चुनौती दिन सक्थे । जब उनी शहरको ढोकामा पुगे । उनले भने “ए शक्तिशाली राजा, ल हजुर मसँग लंगुरवुर्जा खेल्न आउनुहोस् । यदि मैले हारेँ भने यो चमत्कारी जादुको घोडा र हिरामोती सबै तपाईको हुनेछ ।“ उनले त्यो चमत्कारी घोडाको दैविक शक्ति जस्तो कि पानीमा कुद्ने, आकाशमा उड्ने र खजुरको रुखको हाँगामा उभिने र साँगुरा शहरका गल्लीभित्र पनि छिरेर हिड्न सक्ने त्यसको विशेषता थियो । त्यसपछि खैरो र निलो रंगका अचम्म लाग्दा महँगा पत्थरलाई आफ्नो चमत्कार जस्तो कि जीवित

प्राणी सृजना गर्न, सूर्य चन्द्रमा र तारागणहरु सृजना गर्न आदेश दिए । पुन्नकाको ती चमत्कारी काम देखेर राजा लोभिनु भयो र लंगुरवुर्जा खेल्न राजी हुनु भयो । उनले भनेकी "मैले हारेमा मेरो शरीर र मेरो सेतो छाता बाहेक सबै तपाईको हुनेछ ।"

त्यो लंगुरवुर्जा खेल्ने हलमा मानिसहरु भरीभराउ थिए । खेल खेल्न सम्पूर्ण बन्दोबस्त मिलाइएको थियो । अरु राजाहरुलाई साक्षीको रुपमा आमन्त्रण गरिएको थियो । लंगुरबुर्जा बोर्ड तयार गरियो र दुवैजना खेल्न तयार भए । पुन्नकाले भने राजा तपाई पहिले हान्नुहोस् । राजाले पहिला गोटीहरु हल्लाएर हाने तर अचम्म भयो । राजाले लंगुरवुर्जाका गोटीहरु जादुका कारण आफू विरुद्ध पल्टिएको देखे । उनी पूर्णरुपले न सपना न विपनाका जस्ता भए । उनी यस्तो खेलमा कहिल्यै पनि बसेका थिएनन् । उनका अभिभावक जस्तो कि उनकी पूर्व जन्मकी आमा नै देवी थिइन् । मेरो छोराले जित्छ भनेर माथिबाट हेरेर बसेकी थिइन् । त्यो बेला उनले केबल दर्शक बनेर हेर्नु भन्दा केही पनि गर्न सक्नु भएन । केबल खेल नखेल यसमा तिमीले सोचेको भन्दा विपरीत हुन्छ मात्र भन्नुभयो तर राजाले सल्लाह नमानी उनले लंगुरवुर्जाको गोटीहरु हल्लाएर खोले । दोश्रो पटक पनि नतिजा उनको विपरीत नै आयो । यो प्रमाणित भयो कि भगवतीले पनि उनलाई सहयोग गर्न सकिनन् । किनकि पुन्नकाको जादु भगवती भन्दा पनि शक्तिशाली थियो । त्यो भन्दा पनि राजाले देखेका थिए कि लंगुरवुर्जाका गोटीहरु आश्चर्यपूर्वक आफै पल्टिन्थे । उनी विरुद्धको शक्ति बलियो बनेर आइरहेको छ भने आभाष पाए । राजाका पछाडिबाट पुन्नकाले र राजाकी अभिभावक भगवतीको शक्तिक्षण गर्न उनले रिसाएका आँखाबाट ज्वाला पठाए । ती भगवती त्यो ज्वालाको खतराका कारण नजिकैको हिमालको टुप्पोबाट भागिन् । त्यसपछि त झन् पुन्नकाको विजय हुने नै भयो । तेस्रो पटक पनि उनले लंगुरवुर्जाका गोटीहरु हल्लाएर हाने । तेस्रो पटक पनि उनको हार नै भयो ।

त्यसपछि पुन्नकाको पाली आयो, उनले जित्ने नै भए । पुन्नका विजयले खुशी भए । ताली बजाए र कवोल बमोजिम तिर्न राजालाई अनुरोध गरे । राज्य नै जिते पछि त्यो राज्यका विद्ववान् समेत पुन्नकाको हुने नै भए । त्यसैले बाचा अनुसार पुन्नकाले विदुरलाई दिन अनुरोध गरे । राजाले रिसाएर विदुर दिनु रे भने । उनी मेरो सबैभन्दा विश्वासी परामर्शदाता हुन् । मेरो बल  नै विदुर हुन र उनी मेरो शरणमा रहेका छन् । राजा धनन्जय आफ्ना अमूल्य पण्डित विदुर गुम्ने भयले टोलाएर बसिरहेका थिए । पुन्नकाले चिच्याएर विदुरलाई भने "तिमी राजाका दास हौ वा राजाका सन्तान हौ ?" विदुरले इमान्दारपूर्वक उत्तर दिन्छन् भन्ने सोचेर उनले यसो भनेका थिए । विदुरले वडो शिष्टतापूर्वक भने कि "राजा हजुरले

मलाई त्यो दुष्ट याक्खाको हातमा सुम्पन सक्नुहुन्छ ।" त्यसपछि आफूलाई यक्खा समक्ष सुम्पनु अगाडी उनले आफ्ना परिवारका सदस्यहरु र नातागोतासँग विदा मागे । विदुरले आफ्ना छोरा र श्रीमतीलाई अर्ति र शिक्षा दिन अग्रिम अनुमति मागे । उनीहरुबाट विदा हुनु अगाडि उनले आफ्ना सिद्धान्तहरु बारे व्याख्या र विश्लेषण गर्न चाहन्थे । तेश्रो दिनमा उनले सम्पूर्ण सिद्धान्तहरुको वर्णन र विश्लेषण गरे । जे भन्नु थियो सबै भने । अनि उनले परामर्शदाताको पदबाट राजीनामा दिए । उनी, उनकी श्रीमती, छोरा, नोकर र साथीभाई सबै रोए र आफै थाकेर उनलाई विदा गर्न तल झरे ।

पुन्नकाले भन्यो "तिमी मेरो घोडाको पुच्छारमा बस । तिमीले अब जीवन मरणबाट पार पाउनेछौ । लामो यात्राले तिमीलाई पर्खीरहेको छ । तिमीले पुन यो संसार हेर्नु पर्ने छैन । बोधिसत्वले प्रभाव पार्ने तरिकाले नम्रतापूर्वक उत्तर दिनुभयो "म कुनै पनि जीवनबाट डराउदिन ।" उनले अझ अगाडि भने "मैले कसैलाई पनि हानी हुने काम मन, वचन र कर्मद्वारा गरेको छैन । त्यसैले कसैले पनि मेरो हानी हुने काम गर्दैनन् ।"

चित्र : विदुर घोडाको पुच्छरमा बसेर जाँदै ।



त्यसपछि उनले आफ्ना लुगा माथि सुर्किएर घोडाको पुच्छरमा झुण्डिएर बसे । पुन्नकाले विदुरलाई लतार्दै लतार्दै त्यो कालापत्थर पहाड पार गरेर चुचुरोमा पुगे । पुन्नकालाई लागेको थियो कि चट्टानको धारिला चुच्चा ढुँगाले र काँडाघारी रुखका हाँगा र काँडाले उनलाई कोरेर सख्त घाइते बनायो होला, तर विदुरलाई त्यस्तो केही भएन । विदुर बाँचिरहेकोमा उनी छक्क परे । त्यसपछि पुन्नकाले विदुरलाई मृत्युको डर देखाउन थाले । पुन्नकाले विभिन्न डरलाग्दा रुप देखाउन थाले । कहिले राक्षसको, कहिले सिंहको, कहिले जंगली हात्तिको त कहिले फणा फैलिएको विषालु सर्पको रुप देखाए तर पनि विदुर शान्तपूर्वक रहे । पुन्नकाको जति नै डरलाग्दा रुपले पनि उनलाई केही फरक पारेन ।

पुन्नका जादु गरी प्रकृतिको रुप बदल्न माहिर थिए । उनका बन्दी विदुरलाई ती कुनै डरलाग्दा रुपले अत्याउन सकेन । यसरी केही शिप नलागेपछि पुन्नकाले अब म आफ्नै हातले यसको हत्या गर्छु भन्ने सोचे । उनले एक निमेष मै ऋषिलाई नियन्त्रणमा लिए र त्यो पर्वतको टाकुरामा उभिए । पुन्नकाले विदुर ऋषिलाई उधो मुन्टो लगाएर झुण्ड्याए र पर पहाडमा उनको टाउको बजार्नका लागि तयार भए । त्यसपछि मात्र बोधिसत्वले आफ्नो शरीर सम्बन्धी प्रज्ञा र ज्ञानलाई प्रयोग गर्नुपर्छ भन्ने सोचे । त्यसपछि आफूलाई मार्न तयार भएका पुन्नकालाई उनले शान्तपूर्वक सोधे । मलाई मार्नु पर्ने कारण के हो ? जब पुन्नकाले सबै कुरा बताए तब बोधिसत्व विदुरलाई थाहा भयो कि नागरानीको अनुरोधलाई पुन्नकाले गलत तरिकाले बुझेका रहेछन् ।

मेरो मुटु ल्याउन लगाउनु भनेको कुरालाई गलत अर्थमा बुझेका रहेछन् । उनको अर्थ मेरो भौतिक मांसपेशीले बनेको मुटु ल्याउन भनेको हैन, उनले त मेरो प्रज्ञा भएको हृदय पो ल्याउन लगाउनु भएको हो । विदुरले भने ।

विदुरले पुन्नकाको आशय बुझेपछि उनलाई भने "पहिला मेरो शिक्षा सुन्नुहोस । त्यसपछि म मेरो मुटु दिन सक्छु ।" पुन्नका घोडाबाट ओर्लिएर भुईमा बसे । त्यसैबेला एउटा सजिसजाउ भएको गद्दी विदुरको तल आइपुग्यो, पुन्नका विदुरको खुट्टा मुनि बसे र विदुरको शिक्षा सुने । पुन्नकाले आफ्ना हातहरु ध्यान मुद्रामा राखे । त्यसैपछि आफूले विगतमा गरेका सबै कुकर्महरुसम्झिएर पश्चात्ताप गर्दै अष्टाङ्ग मार्गमा लागे । उनले आफ्ना बन्दी विदुरलाई छोडिदिए । तर पनि उनी तुरुन्त आफ्नो राज्यमा नफर्किई नागराज्यमा जुन असमझदारी सृजना भएको थियो, त्यही समाधान गर्न गए । नागराज्यको चम्किलो नागदरबार नदेखिए सम्म बोधिसत्व विदुर पनि त्यही पुन्नकाको घोडामै सँगसँगै बसी जानुभयो । त्यो राज्य

कस्तो थियो भने चारैतिरबाट समुद्रले घेरेको अजीवका प्राणी बास गरेको स्थान थियो ।

राजदरबारको गद्दीको बीचमा बोधिसत्व विदुर बसेका थिए । त्यसको वरिपरी नागराजा र नागरानी उनका छोरी इन्द्रादती र पुन्नका बसेका थिए । सम्मानित ठाउँमै बसेर उनले प्रज्ञा र उनको हृदयका सबै कुरा सबैलाई बुझाए । उनले आफ्नो जीवनको कुनै पर्वाह गरेनन् । उनले पूर्ववत् शिक्षा प्रदान गरे । जब नागराजाले विदुरको प्रज्ञा प्राप्त गरे उनले विदुरको मांसपेशीले बनेको मुटु चाहनु भएन र नागरानीको कुरालाई गलत रुपमा बुझेर यस्तो भयङ्कर खतराजनक अवस्थाको सृजना भयो भन्ने बुझे । जसलाई शब्दमा उतार्न सकिदैन । नागराजा र नागरानी मात्र नभएर सबैले विदुरको प्रज्ञा प्राप्त गरे । सबै प्रश्नहरु समाधान भएपछि राजाले आफ्नी छोरी इन्द्रादतीलाई याक्खा पुन्नकासँग विवाह गरिदिए । त्यसपछि विदुरलाई राजप्रसादभित्र नै ऋषिको पद प्रदान गरे । त्यसपछि पुन्नकाको घोडामा चढेर उनका दुलाहा र दुलही इन्द्रप्रस्थतर्फ प्रस्थान गरे ।

(मौलिकः विदुर पण्डित जातक कथा नं. ५४५)

स्रोतः http://www.buddha-images.com

## यो कथाबाट प्राप्त शिक्षा

- **सत्यवादिता पारमिताः** यो कथाको मुख्य शिक्षा भनेको मानिसले सत्य बोल्नुपर्छ भन्ने नै हो । बुद्धधर्ममा शीलको ठूलो महत्व छ, त्यसमा पनि सत्य बोल्नु नै ठूलो पारमिता हो । विदुर सत्यबादी थिए र बचनबद्ध पनि थिए । त्यसैले उनले भने “मलाई यक्ष समक्ष समर्पण गर्नुहोस् । म उनको दास हुन तयार छु ।“ बोलेको कुरा पूरा गर्नुपर्छ भन्ने नै उनको मुख्य तर्क थियो ।
- **ज्ञान र प्रज्ञा पारमिताः** यो कथाको अर्को शिक्षा भनेको प्रज्ञा पारमिता संग्रह गर्नुपर्छ भन्ने नै हो । राजकुमारीले विदुरको मुटु ल्याउनु भन्नुको अर्थ मेरो मांसपेशीले बनेको मुटु ल्याउन भन्नुभएको हैन, उनले त मेरो प्रज्ञा भएको हृदय पो ल्याउन लगाउनु भएको हो भनेर विदुरले व्याख्या गर्नुभयो । उनको मुटु मैत्री पारमिताले भरिपूर्ण थियो ।
- **सहनशीलताः** पुन्नकाले विदुर ऋषिलाई लामो समय सम्म लतालेर लगे । उधो मुन्टो लगाएर झुण्ड्याए घिसारे तर पनि विदुर ऋषिले सहेर बसे । उनले आफ्नो जीवनको कुनै प्रर्वाह गरेनन् । उनी सहनशील भए ।

अरु शिक्षा पाठक बर्गले पत्ता लगाउनुहुनेछ ।

# महोसदा जातक

कुनै समयमा राजा विदेह मिथिलामा राज्य गर्थे । उनले आफ्नो राज्यमा चार जना विद्वान ऋषि राखेका थिए । उनीहरुको सल्लाह अनुसार नै राजा विदेहले राज्य सञ्चालन गर्दथे । विहान हुनै लागेको अवस्थामा राजा विदेहले अचम्मको डरलाग्दो सपना देखेर बिउझिए । उनले पूरै विश्वका चारवटै छेऊबाट आगोका राँको उठेर चारतिरै सल्किरहेको देखे । विदेहले त्यो आगोको लप्काले दरवारका सबै खम्बाहरु समातेको  र आगोको ज्वाला बढ्दै गरेको देख्नुभयो । त्यही बेला त्यो आगोको ज्वालाबाटै धेरै व्यक्ति बाहिर निस्किरहेका थिए । तर कस्तो अचम्म भने त्यो आगोको ज्वालाले कसैलाई पनि पोलेन । यस्तो सपना देखेर बिउँझेपछि राजा डराएर यो सपनाको अर्थ के हुन्छ भनी धेरै ऋषिसँग परामर्श गरे । चारै जना ऋषिहरुले भने कि हामी भन्दा पनि चतुर पाँचौ ऋषिको अभ्युदय हुँदैछ भनी व्याख्या गरे । आगोको चारवटा राँकोको अर्थ हामी ४ जना ऋषि हौं । ती चारवटै राँकाहरु बढ्दै गएर एउटा ठूलो राँकोमा मिलेको अर्थ सबै ज्ञानहरु अब पाँचौ ऋषिमा गएर मिल्छ र त्यो नै ज्ञान र प्रजाको मूल प्रबाह हुन्छ । नभन्दै त्यही राज्यको मिथिलाको पूर्वीपट्टिको ढोकाको छेउमै बस्ने एकजना धनाढ्य व्यापारीकी सुमना नाम गरेकी श्रीमतीको गर्भमा ती बोधिसत्व आउनु भयो । त्यही समयमा ती बोधिसत्वको राम्रो हेरचाह होस् र खेल्ने साथीहरु हुन् भनी अरु एक हजार धनाढ्य व्यक्तिका श्रीमतीहरु समेत गर्भवती भए ।

नौ महिनापछि सुमनाले सुनौलो रंगको बच्चालाई जन्म दिनुभयो । ती बालकको नाम महोसदा राखियो । आफ्नी आमालाई प्रसव व्यथाको पीडा नहोस् भन्नाका लागि उनले गर्भदेखि नै हातमा जडिबुटी लिएर जन्मेका थिए । अचम्मका कुरा त के भयो भने उनलाई हेर्न आउने जति पनि महिलाहरु थिए तिनीहरु सबैको रोग पनि निको भयो ।

जति जति महोसदा बढ्दै गए उतिउति उनमा प्रज्ञा र ज्ञान पनि बढ्दै गयो । सात बर्षको हुँदा नै उनले इन्जिनियरिङ सीपको प्रदर्शन गरे । जसले उनको राज्य र राजालाई ध्वंश  हुनबाट बचाए । उनले एउटा कमलको फूलले ढाँकेको ठूलो तलाऊ बनाए र त्यसको बीचमा नै एउटा ठूलो सभाकक्ष र अरु धेरै कोठा भएको

एउटा भव्य भवन निर्माण गरे । त्यहीँ बसेर समस्यामा परेका व्यक्तिहरुलाई समस्या समाधान गर्न सरसल्लाह प्रदान गर्थे । उनको बाल्यावस्था शान्त र आनन्दपूर्वक बित्यो, उनले बोधिसत्वको रुपमा धेरैलाई दर्शन दिए ।

त्यो सपना सम्झेर राजा विदेहले ती महोसदालाई उनको दरबारमा ल्याए । महोसादालाई पत्ता लगाई उनलाई राजदरबारमा ल्याउन चारजना ॠषिहरुलाई आदेश दिए । तर ती चारै जना ॠषिहरुले उनको प्रारब्धलाई बुझेर उनलाई राजदरबारमा ल्याउन हिचकिचाई रहेका थिए । कारण उनको प्रज्ञा र ज्ञान साथै चतुरताका कारण उनीहरु राजदरबारमा तल पर्ने वा ओझेलमा पर्ने निश्चित थियो । उनीहरुमा इर्ष्या जागेर आयो र उनलाई नल्याउनका लागि धेरै तानावाना र षडयन्त्र रचे । सबै ॠषिहरुले एकै स्वरले उनलाई टाढा राख्न राजालाई सरसल्लाह दिए । ॠषिहरुले जति नै जालझेल रचे पनि महोसदा बोधिसत्वले तिनीहरुलाई भत्काई/विफल पारी अन्त्यमा राजदरबारमा आइपुग्नुभयो ।

धेरै बर्षसम्म महोसदाले राजा विदेहलाई आध्यात्मिक र भौतिक विकासमा राय सल्लाह प्रदान गर्नुभयो । त्यही समयमा पुराना अविश्वासी ॠषिहरुबाट हुने चुक्लीलाई रोक्नका लागि पनि सतर्कतापूर्वक काम गर्नुभयो । तर पनि वहाँले ॠषिहरुका इर्ष्यालु क्रियाकलापलाई कौशलतापूर्वक रोक्दै राजा विदेहलाई ठीक तरिकाले व्यवहारहरु सिकाउदै जानुभयो ।

ती राजाको प्रवृत्ति बच्चाको जस्तो भए परिणाम नहेरी आफ्नो राय सल्लाह अनुसार व्यवहार गर्न सुझाव दिनुभयो । त्यसैबेला पापी केवट ॠषिले आफ्नो नेतृत्वमा सय जना राजाहरुलाई एकीकृत गरी भारतबर्ष भरी विजय गर्ने योजना बनाए । तर महोसदा त्यति लाटो हुनुहुन्नथ्यो । वहाँले मिथिलाको सुरक्षालाई अझ मजबुद बनाउनुभयो र केवटका अधिकारीहरु भएको ठाउँमा आफ्ना जासुसहरु पठाउनुभयो । यस प्रकार वहाँ जुनसुकै चुनौति सामना गर्न सक्षम हुनुहुन्थ्यो । वहाँ मिथिला राज्यमा चारैतिरबाट सैनिक आक्रमण भए पनि विफल बनाउन सक्षम हुनुहुन्थ्यो ।

जब शक्तिशाली फौजले शहरलाई आक्रमणको निशाना बनाए, उनीहरुलाई स्वागत गर्न पर्वमा बजाइने अभिवादनका स्वरहरु गुन्जाइएका थिए । प्रजाहरुमा डर थिएन । दुष्मन राजाहरुले मिथिला जाने पानीका पाइप काट्न लगाए । महोसदाले एउटा ठूलो झरना बनाउने र त्यहाँबाट निस्केको ठूलो परिमाणमा पानी शहर बाहिर पठाउने योजना राजालाई सुनाउनु भयो । पानीको समस्या निराकार गर्न मिथिलामा गहिरा इनार र ठूला तलाउ/सागर बनाउन लगाउनुभयो । अर्को कदम मिथिलालाई भुखमरीबाट बचाउनु भयो । दुष्मनका फौजहरु

भोकाएका हुन्छन् र उनीहरुले त्यो अन्न खान पाउन भनेर मिथिलालाई खान पुगी बाँकी रहेको अन्नका बोरालाई पर्खाल माथि राखी दिनुभयो । त्यो देखेर एक सय एक राजाहरु छक्क परे । दुष्मनले मिथिला जाने सबै जर्ना (दाउरा) रोक्ने अर्को रणनीति बनाए । तर त्यो पनि सफल हुन सकेन । महोसदाले दाउराका भारीहरु पर्खाल माथि राखि दिनभुयो । दुष्मनले यो बुझुन् कि मिथिलामा बाल्नका लागि प्रशस्त दाउरा छ र बढी भएको भारी पर्खाल माथि राखिएको छ ।

चित्र :युद्धको दश्य



शहर कब्जा गर्न दुष्मन राजाहरुले आफ्नो सैन्य बललाई दुई गुणा बढाए तर पनि केही गर्न सकेनन् । बोधिसत्व महोसदा दरबारका ठूलठूला पर्खालका बीचमा बनाएका प्वालबाट उनीहरुले गरिरहेका क्रियाकलापहरु नियालेएर हेरिरहनु भएको थियो । सबै रणनीतिहरु विफल भएपछि अन्त्यमा केवटले अन्तिम उपाय निकाले । हामी  ढोकाको बाहिर भेला हौँ ता की महोसदाले हामीलाई अभिवादन गरुन् । एउटा राजाले भने, म राजा हुँ र उनीभन्दा जेठो पनि छु । मेरो आज्ञा महोसदाले पालन गर्नुपर्छ । जसको आज्ञापालन हुन्छ, उसैको जीत हुन्छ । उनले अभिवादन गर्नु भनेको आज्ञापालन गर्नु हो । यो चाही यस्तो प्रतिस्पर्धा हो जसमा उसले जित्न सक्दैनन् । महोसदाले यस्तो अभिवादन चुनौतिको परिणाम के हुन्छ भन्ने तुरुन्तै महशुस गर्नुभयो र त्यो केवटको चालवाजीलाई पनि बुद्धिमानीपूर्वक

रोक्नुभयो । केवट ज्यादै लोभी थियो । त्यो लोभ थाहा पाएर महोसदाले अष्टमुखी (आठवटा भाग भएको) हिरा मोतीहरु ढोकाको अगाडि सूर्यको प्रकाशमा टल्किने गरि छरिदिनुभयो । आफ्ना शत्रुहरुलाई दिनका लागि उनले ढोका बाहिरको फोहर फाल्ने ठाउँमा गरगहनाहरु झारीदिनुभयो । केवट तुरुन्तै ती गरगहना टिप्न निहुरियो । जब उसले गरगहना टिप्न घुँडा टेकेको थियो त्यही बेला महोसदाले एक हातले उसको कठालो र अर्को हातले कम्मरमा समात्नुभयो ता की त्यो उठ्न नसकोस् । उसलाई समाएर महोसदाले चिच्याएर भन्नुभयो उठ्नुहोस गुरुजी ! उठ्नुहोस् । म हजुरभन्दा सानो छु । तपाईको नाती भन्दा पनि सानो छु । तपाईले मेरो आज्ञापालन गर्नु पर्दैन ? त्यो सुनेर एक सय एक राजाहरु डराए । यदि केवटले महोसदाको आज्ञा मानेको भए उनीहरु वास्तवमा युद्ध भन्दा अगाडि नै हार्ने थिए । उनीहरुले हात हतियार उठाउनु अघि नै कुलेलम ठोक्ने थिए ।

केवटले आफ्नो अपमान र डरका कारण तत्कालका लागि आफ्नो फौजलाई फिर्ता बोलायो । उसको भित्री योजना चाही महोसदा र राजा विदेहलाई हराउने षडयन्त्र बुन्नु थियो । अन्त्यमा उसले राजालाई पुरस्कार दिई उसको प्रभावमा राख्ने योजना बनायो । राजा कुलानीकी एउटी सुन्दरी छोरी थिइन् । उनको सुन्दरताको वर्णन गर्दै ती मिथिलाका नवयुवकले सुन्दरीका चित्रकला र कविता राजाकहाँ प्रस्तुत गरे । तुरुन्तै आवेश/जोशमा आएर उनले ती सुन्दरीलाई आफ्ना लागि बेहुली बनाउने निश्चय गरे । महोसदाको चेतावनीको (षडयन्त्र) बाबजुद आफ्नो मुर्खतामा परी उनी आफै कुलानीको राज्यमा जाने योजना बनाए । महोसदालाई थाहा थियो त्यहाँ राजालाई मार्ने षडयन्त्र रचिएको छ । अन्त्यमा वहाँले आफू मरेर पनि राजालाई सुरक्षा गर्ने निश्चय गर्नुभयो । राजा जानुभन्दा चार महिना अघि नै उहाँले आफू कुलानीको शहरमा जाने अनुमति माग गर्नुभयो र तुरुन्त कुलानीको शहरको भ्रमण गर्ने योजना बनाउनुभयो । राजाको भ्रमणबारे कुलानी र केवटलाई जानकारी दिन पत्र पठाउनुभयो । आफूसंग दरबार निर्माण गर्ने विशिष्ट कौशल भएका कारण उनले कुलानीको राजधानी नजिकै एउटा भव्य र चम्किलो दरबार बनाउने योजना बनाउनुभयो । यो सामान्य दरबार थिएन । त्यहाँ मानिसले नदेख्ने गरी मार्वलले र अरु सुन्दरताले सुसज्जित एउठा प्रवेशद्वार निर्माण गर्नुभयो । त्यहाँ देवताहरु भेला हुनका लागि सुसज्जित एउटा ठूलो सभाहलको निर्माण गर्नुभयो । त्यसका भित्ताहरुमा महंगा पेन्टिङ् र सजाउने कागज टाँसिएको थियो । त्यहाँ झुण्डिएका बत्तिहरुले जगमगाउँदो प्यासेज थियो । त्यो हलमा ८४ वटा ठूला ढोका र ६४ वटा साना ढोका थिए । ती ढोका औंलाले छुँदा नै खुल्ने र बन्द हुने गर्दथे । ती ढोकाबाट निस्किदा १०१ शयनकक्षमा पुगिन्थ्यो । त्यहाँ आफै बोल्लान् जस्तै देखिने सुन्दर महिलाहरुको शालिक राखिएको थियो । त्यो सुन्दर सुरुङबाटै

कुलानीकी सुन्दरी छोरी बस्ने कोठामा पुग्न सकिन्थ्यो र त्यो सुरुङ गंगा नदीको मुख सम्म पुगेर टुङ्गिएको थियो । त्यो सुरुङ शहरको पर्खाल  भन्दा केही टाढा थियो ।

जब सबै तयारी पूरा भयो, तव राजा विदेह कुलानीको शहर भ्रमण गर्न आइपुग्नु भयो । उनी त्यहाँ आउँदा खतरा हुन्छ कि भन्ने अनुसन्धान गर्नु थियो । नयाँ बेहुली लिनका लागि वहाँ नयाँ दरबारभित्र पर्खेर बसिरहनु भएको थियो । वहाँले कुलानीका धेरै सेनाहरु दरबार बाहिर भेला भएको देख्नुभयो । राजाले महोसदाको चेतावनीलाई वेवास्ता गरी कुलानीको शहरको भ्रमण गर्ने योजना बनाएका थिए त्यसैले वहाँले उनका ४ जना बूढा ऋषिसँग प्रश्न सोध्नुभयो । राजा महोसदाको सल्लाह लिन हिचकिचाइरहेका थिए । प्रत्येक ऋषिले शत्रुको सेनाद्वारा मारिनु भन्दा बरु आत्महत्या गर्नु नै उत्तम विकल्प हो भने र टाउको हल्लाए ।

अन्त्यमा उनी महोसदा तर्फ फर्किए र राजाले सहयोग गर्न अनुरोध गरे । केही समय महोसदा आफू केही गर्न नसक्ने जस्तो वहाना बनाएर मौन बस्नुभयो । ता की राजाले उनी प्रति पूर्ण विश्वास गरुन् । अन्त्यमा वहाँले भागेर जाने सुरुङ् देखाइदिनुभयो र राजा विदेह र उनका सहयोगी त्यो कोरिडोरबाट उम्कन सफल भए । त्यही बेला महोसदाका सेनाहरु त्यो सुरुङ्गबाट घिस्रिदै कुलानीको दरबारतिर आउदै थिए । दरबारको भित्री कोठामा पुगेर उनीहरु राजा कुलानी कै शाही सैनिक भएको बताइरहेका थिए । त्यो भव्य सुन्दर सुरुङ देखेर सुन्दरी राजकुमारी र उनका सहयोगी त्यो सुरुङमा पसे । उनीहरु त्यो कोरीडोर हुँदै असाध्यै महँगो र सुन्दर कोठाहरुमा पुगे । प्रत्येक कोठा पहिला देखेका कोठा भन्दा औधी राम्रा थिए । अन्त्यमा उनीहरु सुरुङ नै सुरुङ हुँदै एउटा गुफामा पुगे जहाँ राजा विदेह र उनका सल्लाहकार बसिरहेका थिए ।

जे भए पनि पहिलो सतर्कतामै सुन्दरी राजकुमारीले आफू अपहरित भएको महशुस गरिन् । उनी र राजा विदेह बीच विवाह भयो । उनीहरु आफ्ना सेवा सुसारे सहित हतार हतारले छिटो दौंडिई हात्तिमा चढी मिथिला फिर्ता भए ।

सैनिकहरुले कुलानीको दरबारका बहुमूल्य सरसामानहरु पनि आफुसंगै ल्याए । उनीहरुले आन्तरिक सुरक्षामा खटिएका गार्डलाई पाता फर्काएर बाँधी राखे र उनीहरु पर्खाल बाहिर फाल हानी निस्किए । कसरी त्यो षडयन्त्र विफल पारियो ? कसरी त्यो भव्य महल बन्यो र उनलाई बचाउन सकियो भनी राजा कुलानीलाई भन्न उहाँ आफ्नो शहरमा फर्किनुभयो । जब राजाले आफ्नी छोरी नभएको र राजा विदेह पनि त्यहाँ नभएको साथै महोसदा गइरहेको देखे । तब कुलानी सुरक्षा सहित सुरुङभित्र आए । त्यहाँका मार्वलहरु देखे र आश्चर्यचकित भए । अन्त्यमा

उनीहरु गुफाको मुखमा पुगे । त्यही बेला महोसदाले लौ आइज भनी तरबार निकाले, उफ्रिएर कराए भारतका शत्रु राज्यहरु कुन-कुन हुन् ? राजा कुलानी ज्यादै डराएर, बोल्न सकेननन्, घुँडा टेकेर डरछेरुवा भै मौन रुपले आफू पराजित भएको स्वीकारे । आफ्नो तरबार छेउमा राखे र दुईबीच मैत्रीपूर्ण सम्बन्ध कायम भएको घोषणा गरे । पापी केवट कता हरायो र त्यो फेरी कहिल्यै देखिएन । यसरी महोसदाले भारत भरी अनन्त शान्ति ल्याउनुभयो ।

(मौलिक कथा महाउमङ्ग जातक, कथा नं. ५४६)

(स्रोत: http://www.buddha-images.com)

## यो कथाबाट प्राप्त शिक्षा

- **प्रज्ञा पारमिता:** यो कथाको केन्द्रीय शिक्षा भनेको प्रज्ञा प्राप्त गर्नु नै हो । महोसदा चतुर ऋषि थिए । उनमा प्रज्ञा भएकैले आमालाई प्रसव पीडा नहोस् भनेर उनी जन्मदै पीडा नहुने जडीबुटी हातमा लिएर जन्मेका थिए । सात बर्षमै इन्जीनियरिङ्गमा निपूण भैसकेका थिए । महोसदाले मिथिलालाई भोकमरीबाट बचाउनुभयो । कुलानीकी छोरीको प्रेमको पासो थापेर राजालाई मार्ने षडयन्त्रबाट राजालाई बचाउनु भयो ।

- **वीर्य पारमिता:** महोसदा ऋषिसंग वीर्यता गुण थियो । चातुर्यता थियो । त्यसैकारण सारा भारत भरी शान्ति र मैत्री स्थापना गर्न सक्नुभयो । कुलानीको षडयन्त्र विरुद्ध वीरता र बुद्धिमत्तापूर्वक मुकाबिला गर्नुभयो र आफ्ना राजा र सेनाहरुलाई बचाउनुभयो ।

- **चतुरता:** यो कथाको अर्को शिक्षा भनेको चतुर हुनुपर्छ भन्ने हो । ऋषि महोसदा ज्यादै चतुर थिए । त्यही चतुरताका कारण नै उनले ४ ऋषिहरुमाथि विजय प्राप्त गरे । उनीहरुका सबै षडयन्त्रहरु असफल बनाईदिए । चतुरताकै कारण बाह्य आक्रमण समेत विफल पारिदिए । पापी केवटका सबै षडयन्त्रहरु बिफल बनाईदिए ।

- **समभाव:** महोसदा ऋषिसंग लोभ, द्वेष, मोह, आडम्बर केही पनि थिएन । राजाले राजकुमारीको मोहमा परी महोसदालाई मतलब गरेनन्, तर पनि उनले राजाप्रति कति पनि द्वेष राखेनन् । चार ऋषिहरुले उनलाई असफल बनाउन धेरै तिकडम गरे । तर उनले षडयन्त्रपूर्वक गरेनन् । उनमा ठूलो ऋषि हुँ भन्ने आडम्बर थिएन ।

अरु शिक्षा पाठकवर्गले खोज्नु हुनेछ ।

# भेषान्तर जातक

पृथ्वीमा आवश्यक परेपछि व्यक्ति त के शक्रकी मूख्य रानीले समेत तभतिम्स स्वर्ग छोडेर पृथ्वीमा आउनु पऱ्यो । यसभन्दा अघिल्लो जन्ममा उनी बोधिसत्वकी आमा थिइन् । उनको पृथ्वीमा पुनर्जन्म हुदा पनि उनको नाम फुसती नै थियो । ती अति सुन्दरी युवती  पूर्णिमाको  चन्द्रमा झैं बढ्दै गइन् । सोह्र वर्षकी हुँदा उनको विवाह भयो । उनीहरु दुवै एक अर्कामा ज्यादै प्रेमपूर्वक जीवन विताइरहेका थिए । सिभीका गरीव दुःखीलाई दान दिने स्थानका लागि ६ वटा ठूल्ठूला दानहलहरु बनाएका थिए । त्यहाँबाट उनी प्रतिदिन चाँदीका टुक्रा दान दिन्थिन् । जब उनले आफ्नो पेटमा केही बढीरहेको छ भन्ने थाहा पाइन् उनले अझ बढी दान दिन थालिन् । जब उनको बच्चा जन्मने बेला नजिक आयो, त्यही बेला उनले आफ्नो श्रीमान्को राज्यका हरेक कुनाकाप्चा सम्म भ्रमणमा जान राजालाई अनुरोध गरिन् । राजाले पनि उनको अनुरोधलाई स्वीकार गरे । उनलाई हेरचाह गर्न र सुत्नको लागि विभिन्न ठाउँमा आश्रमहरु बनाइएका थिए । भेषा भन्ने ठाउँ पुग्नलागेकै बेला व्यापारिक स्थानमा नै उनलाई सुत्केरी बेथाले समात्यो र शिशुको जन्म भयो । त्यो नवजात शिशुको नाम भेषान्तरण राखियो । उनी व्यापारिक ठाउँमा जन्मे पनि उनको कुनै गुण व्यापारीका जस्ता थिएनन् । त्यही बेला अचम्मको कुरा के भयो भने त्यो नवजात शिशु बोल्न थाल्यो । “आमा हजुरलाई म के उपहार दिऊँ ।” त्यहीबेला देवताहरुले ती महान् बालकको जन्मको सूचना प्राप्त गरे ।

जब उनी आठ वर्षका भए । उनलाई कसैले पनि नदिएको आफ्नो केही चिज अरुलाई दिन मन लाग्यो । कसैले मेरो आफ्नो मुटु, मेरो आँखा, र माँसपेशी माग्यो भने पनि म दिन तयार छु भनेर घोषणा गरे । यो कुरा सुनेर स्वर्गका देवताहरु सबै डगमगाए । त्यसपछि पृथ्वीमा भुइचालो नै गयो । हिमवत् खण्डमा मेघ जोडले मडारिन थाल्यो र चट्याङ् पऱ्यो । नवयुवा भएका आम्दानीको श्रोत केही नभएको र आफ्नो केही सामान नभएको कारणले अरुलाई पटक पटक केही दिनको लागि पनि केही प्राप्त गर्नु नै पर्थ्यो । सोह्र वर्षमा उनको औपचारिक अध्ययन पूरा भयो । उनलाई त्यो राज्य सुम्पनका लागि छिमेकी राजाकी छोरी मादीसँग विवाहको बन्दोबस्त मिलाइयो ।

त्यो राज्य समृद्धशाली थियो र उनको विवाह पनि धुमधामका साथ गरियो । उनीहरुबाट छोरा जाली र छोरी कन्हाजिनाको जन्म भयो । भेषान्तरण नाबालक भएको बेलामा नै एउटा सेतो हात्ती राजदरबारको हात्तिसारमा ल्याइएको थियो । भेषान्तरण र हात्तिको बच्चा सँगसँगै हुर्किए । त्यो सेतो हात्तीमै चढेर युवराज भेषान्तरण सुन वितरण गर्न उनकी आमाले निर्माण गरेको दानशालामा जान्थे । कति प्रजाहरुको खेत हात्तीको सुँडको पानीबाट सिंचाई हुन्थ्यो । हात्ती सुडमा पानी ल्याएर प्रजाहरुको खेत सिंचाई गरिदिन्थे ।

एक साल त्यहाँको छिमेकी राज्य कलिङ्गामा लामो खडेरी पर्‍यो । धेरै व्यक्तिहरुले पानीको लागि प्रार्थना गरे । राजाले धेरै बस्तुहरु चढाए, दान दिए तर पनि केही भएन । धेरै व्यक्तिहरुले छिमेकी राज्यको सेतो हात्तीको र भेषान्तरणको परोपकारी कार्यको विषयमा सुनेका थिए । त्यो राज्यका ८ जना ब्राह्मणले भेषान्तरणसँग सरसल्लाह लिनु पर्छ भनी राजालाई सुझाव दिए । जब ती ८ जना ब्राह्मणहरु राजा दरबारमा आइपुगे भेषान्तरण हात्तीमा चढेर प्रजाहरुलाई सुनका सिक्का बाँड्दै थिए । त्यो हात्तीको शरीर भरी बहुमूल्य हिरामोती जोडिएको थियो । राजा यति परोपकारी थिए की उनले जब ब्राह्मणहरुको अनुरोध सुने । उनले तत्कालै त्यो हात्ती छिमेकी राज्यलाई उपहार स्वरुप दिए । उनले आफ्ना दयालु इच्छा पूरा गरे । जब भगवानले यस्तो पवित्र कर्म देखे । पृथ्वीमाता डगमगाइन् । आकाशभरी विजुली चम्किएर चट्याङ् पर्‍यो ।

त्यो हात्ती गुमेपछि भेषा देशका धेरै प्रजाहरु दुखित भए । त्यसपछि जनताले भेषान्तरलाई राजगद्दीबाट निकाली तपाई राज्य नियन्त्रण गरी आफै राज गर्नुहोस् भनेर राजा संजयलाई राय सल्लाह दिए । राजा संजय आफ्नो छोरालाई निकै माया गर्दथे तर उनीमाथि प्रजाको रिस र दबाब यति थियो कि उनी थेग्नै नसक्ने भएका थिए । जनता रिसाएर उनलाई एक दिनको भाखा दिएका थिए । त्यो दिनभित्र उनले भेषान्तरणलाई राजाबाट हटाई आफै राज्य संचालन गर्न विवश थिए । तर बिडम्बना त्यो एक दिन भित्रमा नै भेषान्तरणले सबै सम्पत्ति दान दिए । सात सय हात्ती, सात सय घोडा, सात सय रथ, सात सय परी र सात सय दासहरु ब्राह्मणलाई उपहार स्वरुप दिए । त्यो दान सात सय उपहारको नामले विख्यात भएको थियो । उपहार लिनका लागि व्यक्तिहरु टाढा टाढाबाट त्यहाँ आइपुगेका थिए । बेलुका साँझसम्म पनि उनी ती बस्तुहरु उपहार स्वरुप दान दिइरहेका थिए । त्यो रातमा उनले आफ्नो बाआमासँग विदा मागे किनकि भेषान्तरण निर्वासनमा जानु पर्थ्यो। उनले भोलीपल्ट झिसमिसेमै सूर्य उदाउनु अगाडि आफ्नो परिवार सहित आफू रथमा बसे र शहर छोडे । शहरको मूलढोका बन्द हुनु भन्दा अगाडी नै उनले चार जना ब्राह्मणलाई भेटे जो ढिला

गरी उपहार लिन आएका रहेछन् । ती ब्राह्मणहरु ४ वटा घोडा माग्न आएका रहेछन् । सुन्नासाथ भेषान्तरणले ती ४ वटा घोडाहरु पनि उपहार स्वरुप दान दिए । स्वर्गका भगवानले ४ जना देवताहरुलाई पुरुष हरिणको रुपमा पठाउनु भयो र ती चार हरिणले त्यो रथलाई तानेर लगे ।

एकैछिन पछाडि पाँचौं ब्राह्मण आएर रथ मागे । भेषान्तरणले त्यो पनि सहर्ष प्रदान गरे । ती शक्रले पठाएका हरिणहरु आफै हराए । ती भेषान्तरण राजकुमार र राजकुमारीहरु पैदल यात्रा गर्दै गए । रथविहीन भएका कारण छोरालाई राजकुमारले बोकेका थिए भने छोरीलाई राजकुमारीले बोकेकी थिइन् । उनीहरुको यात्रा सेता शहरतिर अगाडी बढ्यो जहाँ उनका काका राज्य गर्दथे । उनी आउँदै छन् भन्ने सुनेर उनका काका शहरको मूलढोकामा लिन आएका थिए तर भेषान्तरणले आफू शहरभित्र नपस्ने भनेपछि उनलाई मूलढोकाको छेऊ मै राजाले खान र बस्नको बन्दोवस्त मिलाइदिएका थिए । उनीहरु एक दिन र एक रात त्यही बसे । राजाले भतिज भेषान्तरणलाई त्यहीँ राजा भएर बस्न अनुरोध गरे तर पनि भेषान्तरणले त्यो स्वीकार गरेनन् ।

भेषान्तरण सँगसँगै राजा पनि जंगल छेऊसम्म गएर भतिज भेषान्तरणलाई छोडेर राजा आफ्नो राज्यमा फर्किएर आए । त्यसपछि एक जना दाउरेले उनलाई चुरे पर्वतका फाँटहरु हुँदै एउटा नदी सम्म पुग्ने बाटो देखाउँदै लग्यो । उनीहरु एक रात त्यहीँ खाना खाएर बसे । त्यसपछि एक्लै उनीहरु हिमालयको फेदैफेद हिडेर मुकालिन्दा भन्ने तालमा पुगे । त्यसको अर्को दिनको साँझमा उनीहरु हिमालय पर्वतमा पुगे । साँगुरो गल्छि पार गरेर अन्तिममा उनीहरु माउण्ट  बम्का भन्ने टाकुरामा पुगे ।

देवताका राजा शक्र उनको बाटो हेरिरहेका थिए । त्यो टाकुरामा कमलको फूल फूलिरहेको तालको नजिकै दुईवटा आश्रम बनाउन उनले विश्वकर्मालाई आदेश दिए । भेषान्तरण अगाडि बढ्दै गए, एक्लै त्यो आश्रममा प्रवेश गरे । उनलाई स्वागत गर्न ४ जना सन्यासीहरु झुकेर बसिरहेका थिए । शक्रले माथिबाट ती सबै दृश्यहरु हेरिरहेका थिए । उनले चीवर (सन्यासीका वस्त्रहरु) लगाए र त्यसपछि उनकी श्रीमती मादीलाई अभिवादन गर्न गए । उनी जस्तै उनकी श्रीमती मादी र छोराछोरीले पनि चीवर लगाए । मादीले खोजेर जम्मा पारेको तरुल भ्याकुर र जंगली फलफूल खाएरसात महिनासम्म उनीहरु छुट्टाछुट्टै आश्रममा बसे । छुट्टाछुट्टै आश्रममा बसे पनि मादीले आफ्ना श्रीमान्को राम्रो हेरविचार गर्थिन् । तर उनीहरु दुवैले एक अर्कालाई स्पर्श गरेनन् किनकि दुवैले सन्यास धारण गरेका थिए ।

त्यही बेलामा कलिङ्गामा सेतो हात्ती पुगे पछि पानी पऱ्यो र खडेरीको संकट अन्त्य भयो । उनीहरु बसेको केही पर एउटा जुजाक नाम गरेको बूढो ब्राह्मण बस्थे । उनकी ज्यादै राम्री नवयुवती श्रीमती थिइन् । उनकी श्रीमती त्यो तालबाट पानी ल्याउनका लागि जाँदा उनका साथीहरुले उनको श्रीमान बूढो छ भनेर गिज्याउँथे । त्यो भएर उनकी श्रीमती पानी लिन जान मान्दिनथिन् । पानी ल्याउन र घर धन्दाको लागि सहयोगी ल्याइदिनुहोस् भनी उनले आफ्ना श्रीमान्लाई अनुरोध गरिन् ।

भेषान्तरणको परोपकारी र दानशीलताको कुरा सुनेर भेषान्तरणका दुईवटा छोरा छोरी सहयोगीको रुपमा दिन्छन् कि भन्ने आशले आफ्ना श्रीमान्लाई सहयोगी माग्नका लागि पठाइन् । जुजाकसँग एक पैसा पनि थिएन । त्यसैले उसले दास राख्न सक्दैनथ्यो । त्यसकारण उ भेषान्तरणलाई खोज्न हिड्यो । जब जुजाक ब्राह्मण जंगलबाट निस्कदै थिए, भेषान्तरणका सुरक्षाका लागि राखिएका दुइवटा कुकुरले ती ब्राह्मणलाई आक्रमण गरे । त्यही बेला भेषान्तरणलाई फर्काउनका लागि राजा संजयले मानिस पठाउनु भएको थियो । चौकिदारले कुकुर समातेको मौका छोपेर ती बुढा जुजाक ब्राह्मण चलाखीपूर्वक भित्र छिरे । विहान मादी जंगलतिर  गएको मौका पारी उनले आफ्ना श्रीमतीको कथा र व्यथा भेषान्तरण सन्यासी समक्ष  प्रस्तुत गरे । जब भेषान्तरणले एक जना वृद्ध मानिस आफूसँग माग्न आइरहेको देखे तब उनले जानिहाले कि उसलाई उच्चतम् कोटीको दान दिनु पर्छ ।

जुजाकले भेषान्तरणलाई यसरी हुनै नसक्ने अनुरोध गरेता पनि भेषान्तरणले तुरुन्तै आफ्ना दुई बच्चाहरु ती जुजाक ब्राह्मणलाई दिन मन्जुर भए । जब बच्चाहरुले उनीहरुको कुरा सुने । उनीहरु त्यहाँबाट भागेर तालका छेऊमा ठूल्ठूला पात भएको कमलको पत्ताभित्र लुके । तर पनि उनीहरुका बाबुले उनीहरुलाई भेट्टाई हाले र फर्काएर ल्याए । उनले पानी समातेर आफ्ना बच्चाहरुलाई जुजाकलाई दिए । यो देखेर देवताहरुलाई असह्य भयो । पृथ्वी काँपिन् र स्वर्ग नै डगमगायो । ती जुजक ब्राह्मणले कलिला बच्चाहरुका हात जंगलका लहराले बाँधे । त्यसपछि धपाउदै लगे । भेषान्तरणका आँखाबाट तरर आँसु बगे । उनी रुँदै आफ्नो आश्रममा गए । जब उनले बुझे की त्यो दुःखको कारक भनेको बच्चाहरु प्रतिको माया र मोह भन्ने बुझे । त्यसपछि उनले आफ्नो मनलाई अमोहमा लगाए र तुरुन्तै आफ्नो सन्यासी मनलाई शान्त पारे ।

जब जुजाकले बच्चाहरुलाई धपाउँदै जंगलबाट लगिरहेको थियो त्यसबेलामा मादीले त्यो दृष्य देखिन् भने उनी अति दुःखी हुनेछिन् भन्ने ठानेर तीनजना

देवताहरुले आफ्नो रुप क्रमश सिंह, बाघ र चितुवा बनाई मादीको बाटो रोके । जबसम्म रात नपरे सम्म उनी घर फर्कन सकिनन् । भेषान्तरणले आफ्ना बच्चाको अवस्थाको बारेमा मादीलाई बताउने हिम्मत गरेनन् । उनी दुखित भएर रातभरी आफ्ना बच्चाहरु खोजिरहिन् । जब उज्यालो भयो उनी आफ्नो आश्रममा फर्किइन् र मुर्छा परेर लडिन् । भेषान्तरण ठूलो धर्मसंकटमा परे । आफ्नो चीवरलाई च्यातेर उनले आफ्नी श्रीमतीलाई उठाए । उनका अनुहार सुमसुमाए । उनको मुख धोइदिए । जब उनको चेत खुल्यो उनले बच्चाहरुलाई दान दिएँ भनेर सुनाए । सबै सम्पत्ति, धनजन दान दिने उनको इच्छा बुझेर उनले प्रतिवाद गरिनन् । स्वर्ग प्राप्त गर्न त्यो महादान दिएकोमा चित्त बुझाइन् ।

अब एउटै सर्वोच्च दान मात्र बाँकी रहेको थियो, त्यो भनेको उनकी श्रीमती । स्वर्गका राजा शक्रलाई थाहा थियो कि उनले त्यो पनि बाँकी राख्दैनन् । मादी अरुलाई दान दिन नसकोस् भनेर शक्रले एक जना बूढा ब्राह्मण खडा गरी त्यही बिहानै मादीलाई माग्न पठाए । त्यसपछि उनको लक्ष्य प्राप्त गर्नका लागि उनले मादीलाई पनि दान दिन सक्नुपर्छ भन्ने कुरा महशुश गरे । ती बूढा ब्राह्मणलाई समातेर उनले मादीलाई पनि दान दिए । मादीले एक शब्द पनि नबोलिकन ती ब्राह्मणलाई आफ्नो शरीर समर्पण गरिन् । उनले बुझिन् कि यो कर्मबाट उनका श्रीमान्को सबैभन्दा ठूलो इच्छा पूर्ति हुन्छ । त्यो भनेको प्रज्ञा प्राप्त हुनु हो । यो देखेर स्वर्ग नै स्तब्ध भयो, समुन्द्र जोडले गर्जियो, त्यसपछि देवताहरुले बुझे कि भेषान्तरणले मुक्ति प्राप्त गरे । स्वर्ग प्राप्त गरे । ती महान् व्यक्तिले परोपकारको उच्चतम क्षमतालाई प्रस्तुत गरे । त्यसपछि शक्रले मादीलाई भेषान्तरण कहाँ फिर्ता पठाइदिए ।

त्यहीबेलामा जुजाक बाटो विराएर हराए । उनले बच्चाहरुलाई एउटा रुखको हाँगामा बाँधी अर्को हाँगामा उनी सुतेका थिए । देवताहरु ती बच्चाहरुको हेरचाह गर्न र रक्षा गर्न उनीहरुको बाआमाको भेषमा आएका थिए । देवताले ती हराएका जुजाकलाई पनि बाटो देखाएर कालिङ्गा पुऱ्याइदिए । भेषान्तरणका छोराछोरी अकास्मात् सिभीमा पुगे । ती बच्चाहरुलाई त्यहाँका व्यक्तिहरुले चिनेर ती बच्चा र बच्चा राख्ने व्यक्ति समेतलाई राजा संजयकहाँ ल्याए । नाती नातिनालाई पाएर राजा यति धेरै खुशी भए कि उनले जुजाकलाई समेत दण्ड दिएनन् । उल्टै ती ब्राह्मणलाई ठूलो रकम दिए । त्यसबाट त्यो ब्राह्मणले भव्य र चम्किलो घर बनाएर बसे । केही बर्ष विलासी जीवन बिताएर ती ब्राह्मण मरे । राजा संजयले बच्चाहरुका बाआमाको विषयमा सोधपुछ गरे । बच्चाहरुले भने कि उनीहरुका बाआमा सन्चै छन् र जीउँदै छन् तर जलीले उनीहरुका हजुरबालाई (राजा) विन्ती गरे कि भेषान्तरणलाई टाढा पठाउनु पर्छ । किनकि उसले आफ्ना छोराछोरीलाई

माया गरेनन् । राजकुमार भेषान्तरण र राजकुमारी मादीलाई फिर्ता ल्याउने उद्देश्यले राजा संजय आफै बम्का पर्वत जाने निश्चय गरे । त्यही उद्देश्यले रथ लैजान उनले सडकलाई सम्म र फराकिलो हुने आदेश दिए । सजिसजाउ बनाउनका लागि तुलहरु तयार गर्न आदेश दिए । राजाले शाही लावा लस्कर सहित बम्का पर्वत गई आफ्ना छोरा र बुहारीलाई ल्याउनु पर्छ भन्ने अठोट गरे । सडकभरी स्वागत तुल झुण्याउन लगाए । फूलका माला र गुच्छाहरु तयार गर्न लगाए । बाटामा भोक र तिर्खा नलागोस् भनी खाना र सर्वतको व्यवस्था गर्न लगाए । हामी जाने बेलामा नाचगानको व्यवस्था होस् पनि भने ।

चित्र : राजकुमार भेषान्तरण र राजकुमारी मादीलाई फिर्ता ल्याउने उद्देश्यले राजा संजय आफै बम्का पर्वत जादै ।



भेषान्तरणले आफूसँग भएको सबै दिएर पनि राजाको भूमिकामा रहने इच्छा प्रकट गरे । सन्यासीका लुगा खोले । तीन पटक त्यो आश्रमको परिक्रमा गरी मैले स्वर्ग प्राप्त गरैं । मुक्ति प्राप्त गरैं भनेर झुकेर अभिवादन गरे । त्यसपछि उनले कपाल काटेर छोटो बनाए, नुहाए, र युवराजको पोसाक लगाए । उनी धेरै चम्किला भएका थिए । मादीलाई पनि सुन्दर लुगा र गरगहना लगाएर राम्री बनाएका थिए । त्यसपछि उनीहरु राजा संजयको क्याम्प तर्फ लागे । एक महिना सम्मको

आनन्दपूर्ण वनवास पछि उनीहरु सिभीमा फर्किए । राजा भेषान्तरणको शुभ राज्याभिषेक भयो र उनी राज सिंहासनमा चढे । शक्रको इच्छाका कारण उनलाई यति धन प्राप्त भयो कि उनले जीवनभर बाँडेर पनि सकेनन् । त्यसपछि राजाबाट राजिनामा गरेको केही वर्षपछि उनको स्वर्गारोहण भयो । जहाँ उनी परोपकारको प्रतिकको रुपमा सधैंभरी रही रहे ।

(मौलिकः भेषान्तरण जातक, कथा नं. ५४७)

(स्रोतः http://www.buddha-images.com)

## यो कथाबाट प्राप्त शिक्षा

**दान पारमिताः** यो कथाको मुख्य शिक्षा भनेको थोपा थोपा गरेर दान पारमिता जम्मा गर्नुपर्छ भन्ने नै हो । दान, परोपकार र पुण्य पारमिताले आफ्नो र अरु सबैको मंगल गर्छ । दानबाट नै प्रज्ञा पारमिता प्राप्त गर्न सकिन्छ । दानबाट नै भेषान्तरणले मुक्ति प्राप्त गरे । दान पारमिताकै कारण भेषान्तरण पुनः राजा पनि भए ।

**सन्न्यास पारमिताः** दोश्रो शिक्षा भनेको सन्यास धारण गर्नु हो । भेषान्तरण, उनकी श्रीमती मादी चीवर (सन्यासीका वस्त्रहरु) लगाएर सन्यास धारण गरे । किनकि सन्यास बिना मुक्ति प्राप्त हुदैन।

**मैत्री पारमिताः** तेश्रो शिक्षा भनेको मैत्री पारमिता हो । राजाले आफ्ना नाती नातिनालाई दुख दिने ब्राह्मणलाई दण्ड दिएनन् बरु एउटा भव्य महल बनाईदिए । उनले कसैप्रति पनि द्वेष राखेनन् । मादीले पनि आफ्ना बच्चा दान दिने श्रीमानलाई केही पनि भनिनन् । यो कथामा यत्रतत्र करुणा र मैत्री मात्र पाइन्छ ।

अरु शिक्षा पाठक वर्गले पत्ता लगाउनुहुनेछ ।

# इलिस जातक: कन्जुसको धन

यो कथा बुद्धले जीतावनको विहारमा एउटा लोभी धनी व्यक्तिको बारेमा भन्नु भएको हो ।

साकारा राज्यको राजगाह भन्ने एउटा शहरमा एकजना इलिस नामका देशकै घनाढ्य व्यक्ति बस्तथे । उनी यति कन्जुस थिए कि उनी एक थोपा तेलसम्म पनि कसैलाई दिदैनथे । त्यो मात्र कहाँ हो र ! आफ्नो धनको एउटा बाछिटो जतिको सानो अंश पनि उनी आफ्नो लागि समेत प्रयोग गर्दैनथे । उनको त्यो अथाह सम्पत्तिको सानो अंश पनि आफ्ना जनताका लागि, आफ्ना परिवारका लागि र आफ्नो लागि प्रयोग गर्दैनथे ।

मोगलानाले आफ्नो कन्जुस हृदय र आफ्नी श्रीमतीलाई जिताबन लिएर गए जहाँ एउटा ठूलो कथिन दान र भोज भईरहेको थियो । त्यहाँ सहयोगीहरुले बुद्ध र अरु ५०० भिक्षुहरुलाई ठुल्ठुला थालीहरुमा प्रशस्त खाना प्रदान गरिरहेका थिए । उनले पहिले बुद्धलाई भेटी वहाँको आशिर्बचन प्राप्त गरी धर्मदेशना सुन्न सत्य नामको सभाहलमा प्रवेश गर्नुभयो । सभाहलमा भएका व्यक्तिहरुले भने कि  श्रद्धेय मोगलानाको शक्ति यति ठुलो छ कि एकैछिनमा उनले जीताबनमा ल्याएको कन्जुस धनलाई दानमा परिणत गर्नुभयो । अघिल्लो दिन एक बृद्ध व्यक्तिले भनेको कुरा सत्य हुन आयो । ती बृद्ध व्यक्ति ज्यादै प्रशंसनीय थिए । उनीहरु त्यही कुरा गरिरहेको बेलामा सभाकक्षमा बुद्धको पवेश भयो । त्यसपछि उहाँले त्यो दिनको छलफलको बिषय सोध्नुभयो ।

भिक्षुले त्यो दिनको छलफलको बिषय दान भएको बताए । बुद्धले भन्नुभयो यो पहिलो पटक होइन भिक्षुहरु हो ! यो भन्दा पहिले पनि मोगलानाले आफ्नो लोभलाई दानमा परिवर्तन गर्नुभएको थियो । त्यसपछि बुद्धले कर्म र कर्मफलको बारेमा प्रकाश पार्नुभयो । यो भन्दा पहिले मोगलानाले कसरी लोभलाई दानमा परिवर्तन गर्नुभएको थियो । त्यही कथा बुद्धले भिक्षुहरुलाई सुनाउनु भएको थियो ।

धेरै बर्ष अगाडि ब्रह्मदत्त नाम गरेका राजा बनारसमा राज्य गर्दथे । त्यहाँ असी करोड धन सम्पत्ति भएका इलिस नामका एक धनाढ्य व्यक्ति थिए । तर त्यो व्यक्तिमा मानिसमा हुनु नपर्ने सबै खराव गुण मात्र थिए । त्यो व्यक्ति लङ्गडो, कुप्रो, र टेढो थियो । उनको शरीरले नै उनी लोभी भएको प्रमाणित गर्दथ्यो । त्यो व्यक्तिले कसैलाई पनि केही दिएको थिएन र आफूले पनि त्यो धनको प्रयोग गरेको थिएन ।

तर अचम्मको कुरा, उनका सात पुस्ता अघि सम्मका सबै पुर्खाहरुले उदार चित्तले बिना रोकटोक प्रशस्त दान दिएका थिए । त्यो दानले नै उनका परिबारलाई धनी बनायो । त्यसपछि उनका सन्तानहरुले दान दिन बन्द गरी धन जम्मा गर्न थाले ।

एक दिन उनी राजाको भाषण सुनेर घर फर्किरहेका थिए । त्यहीबेला एकजना कामबाट लखतरान भएर आएका कृषक खाटमा बसेर ठर्रा (सस्तो रक्सी) पिइरहेको देखे । त्यो देखेर ती धनाढ्य व्यक्तिलाई पनि रक्सी पिउन मन लाग्यो । तर उनले मन लागेर पनि रक्सी पिएनन् किनकि उनले पिएमा अरु मानिसहरुले पनि उनीसंगै पिउन चाहन्थे । उनले सोचे म कसैलाई पनि रक्सी खुवाउदिन । यी सबैलाई रक्सी खुवाएँ भने मेरो धेरै ठूलो खर्च हुन्छ । जति उनले रक्सीको त्यो तृष्णा रोके त्यो त्यति नै बलवान भयो र झन झन सताउन थाल्यो ।

रक्सीको तृष्णालाई दबाएर राख्दा राख्दा उनको अनुहार पहेँलो भयो तापनि पैसा खर्च हुने डरले गर्दा लोभले गर्दा उनले केही खाएनन् । उनी झन् झन् कमजोर हुन थाले र उसको अनुहारमा नसाहरुको जालो बाहिरबाटै देखिन थाल्यो । त्यसको केही दिन पछि सम्म पनि त्यो तृष्णाले उनलाई सताइरह्यो । उनी आफ्नो कोठामा गएर बिछ्यौनालाई अंकमाल गरेर सुते । उनकी श्रीमती कोठाभित्र पसिन् र उनको पिठ्यौमा ढयाप मारेर सोधिन् “हजुरलाई के भयो?”

उनले भने “केही पनि भएको छैन ।”

उनले भनिन् “राजा हजुरसंग नाराज हुनुहुन्छ ?”

“अहँ हुनुहुन्न ।”

“बच्चा र नोकरचाकरले पो हजुरलाई दुख दिए कि ?” उनले सोधिन् ।

“अहँ, दिएका छैनन् ।”

“त्यसो भए हजुरलाई केही चिजको तृष्णा छ कि ?”

अझै पनि उनी आफ्नो धनको नोक्सान हुन्छ भनेर केही नबोली बसे ।

"श्रीमान् बोल्नुहोस न ।" उनले जोड गर्न थालिन् ।

"भन्नुहोस् न हजुरलाई के को तृष्णा छ?"

त्यसपछि उनले बिस्तारै कानेखुशी गर्दै भने "म रक्सी पिउन चाहन्छु ।"

"हजुरले पहिला किन नभन्नुभएको?" छक्क परेर सोधिन् ।

"म यो शहरका सबै मानिसलाई पुग्ने रक्सी पार्न लगाउछु ।"

"अहँ हुदैन ।" उनले चिच्याए ।

"तिमी अरु व्यक्तिको लागि नसोच । उनीहरु आफ्नै पैसाले रक्सी खाउन् ।"

"त्यसो भए म आफ्नो टोलका लागि रक्सी तयार पार्न लगाउँछु नि त ।"

"तिमी कति धनी छ्यौ र यस्तो कुरा गर्छ्यौ ?"

"त्यसो भए हाम्रो परिवारलाई पुग्ने रक्सी पार्न लगाउँछु ।"

"तिमी कति खर्चिली भएकी हँ ?"

"त्यसो भए हाम्रा छोरा छोरी र हाम्रा लागि पार्न लगाउँछु ।"

"उनीहरुको लागि किन झन्झट गर्नु पर्‍यो ?"

"त्यसो भए हामी दुईजनालाई मात्र तयार गर्न लगाउ त ।"

"त्यति बढी किन बनाउनु पर्‍यो ?"

"त्यसो भए म हजुरलाई मात्र तयार गर्न लगाउछु नि त ।"

"पख, तिमीले घरमा रक्सी पार्न लगायौ भने त सबैले देख्छन् र उनीहरु यहाँ रक्सी पिउन आउन सक्छन् । एक रुपैया खल्तीबाट निकाल्दै नोकरलाई दिदै उनले भने टाढाको रक्सी पसलबाट कसैले नदेख्ने गरी किनेर ल्याऊ ।" नोकर एकछिनमै फर्कियो ।

उनले भने "मलाई शहर भन्दा टाढा खोला पारीको झाडीमा ल्याई त्यहाँ एकलै छोड ।" उनलाई झाडी नजीकै छोडेर नोकर फर्केपछि ती धनाढ्य व्यक्ति घिस्रिदै एक्लै झाडीभित्र पसे र हातमा एक गिलास भरी रक्सी लिएर पिउन थाले । तर दानशीलताकै कारण उनका बुबाको शक्रको रुपमा पुनर्जन्म भएको थियो । उनको बुबा त्यहीबेला आफ्नो परिवारको दानी भावना अझै छ कि छैन भनेर जान्नका

लागि उनको घरतिर आउदै गर्दा बाटोमा इलिसलाई देखे । उनी आफ्नो छोराको त्यो लोभी र घृणित व्यवहार देखेर छक्क परे । उनका छोराले त्यो दान दिने परम्परा मात्र तोडेनन् भिखारी बस्ने घरमा आगो लगाई दिए । आफ्नो घरको ढोकामा भिख माग्न आउनेलाई कुटेर खेदाए । देवताका राजा शक्रले आफ्ना छोराले त्यो ठर्रा पनि (सस्तो सक्सी) झाडीमा लुकेर कसैलाई एक थोपा पनि नदिई पिईरहेको देखे ।

त्यो देखेर देवताका राजा शक्रलाई असह्य भयो र चिच्याउनु भयो । हरेक मानिसले कर्मको फल भोग्नै पर्छ भन्ने कुरा मैले मेरो छोरालाई देखाउनु पर्छ । म यसलाई दानी बनाई अर्को पुनर्जन्म देवलोकमा हुन लायकको बनाउँछु ।

तत्कालै शक्रले आफ्नो छोरा इलिसको रुप धारण गरे । उनको जस्तै ढाड कुप्रो र आँखा टेढा बनाउदै बनारसको शहरमा पसे । उनी सिधै राजदरबारको ढोकामा उभिन पुगे र राजालाई भेटन आएको खबर पठाए । उनलाई भित्र पठाउन राजाले पालेलाई आदेश दिए । शक्र भित्र पसे र राजालाई आदरपूर्वक अभिवादन गरे ।

“हजुर! अपर्झट यहाँ के कामले पाल्नु भयो?”

“हजुर, म मेरो ८० करोड रुपैया सरकारी राजस्वमा जम्मा गर्न चाहन्छु ।”

“हुन्न हजुर” राजाले भन्नुभयो । “मसंग आफ्नै पवित्र धन छ । मलाई अरुको धनको आवश्यकता छैन।”

“हजुरले लिनुहुन्न भने म यो धन सबैलाई बाँड्न चाहन्छु ।”

राजाले भन्नुभयो “तपाईलाई जे गर्न मन लाग्छ त्यही गर्नुहोस् ।”

“हजुरको जो आदेश ।” शक्रले भने ।

शक्र राज दरबारबाट निस्किएर सिधै धनाढ्य व्यक्तिको (इलिस) घर गए ।

कुनै पनि नोकर चाकरले उनलाई सक्कली मालिक होइन भनेर चिन्न सकेनन् । शक्रले भरीयालाई घरका सबै सामान जम्मा गर्न लगाए । उनले आफ्ना नोकर चाकरलाई आदेश दिदै भने “यदी कुनै मानिस आएर म यो घरको मालिक हुँ भन्यो भने उसलाई बेस्सरी कुटेर बाहिर निकाल्नु ।”

त्यसपछि उनी माथिल्लो तलामा गए र ठूलो खाटमा बसे । उनले तत्काल इलिसकी श्रीमतीलाई बोलाउन पठाए । जब इलिसकी श्रीमती त्यहाँ आइन् शक्रले हाँसेर भने “मेरी प्रिय, अब हामी उदार हौं है ।”

जब यो कुरा इलिसकी श्रीमती र छोरा छोरीले सुने, उनीहरुले मनमनै विचार गरे कि यो मानिस कहिल्यै पनि यति उदार थिएन, यसले पक्कै पनि बढी नै रक्सी पिएको हुनुपर्छ । "मेरो श्रीमान्, हजुर जति सक्दो उदार हुनुहोस् ।" श्रीमतीले भनिन् ।

शकले शहरका ढोल पिट्ने र कटुवाल कराउने व्यक्तिलाई बोलाएर भने "शहरमा गएर जजसलाई सुन चाँदी, हिरा, मोति र अरु बहुमूल्य गरगहना चाहिएको छ इलिसको घरमा आई लिएर जानु भनिदिनू ।"

उनकी पत्नीले पनि आदेशको पालना गरिन् । उनका घरमा बोरा, धोक्रा र थुन्चे लिएर सरसामान लिन धेरै मानिसहरु आए । शकले ढुकुटीको साँचो खोल्न लगाए र जजसलाई जे जे चाहिएको छ लैजाओ भनेर आदेश दिए । शकले भने "यो सबै मेरो तर्फबाट तपाईहरुलाई दान हो । तपाईहरुलाई जे चाहिन्छ त्यही समान लैजानुहोस् । तपाईहरु सबैको भाग्य दाहिने होस् ।" शहरका मानिसले चाहिने जति समानहरु बोरा र धोक्रा भरी भरी हालेर लिएर गए ।

एउटा किसानले चाँही धेरै नै सामान लैजाने विचार गरेर इलिसका सुन्दर गोरुगाडामा सामानहरु राखी लिएर गयो । उ छिटो छिटो शहरबाट बाहिर निस्कियो । त्यो किसान गोरुगाडामा बसेर इलिसको प्रशंसा गर्दै अगाडि बढीरहेको थियो । त्यो किसानले भन्दै थियो "इलिस हजुर १०० बर्ष सम्म बाँच्नुहोस् । मेरो स्वामी इलिस !" भन्दै त्यो झाडीबाटै अगाडि जाँदै थियो । " हे स्वामी, हजुरले मलाई यत्रो गुण लगाउनुभयो कि म अब केही नगरी पनि बाँच्न सक्छु । यी गोरु कसका हुन् ? हजुरले मलाई दिएका हुन् । यो गोरुगाडी पनि हजुरले नै मलाई दिएका हुन् । यो गोरुगाडामा राखीएका सामान पनि हजुरले नै दिएका हुन् । यी सामान न मेरा बुबाले न त मेरी आमाले दिनुभएका हुन् । हजुरबाट नै मलाई प्राप्त भएका हुन् । !" भन्दै कराउदै अगाडि बढीरहेको थियो ।

त्यही बाटोको नजिकैको झाडीमा लुकेर इलिस रक्सी खाइरहेको थियो । यी शब्दहरुले इलिसलाई चस्स घोचे । यो मोराले मेरो नाम किन लिइरहेको छ हँ ? ऊ आफै छक्क पर्‍यो । मेरो घन सम्पत्ति राजाले त बाँडिदिएका छैनन् ? उसले झाडीबाट चिहाएर हेर्‍यो र तुरुन्तै आफ्ना गोरुगाडा चिनीहाल्यो ।

उ बादल जतिकै वेगले दौडिएर झाडीहरु र बुट्टाहरु नाघेर बाहिर निस्कियो । उसले गोरुको नाकी समात्यो र जोडले भन्यो "रोक, ए साले चोर ! यी मेरा गोरुहरु हुन् ।" किसान गोरुगाडाबाट तल ओर्लियो र त्यो गोरुको नाकी समाउने व्यक्तिलाई कुटपिट गर्‍यो । "ए साले, यो तेरो सरोकारको कुरा होइन, इलिसले

सबै धन सम्पत्ति शहरका व्यक्तिलाई दिईसके ।“उसले इलिसलाई भुँईमा पछारीदियो र गोरुगाडामा चढेर आफ्नो बाटो लाग्यो ।

रिसले उन्मुक्त भै हल्लिदै इलिस फेरी जमिनबाट उठ्यो र गोरुगाडाको पछाडि पछाडि दौडिदै गएर फेरी गोरुको नाकी समात्न पुग्यो । किसानले फेरी गोरुगाडाबाट तल ओर्लिएर त्यो व्यक्तिलाई बेस्सरी कुटपिट गऱ्यो । त्यो कुटाईबाट इलिस गम्भिर घाइते भयो । किसान भने फेरी गोरुगाडामा चढेर त्यो व्यक्तिलाई तथानाम गाली गर्दे आफ्नो बाटो लाग्यो ।

केही समय पछि इलिस लरबराउदै उठ्यो  हतार हतार घरमा आयो । घर आउदै गर्दा बाटोमा धेरै मानिसहरुले उनको आफ्नो धन सम्पत्ति लगिरहेको दख्यो  । उसले चिच्याएर भन्यो  “यो के गरिरहेका छौ ? तिमीहरुलाई अर्काको सम्पत्ति लैजादा लाज लागेन । ” उसले पहिला एउटा मानिसलाई समात्यो त्यसपछि अर्को व्यक्तिलाई । तर प्रत्येक व्यक्तिले उनलाई कुटपिट गरी जमिनमा पछारीदिए । चोटैचोट र रगतपच्छे भए पछि ऊ कराउदै आफ्नो घरमा पुग्यो तर भरीयाहरुले उसलाई घरभित्र छिर्न दिएनन् । घरको पेटीमै रोके । उल्टै अर्काको घरमा पस्न खोज्दछस् फटाहा भनी भरीयाले उसलाई झपारे । आदेश बमोजिम उसलाई बेस्सरी बाँसका भाँटाले पिटे । उसलाई घाँटीमा समातेर घिसार्दै लगेर भऱ्याङबाट झारिदिए ।

“ऐया ! आमा, ऐया ! आमा“भन्दै उ बिस्तारै उठ्यो । उसले मनमनै भन्यो “मलाई राजाले मात्र सहयोग गर्न सक्छन् ।“ त्यस पछि उनी खन्च्याङ् खन्च्याङ् गर्दै राजदरबारमा गए र कसले मलाई सहयोग गर्न सक्छ भनी कराउन थाले ।

के कारणले तिमीले गुहार मागेको भनी राजाले उसलाई सोधे ।

“मैले गुहार मागेको होइन हजुर ।“ इलिसले भन्यो ।

राजाले भने “धनी व्यक्ति,  पहिले तिमीले नै तिम्रो धन मलाई प्रदान गरेको होइन ? मैले लिन नमाने पछि तिमीले नै त्यो धन शहरका नागरिकहरुलाई वितरण गरेको  होइन?” इलिसले भन्यो “हजुर मैले यस्तो कहिल्यै गरेको छैन । हजुरलाई थाहा छ म मेरो घन सम्पत्तिलाई  कत्तिको हिफाजत गर्छु । मैले एक थोपा तेल जति सम्पत्ति पनि कसैलाई दिएको छैन । कृपया ज जसले मेरो सम्पत्ति लगेका छन् उनीहरुलाई समातेर अनुसन्धान गरी मेरो सम्पत्ति फिर्ता गराई पाऊँ ।“ इलिसलाई माथि ल्याउन राजाले आदेश दिए । त्यसपछि इलिसलाई लिएर राजा शक्र भएको स्थानतर्फ लागे । त्यहाँ उस्तै अनुहारका दुई जना मानिस देखेर सबैजना छक्क परे । ती दुई मध्ये कुन चाही सक्कली इलिस हो, छुट्याउन कसैले

पनि सकेनन् । त्यसपछि दुबैलाई अदालतमा उपस्थित गराइयो । दुबै उस्तै थिए । कसैले पनि उनीहरुलाई छुट्याउन सकेनन् । राजाले भन्नुभयो “महाशय यी दुई मध्ये कुन चाही सक्कली इलिस हो, मैले छुट्याउन सकिन । कसैले दुईमध्ये को सही इलिस हो भन्न सक्छ ?“ इलिसले भन्यो “मेरी श्रीमतीले छुट्याउन सक्छिन् हजुर ।” ती दुई मध्ये उनको श्रीमान कुन चाही हो भनेर इलिसकी श्रीमतीलाई सोधनी हुन्छ । उनी शक्रलाई हेरेर मुस्कुराइन् र उनको छेऊमा गएर बसिन् । त्यसपछि इलिसका बच्चाहरु र नोकरलाई सक्कली इलिस कुन हो भनेर पहिचान गर्न लगाए । सबैजना शक्रको छेऊमा नै गएर बसे ।

त्यसपछि इलिसले झल्यास्स सम्झियो, मेरो टाउकामा कपालले छोपेको कोठी छ । त्यो कोठी हजाम बाहेक कसैलाई पनि थाहा छैन । उसलाई ल्याइयो भने त मलाई चिनिहाल्छ । उसलाई बोलावट भयो र सोधियो “कुन सही र कुन गलत इलिस हो छुट्याउन सक्छौ ?

”सक्छु हजुर” उसले भन्यो । मैले उनीहरुको टाउकाको परिक्षण गरेँ भने त सकिहाल्छु नि ।

”हुन्छ, दुबैको टाउकाको राम्ररी परिक्षण गर्नुहोस् ।” राजाले भन्नुभयो ।

हजामले इलिसको टाउकामा कोठी भेट्टायो । त्यसपछि शक्रको टाउको हेर्न थाल्यो । शक्रले पनि आफ्नो टाउकामा तुरुन्त कोठी उत्पन्न गर्नुभयो । दुबैका टाउका हेरेर हजाम आश्चर्यचकित भयो । उसले आश्चर्यचकित भएर भन्यो “सरकार दुबै कुप्रा छन्, दुबै टेढा छन्, दुबैका हात खुट्टा उस्तै छन् । दुबैको टाउकाको उही ठाउमा कोठी छ । सरकार दुई मध्ये कुन चाँही सही इलिस हो मैले भन्न सकिन ।”

जब इलिसले यी शब्दहरु सुन्यो तब उसलाई सही इलिस मै हुँ भनी कसैले पनि छुट्याउन सक्दैनन् जस्तो लाग्यो । ऊ  आफ्नो धन सम्पत्तिको नोक्सान भएको देखेर आबेगमा आई थरथर काम्न थाल्यो  । जमिनमा ढलेर बेहोस भयो  त्यही बखत शक्रले आफ्नो शक्ति प्रयोग गरेर सबैका अगाडी आफ्नो असली रुपमा हावामा देखाएर भने  ।

“हे राजन् ! म इलिस होइन शक्र हुँ ।” शक्रले भने  ।

राजाका सुसारेहरुले इलिसलाई होसमा ल्याउनका लागि मुखमा पानी छ्यापीदिए । होसमा आउनासाथ उसले शक्रलाई देख्यो र उनका  खुट्टामा झुकेर साष्टाङ्ग प्रणाम गर्‍यो ।

“इलिस !” शक्रले बोलाउनु भयो । धेरैबर्ष अगाडि यो धन सम्पत्ति मेरो थियो, तिम्रो थिएन । म तिम्रो पिता थिएँ । म आफ्नो जीवनभरी गरीवप्रति उदार र दानी थिएँ । उनीहरुकै लागि मैले आफ्नो जीवनभर काम गरेँ । त्यही मेरो दानशीलताको कारणले स्वर्गका राजाको रुपमा मेरो पुनर्जन्म भयो । तर तिमी मूर्ख रहेछौ । तिमी मेरो पदचिन्हमा हिडेनौ । तिमी डरलाग्दो लोभी भयौ । मेरो धनसम्पत्ति हडप्न तिमीले भिखारी बस्ने घर पनि जलाई दियौ र गरीवलाई त्यहाँबाट खेदाई दियौ । यो धनबाट तिमीले कुनै खुसी र आनन्द प्राप्त गर्न सकेनौ । न त यो धनले अरु कसैलाई खुशी बनाउन सक्यौ ? तिम्रो धन त राक्षसहरुले लुटेर ल्याएको धन जस्तै बन्न गयो । यसबाट कसैले पनि आफ्नो इच्छा पूर्ति गर्न सकेनन् ।

तिमीले भिखारीको घर पुर्ननिर्माण गऱ्यौ र गरीबलाइ दान दिई परोपकारी काम गऱ्यौ भने पुण्य कमाउछौ । यसो गरेनौ भने म तिमीसंग भएको सबै धन फिर्ता लैजान्छु । त्यति मात्र होइन, म चट्याङ बनी तिम्रो टाउको समेत काटी दिन्छु ।“

जब इलिसले यो चेतावनी सुन्यो । ऊ त डरले थरथर काम्न लाग्यो र चिच्यायो । उसले भन्यो “हजुर अबदेखि म उदार भएर दान दिन्छु । कहिल्यै लोभी हुन्न ।“ आफ्नो छोराको यो दृढ प्रतिज्ञा सुनेर शक्रले आफ्नो छोरालाई शिष्य बनाए र धर्मदेशना दिए । त्यस पछि उनी स्वर्गलोकमा फर्किए । यही सत्य बुझेर इलिसले उदार मनले दान दिए धेरै सत्कर्म गरे । त्यसैको फलस्वरुप उनको जन्म पनि स्वर्गलोकमा भयो ।

“बुझ्यौ भिक्षुहरु हो !” बुद्धले भन्नुभयो । मोगलानाले कन्जुस धनलाई दानमा परिणत गर्नुभएको यो पहिलो चोटी होइन । पहिला पनि उनले दान गरेका थिए । त्यो बेला इलिस धनी ब्यक्ति थिए, शक्र मोगलाना थिए, आनन्द राजा थिए र म चाही हजाम थिएँ ।

(स्रोत :www.accesstoinsight.org बाट साभार )

## यो कथाबाट प्राप्त शिक्षा

- **दान पारमिताः** दान पारमिता नै यो कथाको मुख्य शिक्षा हो । हामीहरुले थोपा थोपा गरेर दान पारमिताको संकलन गर्नुपर्छ । जसले लोभलाई दानमा परिबर्तन गर्छ उसको पुनर्जन्म स्वर्गमा हुन्छ । पूर्वजन्ममा जस्तो कर्म गरेको छ त्यसकै आधारमा पुनर्जन्म हुन्छ । इलिसका बाले धेरै दान गर्नुभयो त्यसैले उनी शक्र भएर जन्मनु भयो । इलिसले पनि शक्रको

उपदेश पछि भिखारीहरुका लागि घर बनाए , भिखारीहरुलाई दान दिए । तसर्थ उनको पनि स्वर्गमा पुनर्जन्म भयो ।

- **प्रज्ञा पारमिताः** दोश्रो शिक्षा भनेको प्रज्ञा पारमिता हो । शक्रले शिक्षा र धर्मदेशना दिएपछि इलिसाले पनि दान धर्म गर्न थाले । प्रज्ञा पारमिता पनि जरुरी छ, । त्यसैले हामीले स्वर्गमा जन्म पाउन प्रज्ञाको पनि अनुभव गर्नुपर्छ ।
- भौतिक धनले कसैलाई पनि सुख दिदैन । इलिसको धनले न त उनलाई सुख दियो न त अरु कसैलाई । जब हामी त्यो भौतिक धनलाई आध्यात्मिक धनमा परिणत गर्छौं अनि मात्र यसबाट पुण्य प्राप्त हुन्छ ।
- भिखारीका लागि घर बनाउनु उनीहरुलाई दान दिनु जस्तो परोपकारी कार्यबाट पुण्य कमाउनु सकिन्छ । यसबाट हाम्रो पुनर्जन्म स्वर्गमा हुन्छ ।

अरु शिक्षा पाठक वर्गले पत्ता लगाउनुहुनेछ ।

# अपान्नाक जातक

जब बुद्ध जेतबनमा बिहार नजिकैको सुभारथिमा बस्नुहुन्थ्यो त्यही नजीक एकजना अनाथपिण्डक नामका ब्याजमा पैसा लगानी गर्ने धनी मानिस पनि बस्थे । एकदिन अनाथपिण्डक बुद्धलाई श्रद्धा सुमन अर्पन गर्न गएका थिए । अनाथपिण्डक आफ्ना नोकरहरुलाई फूलका ठुल्ठुला भारी, सुगन्धित धुपीहरु, घीऊ, तेल, मह, मरमसला, कपडा र अन्य परिकारहरु बोकाएर बुद्धलाई भेटन गएका थिए । अनाथपिण्डकले बुद्धप्रति हार्दिक श्रद्धा प्रकट गरे र उपहारहरु भगवान बुद्धलाई अर्पेर आदरपूर्वक बसीरहेका थिए । त्यहीबेलामा अनाथपिण्डकका ५०० साथीहरु हातमा फूलका गुच्चा लिएर बुद्धलाई भेटन आए जो पछि बुद्ध धर्मका उपदेशक भए । ती ५०० जना साथीहरु ब्याजमा पैसा लगानी गर्ने धनाढ्य ब्यक्तिका छेऊमै बसिरहेका थिए । बुद्धको अनुहार पूर्णीमाको जून जस्तै चम्किलो थियो । उनको शरीर पनि ज्यादै फूर्तिलो थियो र सारा वातावरण नै तेजिलो हुन पुग्यो । रातो ढुङ्गा माथि बसेर उनी नवजवान सिंह झै गर्जेको सुनिन थाल्यो ।

बुद्धका शिक्षा र उपदेश सुनेर ती ५०० ब्यक्तिहरु आ–आफ्नो बहुमूल्य सम्पत्ति, घर गृहस्थी छोडेर बुद्ध धर्म र संघका शरणमा आए । त्यसपछि उनीहरु अनाथपिण्डकसंगै नियमित फूलका गुच्छाहरु र अगरबत्ति, सुगन्धित बस्तुहरु चढाई बुद्धका शिक्षाहरु सुन्ने गर्थे । उनीहरुले आफ्नो पुस्तकालय पनि दान गरे । संघको पुस्तकालय र बाचनालयमा आचार्यहरु राखे र उपाशक उपाशिकाह्रुले बुद्ध दिवश मनाए । बुद्ध समाधि छोडेर राजगाह फर्कनसाथ ती ब्यक्तिहरु पुनः नयाँ मूल्य मान्यता छोडी पहिलेको बिश्वासमै फर्किए ।

“शिष्यहरु हो ” बुद्धले भन्नुभयो । अहिले तिमीहरु तलको नर्क र माथिको स्वर्गको बीचमा छौ । कहिल्यै नसकिने तिमीहरुका शब्दहरुले कहिले तिमीहरुलाई दाहिनेतिर र कहिले देब्रेतिर लैजान्थ्यो । तिमीहरु कहिले तल झर्छौ र कहिले माथि आउँछौ । तिमीहरु बुद्धभन्दा तल र अरु धेरै तलका ब्यक्तिहरु भन्दा माथि छौ । कुनै हिसाब किताब नगर्नु नै सर्वोकृष्ट कुरा हो । जुन गुरुद्वारा दिइएको शिक्षा र अरु शीलहरुको हिसाब किताब हुन सक्दैन ।

त्यसपछि बुद्धले उनीहरुलाई बुद्ध, धर्म र संधका शरणमा आउन अर्ति दिनुभयो । बुद्धले अझ भन्नुभयो "कोही शरणमा आउनु भएन भने पुनर्जन्म लिएर दुखः भोग्नु पर्छ । बुद्ध, धर्म र धम्मको शरण लिएर ध्यान गऱ्यौ भने ४ अवस्था पार गरी परिनिर्वाण प्राप्त गर्न सक्छौ । बितेको जन्ममा पनि तिमीहरु बुद्ध, धर्म र संधका शरणमा गएनौ । त्यसैले तिमीहरुले अहिले यो दुःख भोगीरहेका छौ । अहिले पनि तिमीहरु बुद्ध, धर्म र संधका शरणमा आएनौ भने पुनः यक्ष भएर जन्मने छौ, जंगली हुनेछौ, अन्त्यमा मर्ने छौ र तिमीहरुले पुनः दुख नै भोग्नु पर्नेछ । तर जसले सत्य बोल्छ र शीलहरु पलन गर्छ उनीहरु यही जंगली अवस्थामा पनि संमृद्ध र खुशी हुनेछौ ।"

अनाथपिण्डकले आफ्ना हातहरु निदारको अगाडि राखेर बुद्धलाई ढोगे र भगवान बुद्धको प्रशंसा गरे । साथै उनले विगतका कथाहरु भनी दिनुहोस् भनी बुद्धलाई अनुरोध पनि गरे ।

बुद्धले भन्नुभयो "अज्ञानता हटाउन र दुखःमाथि विजय प्राप्त गर्न म दश पारमिताहरु र अरु धेरै असल कार्यहरुको साधना गर्दछु । राम्ररी सुन ।" जव श्रोताहरुले पूर्ण ध्यान दिएर बुद्धका कुरा सुने, उनीहरुलाई यस्तो लाग्यो कि बादल पछाडिबाट पूर्णचन्द्रको उदय भइरहेकोछ । त्यसपछि उनीहरुले पुनः जन्मनु मर्नु परेन ।

धरै पहिला जब ब्रह्मदत्त वनारसमा राज्य गर्दथे त्यो वेलामा बोधीसत्व एकजना व्यापारीको परिवारमा जन्मनुभएको थियो । एक विवेकी ब्यापारीको रुपमा उनको उदय भयो । त्यहीवेला त्यही शहरमा अर्को एउटा मूर्ख ब्यापारीको पनि जन्म भयो । त्यसको कुनै बुद्धि विवेक थिएन । एकदिन यस्तो घटना घट्यो कि ती दुवै ब्यापारीहरु बनारसका महँगा सामानहरु लिएर एउटै बाटो भएर एकै पटक हिड्दै थिए । त्यो विवेकी ब्यापारीले सोच्यो कि यो व्यक्ति मसंगै गयो भने र हजार घोडाहरु एकैठाउँमा राखियो भने त सडकमा धेरै भार पर्नेछ । मानिसका लागि दाउरा र पानी पाउन पनि गााह्रो पर्नेछ । त्यस्तै गोरुहरुलाई घाँस पाउन पनि गााह्रो पर्नेछ । ऊ अथवा म एकजना पहिले जानु पर्छ ।

अर्को दिन ती दुबै ब्यापारी प्रत्येकले ५००/५०० बोरा सामान गाडामा चढाएर अरु महँगा सामानहरु पनि साथैमा राखेर एउटै दिशा तर्फ एकै पटक हिडे । विवेकी व्यापारीले विचार गऱ्यो कि यो धुर्त युवा ब्यापारी मसंगै हिड्यो भने र हजार गाडाहरु एकै ठाँउमा बस्दा सडकमा हिड्न गाह्रो हुन्छ । मानिसको लागि खाना बनाउन दाउरा पानी पाउन पनि कठीन हुन्छ । गोरुहरुलाई घाँस पुऱ्याउन पनि गााह्रो हुन्छ । त्यसैले ऊ अथवा म एकजना पहिले जानुपर्छ ।

बेधीसत्व व्यापारीले भन्नुभयो “हेर्नुहोस् हामी दुबैजना एकै पटक यात्रा गर्न सक्दैनौ । या पहिले तपाइ जानुहोस् या म पहिला जान्छु । म पहिला गएँ भने तिमी मलाई पछ्याऊ ।” त्यो मूर्खब्यापारीले सोच्यो कि म पहिला गएँ भने मलाई धेरै फाइदा हुन्छ । गाडाका चक्काका कारण सडक भासिएको हुदैन । मेरा गोरुहरुले पर्याप्त घाँस चर्न पाउँछन् । मेरा मानिसले रोजी रोजी जंगली जडिबुटीहरु पाउँछन् । पिउने पानीको कुनै समस्या हुदैन । यो भन्दा पनि म पहिला गए भने राम्रा राम्रा भाँडा साट्न पाउछु । यी सबै कुराहरु बुझेर उसले पहिला जाने निश्चय गर्छ आफू पहिला जाने निर्णय सुनाउंछ ।

“धैरै राम्रो, मित्र कृपया तपाई पहिला नै जानुहोस् ।” विवेकी ब्यापारीले भने ।

“हवस्, म पहिला जान्छु है । ” धुर्त व्यापारीले भन्यो ।

त्यसपछि उसले गाडामा गोरुहरु नार्‍यो र यात्रामा निस्कियो । केही समय पछि उ जंगलको बाटोबाट बाहिर निस्कियो । मरुभूमिमा पानी पाइदैन भन्ने बुझेर उसंग भएका ठुल्ठुल्ला भाँडाहरुमा पानी भर्‍यो । त्यसपछि ६० योजनको मरुभुमि पार गर्न निस्कियो ।

याख्याहरुले जंगलबाट निस्केका गाडीका लावालस्कर हेरीरहेको थिए । जव त्यो मूर्ख ब्यापारी मरुभुमिको वीच भागमा आइपुग्यो तब याख्खाले जादु गरेर दुईवटा सेता बहर गोरुहरुले तानेको एउटा लोभलाग्दो बग्गीको उत्पति गरे । एक दर्जन ढाल र तरबार लिएका बलिया याख्खा सहित सर्वशक्तिवान भगवान जस्ता बग्गीमा उनीसंगै बसेर यात्रा गरिरहेका थिए । प्रमुख याख्खाको टाउको वरिपरी सेतो सङ्गलो पानी र त्यो माथि निला कमलका फूलहरु फूलिरहेका थिए । त्यो मूर्ख व्यापारीका साथमा रहेका व्यक्तिहरु ती फूलहरु टिपेर माला बनाउन पाए हुन्थ्यो भनेर तड्पिरहेका थिए । गोरुका खुट्टाहरु र गाडाहरु हिलै हिलो भएका थिए ।

हावा अगाडिबाट बहिरहेको थियो । त्यो व्यापारीको गाडाहरुको लावा लस्करको धुलोबाट बच्न ऊ लावा लस्करको अगाडि बसेर गइरहेको थियो । याख्खाले आफ्नो बग्गी त्यो ब्यापारीको छेऊमा ल्यायो र नम्रतापूर्वक अभिवादन गर्‍यो । ब्यापारीले पनि याख्खालाई अभिबादन फर्काई आफ्नो बग्गी किनारामा रोकेर गाडालाई अगाडि जान दिए र यख्खासंग बातचित गर्न लागे ।

ब्यापारीले भन्यो ”महोदय, हामीहरु बनारसबाट आएका हौ ।” तपाईका सबै मानिसहरु भिजेका छन् । हिलै हिलो भएका छन् । तपाईको माथि कमलको फूल र लिलि फूलहरु पनि छन् । के तपाई आउदा बाटामा पानी परिरहेको थियो ?

“के भन्नुभएको ?” याख्खाले भन्यो । “यहाँ भन्दा अगाडि एउटा ठूलो हरियो जंगल छ । त्यो भन्दा अगाडि प्रशस्त पानी परिरहन्छ । त्यहाँ धेरै पोखरी र तलाऊहरु छन् जहाँ कमलको फूल र लिलिका फूलहरु पानीमा फूलिरहेका छन् ।” त्यसपछि ती यख्खाले ती ब्यापारीका बारेमा सोध्छन् । “यी गोरुगाडामा के के ल्याउनुभएको छ ?“

ती ब्यापारीले गोरुगाडामा बहुमूल्य सामानहरु भएको उत्तर दिए । “यो गोरुगाडामा यति गह्रौ के सामान ल्याउनुभएको छ ?” यख्खाले सोध्यो । “यसमा पुरै पानी छ ।” ब्यापारीले भन्यो । यति टाढा सम्म पानी लैजान तपाईको विवेकले दिन्छ ? अब पानीको कुनै जरुरत छैन । किनकि अगाडि यति धेरै पानी छ । यी गह्रुगा पानीका भाडा बिना तपाईहरु हलुका भएर छिटो जान सक्नुहुन्छ । यी भाडाहरु फुटाएर पानी फ्याक्न सक्नुहुन्छ । ”हजुरको शुभ दिन रहोस् ।” त्यो याख्खाले यति भनेर आफ्नो बग्गी फर्कायो । “हामी हाम्रो बाटो लाग्नुपर्छ । हामी धेरैबेर सम्म त्यसै रोकियौं । अब आ आफ्नो बाटो लाग्नुपर्छ ।” त्यो याख्खा बग्गीमा चढेर गयो र केही समय पछि आफ्नो शहरको बाटो लाग्यो र अन्तरध्यान भयो । त्यो व्यापारी यति मूर्ख थियो कि उसले यख्खाको उपदेश मान्यो । उसले सबै भाँडाहरु फुटाएर पानी फ्याक्यो । एकलोटा पानी पनि नराखेर सबै पानी फ्याक्यो । त्यसपछि उसले आफ्ना मानिसलाई छिटो छिटो गोरुगाडा हाँक्न आदेश दियो । तर बाटोमा उनीहरुले एक थोपा पानी पनि पाएनन् र तिर्खाले छटपटाउन थाले । सूर्यास्त पछि उनीहरुले गाडाबाट गोरुहरु फुकाइदिए र गोरुहरुलाई गाडीको चक्कामा बाँधिदिए । तर बाँधिएका गोरुहरुका लागि पिउने पानी थिएन । पानी नभएर मानिसले खाना पकाउन सकेनन् । उनीहरु त्यसै बालुवामा लडे र निदाए । जब रात पर्‍यो यख्खाले आक्रमण गरे र सबै मानिस र जनावरलाई मारे । सबै मासु खाए । हड्डी मात्र बाँकी राखेर तिनीहरुले आफ्नो बाटो तताए । कंकाल हड्डी मात्र यताउती छरिएका थिए । तर ५०० गोरुगाडाहरु चाही त्यसै छोडेर गए । त्यो लावा लस्करको  विध्वंशको कारक तत्व चाही त्यही मूर्ख व्यपारी थियो ।

त्यो मूर्ख व्यापारी गएको ५ महिना पछि बोधिसत्वले आफ्ना ५०० गोरुगाडाहरु तयार गरेर यात्रामा निस्कनुभयो । जब उहाँ त्यो भुलभुलैयाको किनारमा पुग्नुभयो । उहाँले पनि पानीका भाँडाहरु भर्नुभयो । त्यसपछि उहाँले सबै मानिसलाई भेला गरेर भन्नुभयो “एक अंजुली पानी पनि मेरो आदेश बिना खर्च नगर्नु ।” यो भुलभुलैयाको जंगलमा बिषालु बिरुवाहरु हुन्छन् । मलाई नसोधी कुनै पनि बिरुवाका पात नचपाउनु, फूलहरु नछुनु, र फलफूल नखानु । वहाँले आफ्ना मानिसहरुलाई सतर्क गराउनु भयो र त्यो लावा लस्करलाई नेतृत्व प्रदान गर्नुभयो

। जब उनीहरु त्यो भुलभुलैयाको वीचमा पुगे पहिला जस्तै याख्खाहरु देखा परे । बोधिसत्व ब्यापारीले याख्खाका राता आँखा देखिहाले र आगन्तुक प्रति शंका गरे । “मलाई थाहा छ यो मरुभूमिमा कुनै पानी छैन ।” उहाँले मनमनै सोच्नु भयो । “यो आगन्तुकको कुनै छाया छैन । त्यसैले यो पक्का पनि याख्खा हुनुपर्छ । यसले मूर्ख ब्यापारीलाई झुक्याएको हुनुपर्छ । तर यो याख्खालाई म कति चलाख छु भन्ने थाहा छैन ।”

उनले यहाँबाट भाग भनेर याख्खालाई हप्काए । “हामी व्यापारी हौं । कहाँबाट पानी आइरहेछ ? त्यो यकिन नगरी पानी फाल्दैनौ ।” यो बुझे पछि याख्खा केही नबोली त्यहाबाट टाप कस्यो । याख्खा भागेपछि मानिसहरुले आफ्ना नेतृत्वकर्ता बोधिसत्वलाई सोधे । हजुर ! यी मानिसका टाउकामा पानी माथि कमलका र लिलिका फूलहरु छन् । उनीहरुको कपाल र कपडाबाट तपतप पानी चुहीरहेको थियो । उनीहरुले भने कि अगाडि बाक्लो जंगल छ, त्यहाँ सधै बर्षा भइरहन्छ । त्यसैले पानी फाल र हलुका भएर चाँडो चाँडो जाऔ ।

बोधीसत्वले आफ्ना सबै मानिसलाई आदेश दिनुभयो कि “तपाईहरु मध्धे कसैले आजको घटनाबारे सुन्नुभएको छ ?” यो भुलभुलैयामा कुनै ताल वा पोखरी छ ? “छैन हजुर ।” सबैले एक स्वरमा उत्तर दिए । यो पानी बिनाको मरुभूमी हो । वहाँले सोध्नुभयो ।

बर्षाको बतासले कति टाडा सम्म चिसो पुर्‍याउँछ ?

“एक योजनसम्म महोदय ।”

बिजुली चम्केको कति टाडा सम्म देख्न सकिन्छ ?

“चार देखि पाँच कोशसम्म । ”

कसैले बिजुली चम्केको देख्नु भएको छ त ?

“छैन हजुर ।”

चट्याङ परेको आवाज कति टाढासम्म सुन्न सकिन्छ ?

“दुईदेखि चार योजनसम्म ।”

कसैले चट्याङ परेको आवाज सुन्नु भएको छ ?

“छैन हजुर ।”

“तिनीहरु मनिस होइनन् याख्खा हुन् ।” ती बुद्धिमान व्यापारीले भन्नुभयो । उनीहरुले आशा गरेका थिए कि हामीले पानी फल्छौ अनि हामीहरु कमजोर भएर मूर्छा पर्छौ । उनीहरु हामीहरुलाई शिकार गर्न चाहन्छन् । बुद्धिमान व्यापारीले भन्नुभयो, त्यो युवा व्यापारी जो हामी भन्दा अगाडि गएको थियो ऊ मूर्ख थियो । उनीहरुका गोरुगाडाहरु सामान लादेर उभिरहेका पाउन सक्छौ । हामीहरुले ती गाडाहरु आज देख्न सक्छौ । अब थोपा पानी पनि नफ्याकी हाम्रा गोरुगाडाहरुलाई जति सक्दो चाँडो हाँक्नुहोस् र अगाडि बढनुहोस्, बुद्धिमान व्यापारीले भन्नुभयो ।

ती व्यापारीले भविष्यवाणी गर्नुभएको जस्तै अगाडि गएका मानिसका कंकाल हाड खोर चारैतिर छरिएका थिए । उभिइरहेका ५०० गाडाहरु पनि फेला पारे । यसबाट सावधान भएर व्यापारीले (बोधीसत्व) आफ्ना गोरुगाडाहरुलाई चारैतिर घेरा हालेर राख्न लगाउनु भयो । जसबाट गोरुगाडाहरुको रेखदेख गर्न सजिलो भयो । यसरी राख्दा बेलुका खाना बनाउन पनि सजिलो भयो । जब सबै जनावरहरु र मानिसहरु आफ्ना वासस्थानमा सुते तब बुद्धिमान व्यापारी र उनका चौकिदारले हातमा तरबार लिएर रातभरी चौकीदारी गरे । जब पूर्व झिमिसे उज्यालो भयो र पूर्व फाट्यो उनीहरुले आ आफ्ना गाडाहरुको पाटपूर्जा फेरेर मर्मत गरेर गाडाहरुलाई दह्रो बनाए । उनीहरु सकुशल आफ्नो गन्तव्य स्थलमा आइपुगे र आफ्ना सामानहरु (भाँडा वर्तन) दुई तीन गुणा बढी मूल्यमा साटन पाए । उनी आफ्नो एउटा साथी पनि नगुमाइकन आफ्नो गाउँमा सकुशल फर्कन सफल भए । यो कथा यही सकियो ।

(स्रोत : www.accesstoinsight.org बाट साभार )

## यो कथाबाट प्राप्त शिक्षा

- बुद्धको सन्देश छ कि अज्ञानी व्यक्तिहरु जव समय बित्छ अनि मात्र यथार्थ कुरा बुझ्दछन् । तसर्थ मूर्खको बिनाश हुन्छ । बोधिसत्व सत्य कुरा बुझेर मात्र निर्णय लिन्थे त्यसैले पानी फालेनन् । याख्खा बिरुद्ध निडर भएर बुद्धिमत्तापूर्वक अगाडि बढनु भयो । उनले कुनै साथि गुमाउनु परेन । यो कथाबाट सत्य र वीर्य पारमिता संकलन गर्न सहयोग मिल्छ ।
- जो सत्य बुझ्दछन् उनीहरु अरु त के याख्खाबाट पनि बच्न सफल हुन्छन् । सुरक्षित तवरले आफ्नो घर फर्कन सफल हुन्छन् । जसले सत्यको रहस्योद्घाटन गर्छ त्यसले खुशी मात्र नल्याएर अर्को जन्ममा बाह्मणको कोखमा जन्म पाउँछन् । उनीहरु अरहन्तको रुपमा अगाडि बढछन् ।

- चार सत्य नबुझ्ने मानिस पुनर्जन्ममा पर्छ र पुन दण्ड सजाय भोग्नुपर्छ । बुद्धले यो कुरा आफ्ना ५०० मानिसलाई भने पछि तिनीहरुले बुद्ध भगवानका शिष्य भई अष्टाङ्ग मार्ग अपनाएर धेरै  लाभ लिए ।

- बुद्धले आफ्नो पूर्वजन्मका कथा भनेर आफ्ना शिष्यहरुलाई शिक्षा प्रदान गर्नुभयो । त्यो मूर्ख व्यापारी देवदत्त थियो, उनका ती ५०० साथीहरु नै देवदत्तमा अनुन्यायी थिए । ती बुद्धिमान व्यापारीसंग भएका ५०० व्यक्तिहरु चाही बुद्ध भगवानका शिष्य थिए  र ती बुद्धिमान व्यापारी चाही बुद्ध हुनुहुन्थ्यो ।

  अरु शिक्षा पाठक वर्गले पत्ता लगाउनुहुनेछ ।

# सरीभावनिज जातक: सरीभाका व्यापारीहरु

यो कथा भगवान बुद्धले सवाथीमा भिक्षुहरुलाई प्रोत्साहित गर्न भन्नु भएको थियो । यदि तिमीले तिम्रो नराम्रा व्यवहारलाई आधि बाटोमा छोड्यौ भने तिमी परिनिर्वाणको बाटो लाग्न सक्छौ । बुद्धले भन्नुभयो । तिमीले भौतिक संसार मात्र हेर्‍यौ भने सेरीभाले सुनको बटुको गुमाएर लामो समय सम्म दुख पाए जसरी नै दुःख पाउनु हुनेछ । बुद्धले धेरै बर्ष अगाडि यो कथा भन्नु भएको थियो ।

पाँच सय बर्ष अगाडि बोधीसत्व एउटा इमान्दार व्यपारीको रुपमा सेरीभा नामको राज्यमा जन्मिनु भएको थियो । वहाँ कहिले एक्लै र कहिले अर्को व्यापारीसंग मिलेर फेन्सी सामान बेच्न जानुहुन्थ्यो । त्यो साथी ज्यादै लोभी थियो । त्यो लाृभी व्यापारी पनि उस्तै  सामानका कारोबार गर्दथ्यो ।

एकदिन दुबैजना तेलाबह नदी पार गरेर व्यापार गर्न अन्धापुरा देशको एउटा उदयमान शहरमा पुगे । दुबै बीच व्यापारमा प्रतिष्पर्धा नगर्नका लागि दुबैले शहरलाई भागबण्डा गरेका थिए र आआफ्ना क्षेत्रमा ग्राहकका ढोका ढोकासम्म गएर उनीहरु आफ्ना सामानहरु बेच्दथे । त्यही शहरमा एकजना रामशाक्ले नामका मिस्त्री पनि बस्थे ।.धेरै बर्ष अगाडि जब उनी गरीव थिए त्योबेला उनको भाग्यले काम गरेन । उनका परिवारका सबै पुरुष सदस्यहरुको मृत्यु भयो । बाँच्ने मध्ये एकजना हजुरआमा र उनकी एउटी नातिनी मात्र थिइन् । उनीहरु ज्याला मजदुरी गरेर आफ्नो जीविका चलाउँथे ।

एकदिन अपरान्ह एउटा लोभी साइकल व्यापारी आफ्नो सामान बिक्री गर्दै शहर परिक्रमा गर्नै शिलशिलामा ती हजुरआमाका घरमा पुगेर “गहना बिक्रीमा छ”, “गहना बिक्रीमा छ” भन्दै कराउँछ । जब त्यो नातिनी केटीले त्यो आवाज सुन्छे, तव उसले हजुरआमासंग  आफूलाई पनि एउटा गहना किनी दिन आग्रह गर्छे  ।”

हजुरआमाले भन्नुभयो “हामी गरीव छौ नानी । हामीसंग एक पैसा पनि छैन । हामीसंग गहनासंग साँट्ने सामान पनि छैन भने के ले त्यो गहना किनीदिनु र ।”

केटीले आकास्मात पुरानो बटुको सम्झन पुगी र भन्छे । “हजुरआमा यो हर्नुहोस त, हामीसंग यो पुरानो बटुको छ, यसको कुनै उपयोग हुन सक्दैन तसर्थ योसंग गहना साटौ है ।“ त्यो नातिनीले देखाएको त्यो पुरानो बटुको त्यो घरका दिवंगत घरमुली हजुरबाले जोडेका थिए जो आफैमा एक व्यापारी थिए । उनी आफ्नो खाना त्यही बटुकामा राखेर खान्थे । उनको मृत्युपछि त्यो बटुको पुराना भाँडा र कराईहरु राखीएको ठाँउमा फालिएको थियो । हजुरआमाले त्यो बटुको बिर्सी सकेकी थिइन् । लामो समयसम्म नचलाई राखेकोले  त्यो बटुकामा उगाल जमेर कालो भएको थियो । ती दुबै महिलालाई त्यो सुनको बटुको हो भन्ने पत्तै थिएन । हजुरआमाले ती व्यापारीलाई बोलाएर बस्न अनुरोध गर्नुभयो । उनले बटुको त्यो व्यापारीलाई देखाएर सोध्नुभयो “यसले के आउँछ बाबु? कुनै गहनाको माला आउँछ ?” त्यो साइकलवाला व्यापारीले रिसाएर त्यो बटुको हातमा लिएर घुमायो । यसको मूल्यमा शंका गऱ्यो । बटुको पछाडि सियो कोरेर हेर्दा उसले थाहा पायो कि यो सुनको बटुको हो । केहीबेर त्यो व्यापारीले सोच विचार गऱ्यो । त्यतिबेलासम्म उसको मनमा लोभ पलाइसकेको थियो । अन्त्यमा उसले केही चिज पनि नदिई त्यो बटुको सित्तैमा लिने विचार गऱ्यो । रिसाएको अभिनय गरेर भन्यो “किन यो काम नलाग्ने बटुको ल्याएर देखाएको ? यसलाई एक पैसा पनि पर्दैन ।” उसले बटुकोलाई पर पुग्ने गरी फ्याकेर उठ्यो र सामान बोकेर आफ्नो बाटो लाग्यो । ती व्यापारीहरु बीच यस्तो संझौता बनेको थियो कि एक जनाले त्यो गल्लि घुमेर गएपछि अर्को पुनः त्यो गल्लिमा गएर सामान साँटेर आउनु पर्थ्यो । त्यसैले त्यो अर्को व्यापारी पनि “गहना बिक्रीमा छन्, गहना बिक्रीमा छन्” भन्दै कराउदै त्यही घरमा पुग्यो ।

अर्को व्यापारी आएको देखेर ती केटीले पुनः गहना किनिदिन उनकी हजुरआमालाई अनुरोध गरिन् । ती बुढी हजुरआमाले व्यापारीलाई भन्नुभयो “बाबु, हामीसंग एउटा पुरानो बटुको छ । अघि आएको व्यापारीले काम नलाग्ने भनेर उक्त बटुको फ्याकेर फन्किएर गयो । हामीसंग दिने अरु के नै छ र ?”

दोस्रो व्यापारीले बूढीआमासंग भन्यो “त्यो व्यापारी चाही शैतान थियो बुढीआमा । हेर्दा र यसको आवाज सुन्दा यो धेरै राम्रो बटुको हो । म यो बटुको लिन सक्छु ।”

“त्यसो भए भित्र आउ न त ?“ बुढीआमाले भन्नुभयो । जब त्यो साइकलवाला व्यापारी घरभित्र पस्यो । बुढीआमाले  उसलाई पिरा ओछ्याई दिनुभयो र लजाउदै बटुको उसका हातमा राखी दिनु भयो । उसले तुरुन्त यो सुनको बटुको भनेर

चिनी हाल्यो । उसले भन्यो “यो बटुकाको मूल्य एकलाख चाँदीका टुका वरावर छ । तर हजुरआमा म संग त्यति टुका छैन ।” उसका कुरा सुनेर बुढीआमा पनि छक्क पर्नुभयो र भन्नुभयो “अर्को साइकलवालाले त केही छिन अगाडि आएर एक कौडीको पनि भाउ छैन भन्यो नि त । ऊ त रिसाएर बटुको भुँइमा फालेर हिड्यो ।” यो मूल्यवान त थिएन होला, तर तपाईको भाग्यले होला यो सुनमा परिणत भयो । कृपया यो बटुको लिनुहोस् र हामीलाई केही चिज दिनुहोस् । जसबाट हामी खुशी हुनेछौ । त्यो साइकलवाला व्यापारीसंग ५०० मात्र चाँदीका टुका थिए र अरु ५०० चाँदीका टुका बराबरको साइकलमा सामान थियो । त्यसैले उ संग भएको सबै चिज ती महिलालाई दियो । ती व्यापारीले उनको तराजु, झोला र आठवटा चाँदीका टुका आफूसंग राखी अरु सबै पैसा र सामान ती बुढीआमालाई दिएर एक अर्कामा धन्यवाद साँटासाँट गरे । ती व्यापारीले बाँकी रहेका चाँदीका टुका माझीलाई दिएर डुङ्गामा बसी नदी तरेर पारी पुगे । यसबाट सबैजना खुशी भए । केहीबेरमै त्यो पहिले आएको धुर्त व्यापारी घुमफिर गरेर पुनः त्यही धरमा नै पगेर र उसले भन्यो “यो तपाईले माग्नु भएको गहनासंग म यो बटुको साँट्न सक्छु । खै बटुको ल्याउनुहोस् त ! भइगयो म केही चिज दिउला ।“ उसका यस्ता कुरा सुनेर बुढीआमाले त्यो धुर्त व्यापारीलाई ठग भन्दै झम्टिइन् । उनले भनिन् “तिमीले हाम्रो बटुकालाई एक कौडीमा (आधा पैसामा) पनि नजाने भनेको हाइन ? हाम्रो भाग्य दाहिने भयो । तिमी पछि एकजना इमान्दार व्यापारी यहाँ आउनुभयो र भन्नुभयो यसको मूल्य एक हजार चाँदीका टुका बराबर छ । उनले हामीलाई एक हजार चाँदीका टुका दिएर बटुको लिएर जानुभयो । तिमी धेरै ढिला भयौ ।”

त्यो धुर्त साइकल व्यापारी बुढीआमाको कुरा सुनेर धेरै दुखित भयो र भन्योृ । “उसले मलाई डकैत गर्‍यो ! उसले मलाई डकैत गर्‍यो ! उसले मैले लिन लागेको एक हजार चाँदीका टुका बराबरको बटुको लिएर गयो ।” उक्त व्यापारीले आफूलाई नियन्त्रण गर्न सकेन र पागल भयो । उसंग भएका सबै पैसा र सामान भुँइमा फ्याकेर लगाएको लुगा च्यात्यो अनि तराजुको डण्डि पनि भाँच्यो । त्यसपछि अर्को व्यापारीलाई समाउन दगुर्दै नदीतिर गयो । उ नदीको किनारमा पुग्दा नौका नदीको वीचमा पुगिसकेको थियो । उसले नौका चलाउने माझीलाई चिच्याएर भन्यो “चाँडै नौका लिएर आइज ।” तर नौकामा चढेका इमान्दार व्यापारीले नौकाको शुल्क आफूले तिरीसकेको हुँदा अगाडि लैजान र छिटो नदी तार्न भने । त्यो दुःखी व्यापारी भने नदीको ओल्लो किनारमा उभिएर पल्लो किनारमा बटुका लिएर जादै गरेको आफ्नो प्रतिद्वन्दीलाई हेरेको हर्‍यौ गर्‍यो । ऊ भित्र कोधको अग्नी दन्कियो । भित्रभित्रै अर्को व्यापारीप्रति द्वेष बढ्दै गयो र हृदय

तातो भएर आयो ।  तलाऊको डिल फुटे जसरी नै उसको मुटु फुट्यो । उसको मुखबाट रगतका फल्सा फाल्सा आउन थाल्यो । उ अर्को व्यापारीले सुनको बटुको लग्यो भन्ने डाहाले जहाँको त्यही ढल्यो । ती इमान्दार व्यापारी चाही सेरिभा फर्किएर आएर परोपकारी संस्थामा राम्रा कार्य र सत्कर्म गरेर आफ्नो बाँकी जीवन बिताए ।

जब भगवान बुद्धले यो कथा समाप्त गर्नुभयो । उहाँ आफैले आफूलाई इमान्दार व्यापारी र देवदत्तलाई त्यो लोभी धुर्त व्यापारीको रुपमा पहिचान गराउनु भयो । धुर्तताकै कारण देवदत्तले धेरै जन्मसम्म दुख पाइरहे ।

(स्रोत :www.accesstoinsight.org बाट साभार )

## यो कथाबाट प्राप्त शिक्षा

- इमान्दार व्यापारीले शीलको पालन गरे, सधैं सत्य बोले, कहिल्यै हिंसा गरेनन् तसर्थ त्यसैले उनको सधै विजय भयो । लोभी धुर्त व्यापारीले झुटो बोल्यो धुर्तता र हिंसापूर्वक बटुको फाल्यो, अरुलाई ठग्न खोज्यो । त्यसैकारण उसको पराजय भयो र मुटु फुटेर मर्नुपर्‍यो ।
- जो अर्काको धनमा लोभ र द्वेष गर्छ उनीहरुको मृत्यु लोभी धुर्त व्यापारीको जस्तै हुन्छ । त्यसैले लोभ र द्वेष गर्नु हुदैन।
- जसले इमान्दारीपूर्वक काम गर्छ त्यसले यस जन्ममा मात्र खुशी नल्याएर अर्को जन्ममा पनि सत्कर्ममा नै तल्लीन हुन्छ। त्यसैले जस्तो मति उस्तै गति भनेझैं इमान्दार व्यापारी अर्को जन्ममा बुद्ध भएर जन्मिए भने धुर्त व्यापारीका चाँही देवदत्त भएर जन्मिए ।
- हजुरआमा र नातिनी बनीबुतो गरेर भएपनि इमान्दारीपूर्वक जीवन निर्वाह गरीरहनुभएको हुनाले त्यो लोभी धुर्त व्यापारीले ठग्न सकेन । इमान्दार मानिसलाई कसैले ठग्न सकिदैन ।
- पूर्वजन्मको कुकर्मका कारण देवदत्तले धेरै जन्मसम्म दुख पाए भने इमान्दार व्यापारीले चाँही अर्को जन्ममा बुद्धत्व प्राप्त गरे ।

अरु शिक्षा पाठकवर्गले पत्ता लगाउनुहुनेछ ।

# मताकभत जातक: रुने र हाँस्ने बोको

एकदिन बुद्ध जेतावनमा बसिरहनु भएको थियो । त्यहीबेला केही भिक्षुहरुले उहाँलाई सोध्नुभयो । “के बोका, बाखा, भेडा र अरु जनावरहरुलाई पितृहरुको नाममा भोग दिँदा पितृहरुले पाउछन् ?“ बुद्धले भन्नुभयो “अहँ पाउदैनन् ।” कसैको पनि जीवन लिएर कहिल्यै पनि भलो हुँदैन । केवल मरेका व्यक्तिको नाममा भोग दिएको किन नहोस् । यसले कसैको भलाई हुन सक्दैन । यसै सन्दर्भमा भगवान बुद्धले यो कथा सुनाउनु भएको हो ।

धेरै बर्ष अगाडि जब राजा ब्रह्मदत्त जितावनमा राज्य गर्दथे, त्यहीबेला एकजना ब्राह्मणले आफ्ना दिवंगत पितृको लागि एउटा बोकोलाई भोग दिन र आफ्ना शिष्यलाई भने “मेरा शिष्यहरु हो, यो बोकोलाई नदीमा लैजाऔ, यसलाई राम्ररी नुहाइदेओ र काइयाले कोरेर चिटिक्क पारेर ल्याओ । यसको घाटीमा एउटा माला पनि लगाइदेओ । केही अन्न पनि खान देओ । अनि यहाँ लिएर आओ । हुन्छ हजुर भनेर ती शिष्यहरुले त्यो बोकोलाई खोलामा लिएर गए ।



जब उनीहरुले त्यो बोकोलाई नदीतिर लैजादै थिए । त्यो बोको अस्वभाविक रुपले प्याटाटा प्याटाटा गरेर हाँस्न थाल्यो । त्यसको केहीबेर पछि नै त्यो बोकाले ठूलो स्वरले बआआ.. गरेर रुन थाल्यो ।

ती नवयुवक शिष्यहरु त्यो बोकाको व्यवहार देखेर तीन छक्क परे । नवयुवक शिष्यहरुले बोकालाई सोधे । "तिमी किन आकास्मात यसरी हाँसेका ? त्यसपछि फेरी किन त्यति जोडले रोएको ?" "यो प्रश्न तिमीहरुले तिम्रा आफ्ना गुरुलाई सोध ।" बोकाले भन्यो ।

ती शिष्यहरुले त्यो बोकालाई हतार हतार गरेर नुहाएर गुरु कहाँ लिएर गए र भएको सबैकुरा आफ्ना गुरुलाई सुनाए । यो सुनेर गुरुले त्यो बोकालाई सोधे "तिमी किन त्यसरी हाँसेको र त्यसरी जोडले रोएको ।" एकछिन पछि त्यो बोकाले भन्न सुरु गऱ्यो । "म पनि तिमी जस्तै वेद पढाउने गुरु थिएँ । मैले पनि तिमीले जस्तै एउटा बोकालाई मरेका आफन्तका नाममा भोग दिएको थिएँ । त्यो एउटा मात्र बोको मारेकाले मेरो टाउको ४९९ पटक काटी सकिएको छ । म हाँसैं, किनकि जनावरको रुपमा यो नै मेरो यो अन्तिम बलिदान हुनेछ । आजबाट मैले यो दुखःबाट मुक्ति पाउनेछु । अर्कोतिर म रोए किनकि मलाई मारेर तिमीले पनि तिम्रो टाउको ५०० पटक कटाउन गइरहेका छौ । यो मेरो तिमी प्रतिको दया थियो । त्यसैले म रोएँ ।"

"ठीक छ बोका, म तिमीलाई मार्दिन् । "

"ब्राह्मण !" आश्चय मान्दै बाख्राले भन्यो ।

"तिमीले मारे पनि नमारे पनि म आज मृत्युबाट उम्कन सक्दिन ।"

"तिमी चिन्ता नगर ।" बोकालाई आश्वस्त पार्दै बाह्मणले भने "म तिमीलाई कडा सुरक्षा दिएर राख्छु ।"

" तिमीले मेरो कुरा बुझेनौ । " बोकाले भन्यो

तिम्रो सुरक्षाको शक्ति कमजोर छ र मेरो कुकर्म धेरै शक्तिशाली छ, त्यसैले तिमीले सुरक्षा दिन सक्दैनौ ।

ब्राह्मणले त्यो बोकाको डोरी फुकाएर छोडिदियो र शिष्यहरुलाई भन्यो "यसलाई हानी हुने कुनै ठाउँतिर नलैजानू र कसैलाई पनि यो बोकालाई हानी गर्न नदिनु भनी आदेश दिए ।" शिष्यहरुले पनि आफ्ना गुरुको आदेश पालन गरे र बोकालाई बचाए ।

जब त्यो बोको डोरीबाट छोडियो र मुक्त भयो त्यो घाँसमाथि चर्न थाल्यो । एकछिन पछि उ ठाडो घाँटी लगाएर पोथ्राको पात खान लागेको मात्र के थियो छेऊमै रहेको ठूलो चट्टानमा बज्र पऱ्यो, त्यो चट्टानबाट एउटा धारिलो ढुङ्गाको टुक्रा उछिट्टिएर आई त्यो बोकाको घाँटी काटियो । त्यो बोको तुरुन्तै मऱ्यो । मरेको बोकाको वरिपरी धेरै मानिसहरु भेला भएर आश्चर्यचकित भै त्यो घटनाको बारेमा कुरा गर्न थाले ।

बृक्ष देवताले त्यो बोका किनेको समयदेखि उसको नाटकीय मृत्यु सम्मका सबै घटनाहरु अवलोकन गरिरहेको थियो । त्योबेला म बृक्ष देवता थिएँ भन्दै बुद्धले आफ्ना पूर्व जन्मका कथालाई यही समाप्त गर्नुभयो

(स्रोत :www.accesstoinsight.org बाट साभार )

## यो कथाबाट प्राप्त शिक्षा

- यो कथाबाट यो शिक्षा लिन सकिन्छ कि जसले अर्काको जीवन लिन्छ, उसको पनि अर्काले जीवन लिन्छ । हिंसाले हिंसा नै ल्याउँछ ।
- जसले पाप गर्छ उसले दण्ड पाउँछ, । त्यो भनेको पापीले पुनर्जन्म पाउंछ र दुख भोग्नुपर्छ भनेको हो । पशुको हत्या कहिल्यै पनि गर्नु हुदैन्, गऱ्यो भने आफ्नो पनि त्यसरी नै हत्या हुन्छ । पशुहरुप्रति दयावान बन्नुपर्छ ।
- बोकाले प्रज्ञा मार्फत ब्राह्मणलाई बचायो । बोकालाई आफू मर्छु भन्ने थाहा थियो चट्याङबाट मरे पनि ब्राह्मणले बली दिएर मारे पनि मर्नु नै थियो । यदि बोकाले आफु बलि मार्फत मरेको भए ती ब्राह्मणले ५०० पटक मर्नु पर्थ्यो । बोकाले आफू मर्ने बेलामा पनि प्रज्ञा मार्फत ब्राह्मणलाई बचायो ।
- अन्धविश्वासमा लाग्नु हुदैन । अन्धविश्वासकै कारण त्यो वेद पढने बाह्मणले बोको भएर जन्मनु पऱ्यो र ५०० पटक आफ्नो घाँटी कटाउनु पऱ्यो । शास्त्रीय ज्ञान भन्दा अनुभवसिद्ध ज्ञान उपयोगी हुन्छ ।
- एउटा दुखःदायी कुरा के हो भने जसले कुकर्म गर्छ उसले पुनः जन्मनु पर्छ र दुख भोग गर्नुपर्छ । कर्मको नियम नै यस्तै हुन्छ । ती बृक्ष देवताले सबै स्रोताहरुलाई नर्कको बारेमा बताएर डर सृजना गर्नुभयो । ती व्यक्तिहरु यति डराए कि उनीहरुले पशुको बली वा भोग दिने चलनलाई पूर्णरुपमा छोडिदिए । त्यसपछि ती देवताले राम्रा कार्य /सुकर्म गर्न धर्मदेशना दिनुभयो । अन्त्यमा

ती देवता पनि मरेर गए र उनकै कर्म अनुसारको फल प्राप्त गरे । धेरै पुस्ता पछि सम्म उनले ती देवताका उपदेशहरु इमान्दारीपूर्वक पालना गर्दै गए । उनीहरुले आफ्नो जीवन नै असल कर्ममा  लगाए । त्यसैकारण धेरैजनाले स्वर्गमा पुनर्जन्म पाए ।

- ब्राह्मणले बोकालाई प्रदान गरेको सुरक्षाको शक्ति कमजोर थियो तर बोकाको कुकर्म धेरै शक्तिशाली थियो, त्यसैले ब्राह्मणले बोकालाई सुरक्षा दिन सकेनन् ।
- उपदेश सिधा छ "जस्तो मति उस्तै गति" प्राप्त हुन्छ ।

अरु शिक्षा पाठक बर्गले पत्ता लगाउनुहुनेछ ।

# कुहका जातकः सुन भन्दा मूल्यवान खर

बुद्धले यो कथा जेतबनमा ती भिक्षुलाई बुझाउन भन्नु भएको थियो जसले अरु भिक्षुहरुलाई धेरै दुखः दिएको थियो ।

धेरै बर्ष अगाडि बनारसमा ब्रह्मदत्त नाम गरेका राजा राज्य गर्दथे । एउटा लट्टैलट्टा भएको लामो जटा पालेको सन्यासी पनि त्यो गाउँको नजिकैको जंगलमा बस्दथे । त्यहाँका जमिन्दारले उनको लागि जंगलमा एउटा आश्रम बनाइदिएका थिए र उनले त्यो सन्यासीलाई सधै आफ्नो घरमा बोलाएर मीठो मीठो भोजन गराउँथे ।

त्यो जमिन्दारलाई डाँकाको ज्यादै ठूलो डर थियो । डाँकाबाट कसरी धन जोगाउने भन्ने उनलाई ठूलो चिन्ता हुन्थ्यो । त्यसैले उनले आफ्नो धन कसैले थाहा नपाउने ठाउँमा लुकाउने निधो गरे । उनी त्यो लामो जटा पालेको सन्यासीलाई नै सन्यासको उकृष्ट नमुना मान्दथे । उनले सुनका १०० वटा टुक्रा ल्याएर त्यो सन्यासीको आश्रम नजिक जमीनमुनि गाडिदिए । अनि ती सन्यासीलाई आफ्नो गाडधनको हेरचाह गर्न अनुरोध गरे ।

सन्यासीले भने “हजुर मलाई केही पनि भन्नुपर्दैन । मैले यो संसारबाटै सन्यास लिई सकेकोछु । हजुर हामी सन्यासीले अरुसंग के छ ? त्यसको वास्ता गर्दैनौ ।”

“अहो ! त्यो त स्राहै राम्रो कुरा ।” जमिन्दारले भन्यो । सन्यासीमाथि  पूर्ण विश्वास लिएर जमिन्दार घर फर्के ।

जब त्यो जमिन्दार आश्रमबाट टाढा पुग्यो र देखिन छाड्यो । सन्यासीको मनमा पाप पलायो र उनले विचार परिवर्तन गरे । यहाँ जीवनभर पुग्ने धन छ । भाग्यले दिएको संपत्ति त्यसै किन छोड्नु भन्दै  केही दिन पछि ती सन्यासीले सुन गाडेको ठाउंमा खनेर सुन झिके र  खाल्डो पुरीदिए । यो कुरा कसैले थाहा नपाउन् भनी त्यो खाल्डोमाथि बाटो बनाईदिए । अर्को दिन सन्यासी जमिन्दार कहाँ  गयो र भन्यो “हजुर, म लामो समयदेखि हजुरको सेवा गरेर बसिरहेको छु । एउटा सन्यासी भएर पनि यति लामो समय सम्म एउटै ठाँउमा बस्दा म सांसारिक

जस्तो भएको छु जुन म जस्तो सन्यासीलाई सुहाउने करा होइन । अब म यहाँ बस्न सक्दिन । मेरो यहाँबाट हिडने समय आयो ।”

धनी जमिन्दारले ती सन्यासीलाई त्यही बस्न अनुरोध गरे तर उनको केही लागेन । ती सन्यासीले आफ्नो निर्णय बदलेनन् ।

अन्त्यमा जमिन्दारले भने “हजुर जानुहुन्छ भने जानुहोस् । हजुरलाई शुभकामना ।” विदा गर्ने मन नहुँदा नहुदै पनि ती जमिन्दारले ती सन्यासीलाई गाउँको पल्लो छेऊसम्म पुऱ्याएर घर फर्कीए । धेरै बेरको यात्रा पछि ति सन्यासी चाप्लुसी गर्न पुनः ति धनी जमिन्दारको घरमै फर्किए । उनको लट्टा परेको कपालमा एउटा खरको त्यान्द्रो टाँसिएर गएको रहेछ । त्यो फिर्ता गर्न भनी उनी तुरुन्त गाउँमा आए ।

“के कारणले हजुर फेरी यो गाउँमा आउनुभयो ?” सन्यासीलाई देखेर तीन छक्क पर्दै जमिन्दारले भने ।

सन्यासीले भन्यो “हजुरको छानाको खरको त्यान्द्रो मेरो कपालमा टाँसिएर आएछ । हामीजस्ता सन्यासीले कसैको केही चिज पनि सित्तैमा लिनु अपराध हो । त्यसैले हजुरको खरको त्यान्द्रो फिर्ता गर्न आएको हुँ ।

जमिन्दारले भने “हजुर त्यो फ्याकी दिनुहोस् र आफ्नो बाटो लाग्नुहोस् ।” जमिन्दारले मनमनै सोचे र सन्यासीसंग धेरै प्रभावित भए । “त्यो सन्यासी यति इमान्दार रहेछ कि उसले अर्काको एउटा खरको त्यान्द्रो पनि लिएर गएन । यस्तो मानिस त विरलै पाइन्छ ।”। जमिन्दारले सन्यासीलाई पुनः हार्दिकतासाथ बिदा गरे । त्यहीबेला बोधीसत्वले व्यापारीको रुपमा पुनर्जन्म लिनु भएको थियो । त्यही गाउँमा उक्त व्यापारी व्यापार गर्न जान्थे । त्यो सन्यासी र जमिन्दारको वार्तालापको दृश्य देखेर उनी रोकिए । त्यो संन्यासीले भनेको सबैकुरा उनले साक्षी जस्तै बनी नियालीरहेका थिए । उनको मनमा शंका उत्पन्न भयो । पक्कै पनि त्यो सन्यासीले जमिन्दारको कुनै कुरा गायब पारेको हुनसक्छ । उनले जमिन्दारलाई सोधे “तपाईले यो सन्यासीलाई केही कुरा रेखदेख गर्न छाडनु भएको थियो कि ?” “हो हजुर !” अलिक लजाएर जमिन्दारले उत्तर दिए । । “सय टुका सुनको हेरचाह गर्न लगाएको थिए ।” जमिन्दारले भन्नुभयो । “तपाई तुरुन्त गएर हेर्नुहोस् त त्यो सुरक्षित छ कि छैन्?” ती व्यापारीले जमिन्दारलाई सुझाव दिए । जमिन्दारले सुनका टुका गाडेको ठाउँमा गई खोतली हेर्दासुनका सबै टुकाहरु गायब भएका थिए ।

ती जमिन्दार हस्याङ फस्याङ गर्दै व्यापारी कहाँ आएर रुन लागे । "त्यहाँ केही पनि छैन?।" व्यापारीले प्रश्न गरे र फेरी भने "पक्कै पनि त्यो लट्ठावाला सन्यासीले नै चोरेको हुन सक्छ , त्यसलाई समातौं ।" दुबैजना दगुरेर गई त्यो सन्यासीलाई समाते । उनीहरुले त्यो सन्यासीलाइ सुनका टुक्रा कहाँ राखेको छस् भनी सोधे । उसले मलाई थाहा छैन भनी जवाफ दियो । जबसम्म सुन राखेको ठाउँ उसले बताएन तबसम्म दुबैजनाले त्यसलाई पिटे । अन्त्यमा, उनीहरुले सुनका टुक्रा फेला पारे । सुनका टुक्रा फेला पारे पछि ती सन्यासीलाई भने "जसरी एउटा खरको त्यान्द्राले तिम्रो चेतनामा प्रभाब पार्‍यो त्यसरी नै सुनले किन पार्न सकेन? ल, आफ्नो बारेमा आफै विचार पुर्‍याऊ । सन्यासीको आवरणमा अवदेखि यस्तो ठगी र चोरी कहिल्यै नगर्नु ।"जब ती व्यापारीको देहान्त भयो उनले आफ्नो कर्म अनुसारको फल प्राप्त गरे ।

अन्त्यमा बुद्धले यो कथा सम्पन्न गर्दै भन्नुभयो "यो भिक्षु पहिला जस्तै अहिले पनि नराम्रा क्रियाकलापहरु गरिरहेको छ ।" त्यसपछि बुद्धले पूर्वजन्मका कुरा सुनाउंदै भन्नुभयो ।" यो भिक्षु पहिला जन्मको त्यही सन्यासी थियो र म चाही त्यही बुद्धीमान व्यापारी थिएँ ।

(स्रोत :www.accesstoinsight.org बाट साभार )

## यो कथाबाट प्राप्त शिक्षा

- यो कथाको केन्द्रीय शिक्षा भनेको शील पारमिताको संग्रह गर्नु नै हो । ठग सन्यासीले सुन चोरी गर्‍यो र दण्ड पायो । ठगेको कुरा कसै गरेर लुकाउन र पचाउन सकिदैन । ठग सन्यासी बुद्धिमान व्यापारीबाट गिरफ्तार भयो । कुटाइ खानसम्म खायो र सुनका टुक्रा पनि फिर्ता गर्नुपर्‍यो । यसर्थ कसैले कहिल्यै पनि चोरी गर्नुहुन्न । शील पारमिताको पालन गर्नुपर्छ ।

- पूर्वजन्ममा जस्तो कर्म गरेको छ त्यसकै आधारमा पुनर्जन्म हुन्छ । बुद्धिमान असल व्यापारी भगवान बुद्ध भएर जन्मनुभयो भने त्यो ठग सन्यासी चाही ठग भिक्षु भएर जन्मियो ।

- भौतिक सम्पतिले कहिल्यै पनि सुख दिदैन । जमिन्दारलाई पहिले डाँकाले आफ्नो सुन लुटेर लान्छ कि भन्ने डर थियो, पछि चोरले लान्छ कि भन्ने डर थियो । यसरी ऊ सधै डर नै डरमा रह्यो ।
- ठग व्यक्तिले इमान्दारीताको बहाना बनाउँछन् । टाउकामा टाँसिएको खरको त्यान्द्रो फिर्ता दिन आउनु भनेको इमान्दारीताको बहाना मात्र थियो । जसरी एउटा खरको त्यान्द्राले उसको चेतनामा प्रभाव पार्‍यो त्यसरी नै सुनले किन पार्न सकेन ? किनकि उसंग सुनको लोभ र मोह थियो ।
- चिवर लगाएर मात्र चित्त सफा हुदैन । सन्यासी वा भिक्षु भएर सबै इमान्दार हुदैनन् । एक दुई ठग भिक्षु पनि हुन्छन् । भिक्षु भएर पनि चित्त सफा गर्नुपर्छ ।
- यो कथामा बुद्धले चातुर्य र वीर्यता परमिताको प्रदर्शन गर्नु भएको छ ।

यो भन्दा अरु शिक्षा पाठक वर्गले पत्ता लगाउनुहुनेछ ।

# कुम्भ जातक

जुनबेला बुद्ध जेतबनको सवाथिमा बसिरहनुभएको थियो । त्यहीबेला एकजना अज्ञानी धनी बुद्धधर्मालम्बीले आफ्नो शहरको महोत्सव मनाउन ५०० महिलालाई निम्ता दिएका थिए । त्यहीबेला बिशाखा पनि बुद्धलाई भेट्न आउनुभएको थियो ।

त्यो पिउने पर्व थियो । "तर हजुर म चाही पिउदिन ।" विशाखाले उत्तर दिनुभयो ।

महिलाले उत्तर दिइनु "ठीकै छ । बुद्धका लागि खानेकुराहरु तयार गर्नुहोस् । यो पर्व हामीले हाँसीखुसी मनाउनु पर्छ ।"

अर्को विहान विशाखाले बुद्धको लागि आफ्नो घरमा चार किसिमका खानाहरु तयार गर्नुभयो । अर्को दिन दिउसो उनी बुद्धका शिक्षा सुन्न र उनलाई सुगन्धित फूलहरु र धुपहरु चढाउन जेतवन जानुभयो । त्यो बेला अरु महिलाहरु मदिरा पिएर लठ्ठ भएका थिए । उनीहरु पनि विशाखा संगै साथ लागेर बुद्धलाई भेट्न गइरहेका थिए । बिहारको द्वारमा पुग्दा पनि उनीहरु पिइरहेका थिए । विशाखाले हलमा प्रबेश गरेर भगवान बुद्धलाई झुकेर श्रद्धापूर्वक अभिवादन गर्नुभयो र बुद्धको छेऊमा गएर शान्तपूर्वक बस्नुभयो । उनका साथ लागेर आएका पाँच सय महिलाहरु त धनी मालिक्नीहरु थिए । तर अचम्म ती महिलाहरु कही कतै पनि देखिएनन् । बुद्धको अगाडि पनि देखिएनन् । केहीबेर पछाडि ती मध्येका कोही चाँही नाचीरहेका थिए, कोही चाँही गाइरहेका थिए । कोही चाँही मदिराले मातेर वरपर घुमीरहेका थिए र कोही चाँही एकआपसमा झगडा गरीरहेका थिए ।

उनीहरुलाई तुरुन्तै प्रेरणा जगाउनका लागि बुद्धले आफ्ना आँखीभुईबाट कालो निलो प्रकाश निकाल्नु भयो । केही छिनमा नै त्यहाँ पूरै अँध्यारो भयो । ती महिलाहरु मृत्युदेखि डराएर तुरुन्तै भलादमी जस्ता भए । त्यसपछि बुद्ध आफू बसेको ठाउँबाट अन्तरध्यान हुनुभयो र माउण्ट मेरुको टापुमा गएर देखापर्नु भयो । उहाँका आँखीभुईमाथि गुजुल्टो परेको केशबाट हजारौ चन्द्र र सूर्यहरु उदाए

जस्तै गरी प्रकाश निस्किएर सबै स्थानहरु अति नै उज्याला भएका थिए । उहाँले सोध्नुभयो । “के तपाईहरु अहिले पनि अन्धकारबाट घेरीइरहनु भएकोछ ? तपाईहरु किन उज्यालो प्रकाश खोज्नुहुन्न ?“

बुद्धका कुरा सुनेर उनीहरुको घैटामा घाम लाग्यो । त्यसपछि ती पाँच सय महिलाहरुको आँखा  खुले र झसंग भएर ज्ञान प्राप्त गर्ने तर्फ लागे

त्यसपछि बुद्ध त्यहाबाट फर्किएर प्रवचन कक्षमा प्रवेश गर्नुभयो । विशाखाले पुनः एक पटक झुकेर बुद्धलाई अभिवादन गर्नुभयो र सोध्नुभयो । “रक्सीले मानिसको चालचलन बिगार्छ र लाजमर्दो बनाउँछ । हजुर यो रक्सी खाने प्रथा कहिले देखि शुरुभयो ?” विशाखाको यही प्रश्नको उत्तर दिनका लागि नै बुद्धले यो पुरानो कथा सुनाउनु भएको हो ।

धेरै बर्ष अगाडि बनारसमा ब्रह्मदत्त नामका राजा राज्य गर्दथे । त्यहीबेला काशीमा एउटा सुरा नामको शिकारी पनि बस्दथे । उनी हिमालयमा खेल हेर्न आफ्नो घरबाट निस्किए । उनी हिमालयतिर जाँदा बाटोमा एउटा जंगल थियो र त्यो जंगलमा एउटा अचम्मको रुख थियो जसका हाँगाहरु मनिस जति नै अग्ला थिए । ती हाँगाहरु आपसमा जोडीएर एउटा गाँठो बनेको थियो त्यहाँबाट अरु तीनवटा हाँगाहरु फैलिएर गएका थिए । जोडिएका हाँगा देखि काण्ड सम्म एउटा ठुलो धोद्रो थियो । त्यसमा धेरै पानी अट्न सक्थ्यो । जब पानी पर्थ्यो त्यो ठुलो धोद्रो भित्र पानीले भरिन्थ्यो । त्यो धोद्रो परेको रुखको छेऊछाउमा एउटा अमिलो आरुबखडाको रुख थियो त्यो आरुबखडाको रुखमा मरिचको लहरो पनि चढेको थियो र मर्चाको लहरो पनि थियो । आरुबखडाका फलहरु  झरेर त्यही रुखको धोद्रो भित्र पस्दथे । मरिचका दाना पाके पछि त्यही रुखको धोद्रो भित्र पस्दथे । मर्चाका पातहरु पनि खसेर त्यही धोद्रोमा पर्दथे । त्यसैका छेऊमा जंगली धानका गाँजहरु पनि थिए । सुगाले धानका बालाहरु चुड्थ्यो र रुखको हाँगामा बसेर खान्थ्यो । धानका बालाबाट केही धानका गेडाहरु पनि  त्यही  धोद्रो परेको रुखमा खस्दथे । घामको तापका कारण ती पानीमा रहेका धानका गेडाहरु, आरुबखडाका दानाहरु रगत जस्तै राता भई कुहुन्थे र जाँड बन्थ्यो ।

गर्मी महिनामा तिर्खाएका चराहरुका बथान त्यो पानी खान उडेर जान्थे । अचम्मको कुरा त के थियो भने त्यो पानी पिउने बित्तिकै चराहरु मात्तिन्थे । बाङ्गोटिङ्गो उडेर माथि जान चाहन्थे तर मात्तिएर रुखको फेदमा नै झर्दथे । एकैछिन सुते पछि पुनः ताजा भएर उडेर टाढाटाढा सम्म रमाएर जान्थे । त्यस्तै ढेडु बाँदर र अरु रुख चढ्ने जंगली पशुहरु पनि त्यहाँको पानी पिउनासाथ मात्तिन्थे र एकछिन सुतेपछि पुनः ताजा भएर उठ्थे र रमाएर जान्थे ।

शिकारीले ती घटनाहरु देखेर छक्क पऱ्यो । "त्यो धोद्रो परेको खोको रुखमा त्यस्तो के चिज छ ? त्यो पक्कै पनि बिष चाही हाईन । यदी बिष भएको भए ती ढेडु बाँदर र चराहरु मरी सक्थे ।" उसले पनि डराउदै त्यो धोद्रामा रहेको थोरै पानी पियो र ऊ पनि चरा र ढेडु बाँदर जस्तै मात्तियो । त्यो पानीसंगै उसलाई मासु खाने इच्छा पलायो । उसले आगो बाल्यो । अचेत भएका कालिज र लुइचेलाई भुत्लायो र त्यो आगामाथि राखेर सेकुवा बनायो । उसले एक हातले त्यो पानी पियो र अर्को हातले हतार हतार गरेर मुखमा मासु हाल्यो ।

जब ऊ त्यो पानी पिउदै र मासु खाँदै थियो, उसले बरुण नामको सन्यासीलाई सम्झियो । ती बरुण सन्यासी त्यहाँबाट नजिकै बस्दथे । शिकारीले बिचार गऱ्यो कि मेरो अविष्कारको केही हिस्सा ती बरुण ऋषिलाई पनि दिऊँ । ती शिकारीले बाँसको ढुङ्ग्रीमा जाँड भरे । अलिकति सेकुवा पातमा बेरे । अनि उनी पातले छाना छाएको सन्यासीको आश्रमतिर लागे । उनी बरुण सन्यासीकहाँ पुगेर त्यो जाँड र सेकुवा उपहार दिए । ती दुबै जनाले जाँड र सेकुवा मजाले खाए । ती सन्यासी र बरुण ऋषिले त्यो मदिरालाई बाँसका ठुल्ठुला ढुङ्ग्रामा खन्याए । ढुङ्ग्राहरुलाई सन्तुलित तवरले खर्पनमा राखे अनि काँधमा राखेर काशीसम्म ल्याए । उनीहरुले सिमानामा पुग्नासाथ मदिरा बनाउने मानिसहरु आएको खबर त्यहाँका राजाकहाँ पठाए । उनीहरुलाई राजाबाट बोलावट भयो । उनीहरुले त्यो मदिराका ढुङ्ग्राहरु राजालाई प्रदान गरे । राजाले दुई तीन बटुका जाँड खाएपछि मात्तिए । ती राजालाई त्यो जाँड औधि मीठो लाग्यो र केही दिनमा नै एक थोपा पनि बाँकी नराखी त्यो सबै मदिरा खाई सिध्याए । । उनलाई मदिरा निकै मन पऱ्यो । त्यसपछि मदिरा बनाउने मानिसको खोजी गरे । त्यस्तो २ जना मानिस भेटेर राजाकहाँ हाजिर गराइयो ।

"तिमी मदिरा बनाउने मानिस हौ ?" राजाले सोधे ।

"हजुर" ती दुईले उत्तर दिए ।

"मदिरा कहाँ पाइन्छ" राजाले सोध्नुभयो ।

"हिमालयमा" ती दुईले उत्तर दिए ।

"जाओ फेरी भाँडोमा भरेर ल्याओ" राजाले आदेश दिए ।

सुरा र बरुण पुनः जंगलमा गए । तर विचार गरे टाढाको जंगलबाट त्यो मदिरा ल्याउन कठीन छ । त्यसैले उनीहरुले त्यो धोद्रो रुखभित्र के के चिजहरु थिए त्यसको सुची तयार पारे र त्यस अनुसार सबै सरसामान जम्मा गरे । त्यसपछि उनीहरु आफैले शहरमा मदिरा उत्पादन शुरु गरे । शहरका सबै नागरिकहरुले मदिरा पिउन शुरु गरे । मदिरा पिउन थालेपछि नागरिकहरुले आ आफ्नो काम बिर्सिए र काम नगरे पछि उनीहरु गरीव भए । केही दिन पछि त्यो शहर भूतहरुको शहर जस्तै भयो ।

काशीमा मदिरा उत्पादन भएपछि ती दुई मदिरा बनाउने मानिसले आफ्नो व्यापारलाई बनारसमा लिएर गए । त्यहाँका राजालाई खबर पठाए । राजाले पनि ती दुईलाई बोलाउनुभयो र उनीहरुलाई सहायता प्रदान गर्नुभयो । त्यहाँका मानिसमा पनि मदिरा पिउने आदत बस्यो । मानिस मदिरा पिएर व्यापार गर्न नै बिर्सिए । काशीको जस्तै बनारसको पनि व्यापार चौपट भयो । त्यसपछि सुरा र बरुण सकेता गए । त्यस शहरमा पनि मदिरा खाने बानी लगाएर उनीहरु सवाथीतिर लागे ।

त्यो बेलामा सवाथीमा सर्वमित्र नाम गरेका राजा थिए । ती दुबैलाई राजाले स्वागत गरेर भने "तपाईहरुलाई के सहायता चाहियो ?" राजाले तिनलाई ठूलो परिमाणमा मदिरा उत्पादन गर्न चाहिने सरसमान र अन्न र मदिरा राख्ने ५०० ठुला ठुला भाँडाको भेला गर्न अनुरोध गरे । त्यसपछि ती भाँडामा मदिरा बनाउन अन्न, फलफूल र मर्चा राखे र मुसाले त्यो मदिरा नखाओस् भनेर हरेक भाँडामा एक एकवटा विरालो बाँधेर राखे ।

जब त्यो अन्न र फलफूल कुहिएर अमिलो दुर्गन्ध आउन थाल्यो । कच्चा मदिरा उम्लेर आयो र पोखियो । बिरालाहरुले त्यो पोखिएको मदिरा चाटेर खाए । ती बिराला एकैछिनमा मातिएर दौडिएर एक छेऊमा गएर सुते । मुसाहरु आएर बिरालाका कान, नाक, र पुच्छरहरु सुँघे । मानिसहरुले सोचे कि ती बिराला मदिरा खाएर मरे । त्यो देखेर राजाका मानिसहरु स्तब्ध भए । त्यो सबै विवरण उनीहरुले राजामा जाहेर गरे ।

“पक्कै पनि यी मानिसले बिष बनाएको हुनुपर्छ ।” राजाले निश्चय गरे । राजाले उनीहरुको टाउको काट्ने आदेश दिए । जब सुरा र बरुणलाई मारियो उनीहरुको अन्तिम वाक्य थियो, “हजुर यो विष हाईन यो मदिरा हो यो ज्यादै मीठो र स्वादिलो छ ।”

ती व्यापारीलाई मृत्युदण्ड दिएपछि राजाले ती मदिरा राखिएका भाँडाहरु फुटाउने आदेश दिए । त्यहीबेला मदिराको असर कम हुदै गयो र विस्तारै बिरालाहरु खुशी भई रमाइलो गरेर खेल्न थाले । चौकिदारले त्यो सबै कुरा राजालाई सुनाए । “यदि यो विष भएको भए ती बिरालाहरु मर्ने थिए । यो पक्कै पनि ज्यादै मीठो र स्वादिलो खानेकुरा हुनुपर्छ । लौ हामी पनि खाऔं ।“

राजाले शहरलाई सजिशजाउ गर्न लगाए र राजपटाङ्गिनीमा एउटा मण्डप तयार गर्न लगाए । त्यो सिंहासनको माथि ठूलो सेतो छाता राख्न लगाए र त्यो छातामुनि आफ्नो कुर्सी राख्न लगाए । त्यहाँ मन्त्रीगण पनि भेला भएका थिए । राजा आफ्ना मन्त्रीबाट घेरिएर बसेका थिए । मदिराका घैलाहरु र पिउनका लागि गिलासहरु राखिएका थिए ।

त्यही बेला देवताका राजा शक्रले त्यो सबै दृश्य हेरेर बसिरहेका थिए । “कसले कर्तव्यपूर्वक आआफ्ना बा आमाको सेवा गरिहेका छन् ? ककसले आफ्ना मनले, बचनले र कर्मले आफ्ना कार्य गरिरहेका छन् ?” जब देवताका राजाले मण्डपमा पिउनका लागि राखिएको मदिरा देखे । उनले सोचे यदि सर्वमित्र राजाले यो पिए भने सर्वनास हुन्छ । उनले निश्चय गरे कि सर्वमित्र राजाले यो पिउनु हुदैन।

यो सब देखेर शक्रले बह्माको रुप धारण गर्नुभयो र एउटा हातमा मदिराले भरिएको घैला लिएर राजाको अगाडि देखापर्नु भयो । “मौसुफ यो मदिरा भएको भाँडो किनी बक्सियोस् ! हजुर यो मदिरा भएको भाँडो किनी बक्सियोस् !” जब

सर्वमित्रले शक्रलाई देखे उनले सोधे, "ब्रह्मा, हजुर को हुनुहुन्छ ? कहाँबाट पाल्नुभएको हो र यो के को भाडो हो ?"

शकले भन्नुभयो "सुन्नुहोस हजुर"। "यो भाँडामा नौनी घीऊ छैन । खुदो पनि छैन, मह पनि छैन, हजुर यो भाडो भित्र त अनगिन्ति खराब चाल चलनहरु छन् । जसले यो पिउँछ, त्यो ब्यक्ति मूर्ख हुन्छ । उसले आफू माथिको नियन्त्रण गुमाउँछ । यो पिए पछि त्यो ब्यक्ति फोहर नाली भित्र खस्छ । यसको प्रभाव यस्तो छ कि मानिसले सद्दे भएको बेला कहिल्यै नखाएको कुरा पनि यो पिएपछि खान थाल्छ । हजुर लौ अब किन्नुहोस्, यो सस्तो दाममा बिक्रिमा छ । यो ज्यादै खराब मदिराको भाँडो हो ।"

यो भाँडा भित्रको पेय पदार्थले सृजनशील र नवीन विचारलाई रोक्दछ । यो राक्षसी स्वभावको हुन्छ र ऊ शत्रुहरुको लागि हाँसोको पात्र बन्दछ । यसले धर्मसभामा मूर्खतापूर्वक गाउने र नचाउने गर्दछ । कृपया यो चमत्कारी मदिरा किन्नुहोस्, यसले यौन सम्बन्धि छाडा कुरा गर्न लगाउँछ ।

यो भाडाको मदिरा पिएमा कुनै बिषयबस्तुमा ध्यान केन्द्रित हुन दिदैन ।सबै चेतना गुमाउँछ । एकदमै लजालु ब्यक्ति पनि नाङ्गै लाज नमानी शहरको वरिपरी घुम्न थाल्छ । थाकेपछि उ जही तही सुत्न सक्छ । कहाँ खतरा छ ? कहाँ फोहर छ ? कहाँ सफा छ ? उसलाई कुनै प्रबाह हुदैन । यो नै मदिराको चरित्र हो । "हजुर यो किनिबक्सियोस् । यो सस्तो दाममा बिक्रिमा छ । यो ज्यादै खराब मदिराको भाँडो हो ।"

जसले यो पिउँछ, उसले पिउने बित्तिकै आफ्नो शरीरमाथि नियन्त्रण गर्न सक्दैन । मातेर भिल्लु भै हल्लिएर उभिन पनि सक्दैन । थरथर काम्छ । अर्काले चलाएको कठपुतली झै उफ्रिन्छ र हल्लिन्छ । तल माथि गरिरहन्छ । हजुर ! यो भाँडो किनिबक्सियोस् । यो भाडो पुरै मदिराले भरिएको छ ।

जसले यो भाँडोबाट मदिरा पिउँछ, उसले कुनै खतरा मोल्नु पर्दैन। किनकि उ अचेतमा हुन्छ । उसले आफ्नो बिछ्यौनामा मर्नु पर्दैन । उसले स्यालको बथानमा गएर ठक्कर खान्छ र बाटोको नालीमा जमेको पानीमा डुबेर मर्छ । यो पिउनु भयो भने एक सुका पनि पैसा साथमा हुँदैन । यो भन्दा दुर्भाग्य अरु केही हुदैन । जजसले यो मदिरा पिउँछन् त्यो मानिस सडकमै सुत्छन् । त्यो व्यक्ति छादेर

गन्धपुरी हुन्छ र उसलाई कुकुरले चाटीरहेको हुन्छ । यो पिए पछि महिला यसरी मातिन्छे कि मेरी आमा भनेर रुखलाई अंकमाल गर्छे । आफ्नो श्रीमान्लाई गाली गर्छे । उ यस्तरी अन्धी हुन्छे कि आफ्नो एउटै बच्चालाई पनि झापट लगाउँछे र कुटपिट गर्छे । हजुर यो भाँडोभित्र यस्तो बस्तु छ । कुनै मानिसले यो भाँडोबाट सारेर मदिरापान गरे पछि यो संसार नै उसको हुन्छ । त्यसपछि उसले कसैलाई टेर्दैन र आदर गर्दैन । यो भाँडो किन्नुहोस् । यो भाँडोभरी तीन पाने रक्सी छ ।

यो मदिरामा लत बसेपछि उच्चकोटीको परिवारको पनि धनसम्पत्ति गुमाउँछ । हजुर यो भाँडो किन्नुहोस् । यो सस्तो मूल्यमा बिक्रीमा छ । यो भाँडोभित्र यस्तो तरल पदार्थ छ जुन पिएपछि व्यक्तिले जिब्रो र खुट्टा माथि नियन्त्रण गुमाउँछ । पुराना देवताहरु समेत शंकास्पद देखिए र मदिरापान गरेर नै स्वर्ग गुमाउन पुगे । यो भाँडा किन्नुहोस् । यो भाँडो किन्नुहोस् र यो मदिराको स्वाद लिनुहोस् ।

यो मादक पदार्थ पिए पछि मानिसले आनन्दपूर्वक झुटा कुराहरु गर्दछ । मनाही गरेको क्रियाकलापहरु रमाइलो मानी गर्छ । गलत साहसले खतरातिर लैजान्छ । साथीहरु शत्रु बन्न सक्छन् । जसले यो पिउँछ उसले काममा बास्ता गर्दैन । उसले आफूलाई ननिस्कने गरी नर्कमा धकेली रहेको हुन्छ । हजुर, कृपया मदिरा पिउनुहोस् । मेरो मदिराको भाँडो किन्नुहोस् ।

जसले यो मदिरा पिउँछ, उसको मनमा पापी बिचार आउँछ । पापी बचन आउँछ र पापी कर्म गर्न पुग्दछ । उसले राम्रोलाई पनि नराम्रो देख्छ र नराम्रो कुरालाई पनि राम्रो देख्दछ । यो पिएपछि ज्यादै भलादमी मानिसले पनि अभद्र व्यवहार गर्न पुग्दछ । ज्यादै बुद्धिमान व्यक्ति पनि मूर्खतापूर्वक बकबक गर्दछ । हजुर यो प्रिय तरल पदार्थ पिउनुहोस् र यसमा लत बसाउनुहोस् । तपाईमा यसले नराम्रा व्यवहार जस्तो कि झुटो बोल्ने, बस्तुको दुरुपयोग गर्ने फोहरी कुरा बोल्ने र निर्दयी बनाउँछ ।

यसलाई नियमित पिउनु भयो भने यसले मानिसलाई कालान्तरमा कान्लामा सिंगले हान्ने गोरु जस्तो बनाउँछ । जो आफै सिंग भाँचेर बारीका पाटामा लडीरहेको हुन्छ । मदिराको बिषालु शक्तिसंग कसैले पनि मुकाबिला गर्न सक्दैन । कृपया मेरो मदिराको भाँडो किन्नुहोस् ।

छोटकरीमा भन्दा यो पिउनु भयो भने सबै विवेक गुम्नेछ । यसले लाजमर्दो बनाउँछ । शीलमा खिया पर्छ । तपाईको इज्जत र सुबासमा खिया पर्छ । यसले मनलाई अपवित्र बनाउँछ । मनमा बादल लाग्छ । यदि हजुरले यो मात लाग्ने तरल पदार्थ पिउनुभयो भने हजुरलाई पनि यस्तै बनाउँछ । कृपया मेरो मदिराको भाँडो किन्नुहोस् ।

जब राजाले यो कुरा सुने उनले मदिरापानले ल्याउने दुखहरु राम्ररी बुझे । धेरै रमाइलो गर्नु पनि खतरापूर्ण काम हो । उनले शक्र प्रति कृतज्ञता व्यक्त गरे । "ब्रह्मा" उनले एक्कासी चिच्याए र शक्रतिर फर्केर भने । "हजुरले मलाई मेरा बा आमा भन्दा पनि राम्ररी हेरचाह गर्नुभयो । हजुरका ती उत्कृष्ट शब्दहरुप्रति कृतज्ञ छु । हजुर मेरो ठूलो शिक्षक हुनुहुन्छ । हजुरलाई म रोजेर पाँच गाउँहरु दिन्छु । यस्तै सुसारे महिलाहरु, एकसय गाईहरु, दशवटा रथहरु, र उन्नत जातका घोडाहरु प्रदान गर्दछु ।

तेतीस कोटी देवताका प्रमुख शक्रले उत्तर दिनुभयो । उहाँले आफ्नो परिचय दिनुभयो र भन्नुभयो । "मलाई कुनै कुरा चाहिदैन । तपाई आफ्ना गाउँ, नोकरहरु, गाईबस्तु आफै राख्नुहोस् । स्वादिला र मीठा खानेकुराहरु आफै खानुहोस् र आनन्दित हुनुहोस् । जुन मैले हजुरलाई सिकाएको छु, त्यसै अनुसार कार्यहरु गर्नु भयो भने तपाई सिकायत मुक्त हुनुहुनेछ र अर्को जन्म पुनः स्वर्गमा हुनेछ ।

यसो भनेर शक्र स्वर्गमा फर्किनुभयो । राजा सर्वमित्रले मदिराबाट टाडा रहने प्रतिज्ञा गर्नुभयो । ती मदिराका भाँडाहरु फुटाउने आदेश दिनुभयो । त्यसदिनदेखि उनले धर्मदेशना दिन थाल्नुभयो । दान दिन थाल्नुभयो । आफ्नो जीवन राम्ररी बिताउनुभयो र उनको अर्को जन्म स्वर्गमै भयो ।

बुद्धले यो कथालाई यसरी अन्त्य गर्नुभयो कि "त्यो बेलामा आनन्द राजा थिए र म चाँही शक्र थिएँ ।"

(स्रोतः www.accesstoinsight.org बाट साभार )

## यो कथाबाट प्राप्त शिक्षा

- शील पारमिता नै यो कथाको मुख्य शिक्षा हो । मदिरा पियो भने शीलमा खिया पर्छ । इज्जत र सुबासमा खिया पर्छ । मन अपवित्र हुन्छ । मदिरापान गरेपछि झुटो कुरा बोल्छ । त्यसैले मदिरापान गर्नु हुदैन। यसले सर्वनास गराउँछ । मदिरापानले शील, ज्ञान, ध्यान, दान, सबै नष्ट हुन्छ । राजाले मात्र नभएर प्रजाले पनि शीलहरु पलन गर्नुपर्छ ।

- दोश्रो शिक्षा भनेको प्रज्ञा पारमिता हो । राजालाई शक्रले शिक्षा र धर्मदेशना दिएपछि उनले पनि आफ्ना प्रजाहरुलाई धर्मदेशना दिनुभयो, प्रज्ञा प्राप्तीको लागि ध्यान गर्न र दान दिन थाल्नुभयो ।

- दृढ प्रतिज्ञा पारमिता यो कथाको तेश्रो शिक्षा हो । राजा सर्वमित्रले मदिराको नराम्रा असर बुझेपछि मदिरापान नगर्ने दृढ प्रतिज्ञा गर्नुभयो ।

- पूर्वजन्ममा जस्तो कर्म गरेको छ त्यसकै आधारमा पुनर्जन्म हुन्छ । राजा सर्वमित्रले असल कर्म गर्नुभयो मदिरापान गर्नुभएन । शक्रले सिकाए अनुसार उहाँले असल कर्म गर्नुभयो । त्यसैले उहाँको अर्को जन्म स्वर्गमा हुनगयो । अर्कोतर्फ सुरा र बरुणले कुकर्म गरेकाले उनीहरुले मृत्युदण्ड पाए र नर्कमा पुनर्जन्म भयो ।

अरु शिक्षा पाठकवर्गले पत्ता लगाउनुहुनेछ ।

# बाँदर र गोही

नदीको किनारको एउटा ठूलो रुखमा एउटा एक्ले बाँदर बस्तथ्यो । तल नदीमा चाँही धेरै गोहीहरु बस्तथे । एउटा गोहीले त्यो बाँदरका क्रियाकलापहरु लामो समय देखि हेरीरहेको थियो । त्यो गोहीले आफ्नो छोरालाई भन्यो "मेरो लागि एउटा बाँदर ल्याइ देउन । म बाँदरको मुटु खान चाहन्छु ।" सानो गोहीले भन्यो "आमा म कसरी बाँदर समाउन सक्छु र ? म जमिनमा जान सक्दिन र बाँदर पानीमा आउदैन ।" आमाले भन्नुभयो "तिम्रो बुद्धिलाई प्रयोग गर, तिमीले जुक्ति निकाल्न सक्छौ ।" त्यसपछि त्यो सानो गोहीले धेरै बेरसम्म सोचेको सोचेकै गर्‍यो । उसले मनमनै भन्यो, म त्यो बाँदरलाई कुनै जुक्तिले यहाँ ल्याउन सक्छु । बाँदर बसेको रुख नदीको एउटा किनारमा थियो भने अर्को टापुमा लटरम्म पाकेका फलहरु थिए । बाँदर नदी तर्न सक्दैनथ्यो । म त्यो नदी तरेर बाँदर भएको ठूलो रुखमा पुग्न सक्छु । त्यसपछि त्यो सानो गोही त्यो नदी तरेर पारीपट्टी टापुमा पुग्ने इच्छा गर्‍यो जहाँ लटरम्म पाकेका फलहरु थिए । त्यसपछि त्यो गोही बाँदर भएको रुखको तल नदीमा आयो । त्यहाँ पुगेर त्यो गाहीले बाँदरलाई भन्यो "ए बाँदर दाई, त्यो पारीको टापुमा तिमी र म संगै जाउँ न ? त्यहाँ कति मीठा पाकेका फलहरु छन् ।" बाँदरले भन्यो "म यति ठूलो नदी तर्न सक्दिन । मलाई पौडिन आउदैन । "तिमीलाई नआएर के भो त मलाई आउँछ नि ? म तिमीलाई मेरो बुइ चढाएर नदी पार गराई दिउँला नि" गोहीले भन्यो । बाँदर लोभी थियो । त्यसैले उसले ती पाकेका फल खाने इच्छा गर्‍यो । ऊ गोहीको पिठ्यूँमा बुई चढ्यो । लौ जाऊँ न त" गोहीले भन्यो । "तिमीले मलाई राम्ररी बोक है । अहा ! कति आनन्द !" बाँदरले भन्यो । "तिमीलाई कस्तो लाग्यो नि ?" गोहीले लैजादै गर्दा भन्यो । जब गोहीले पानीमुनि लैजान थाल्यो तब उसले चिच्याएर भन्यो कता लगेको ? उसलाई थाहा थिएन पानी भित्र गएर के गर्ने । जब गोही अलि माथि आयो । बाँदरले सोध्यो "गोही, मलाई किन पानीमुनि लगेको ?" "म तिमीलाई पानीमुनि लगेर मार्छु ।" गोहीले भन्यो । मेरी आमा बाँदरको मुटु कलेजो खान चाहानुहुन्छ । त्यसैले म तिमीलाई मेरी आमा भएको स्थानमा लैजान्छु ।

"तिम्री आमाले मेरो मुटु कलेजो चाहेको भन्ने कुरा पहिले किन नभनेको?" बाँदरले भन्यो । "मलाई त्यो थाहा भएको भए मेरो मुटु कलेजो संगै लिएर आउथेँ नि ।

त्यो मैले रुखमै छाडेर आएको छु। बादरको कुरा सुनेर मूर्ख गोहीले भन्यो। "हो र ? तिमीले तिम्रो मुटु त्यो रुखमा राखेर आएका छौ ?" बाँदरले भन्यो। "तिमी मेरो मुटु लिन चहान्छौ भने त्यो लिनलाई रुखमै जानुपर्छ। तर तिमी यो टापुको नजिक छौ, जहाँ मीठा मीठा पाकेका फलफूलहरु पाइन्छन्। कृपया मलाई पहिला त्यो टापुमा लैजाउन साथी।" बाँदरले गोहीलाई भन्यो।

नाई, गोहीले बादरको अनुरोधलाई इन्कार गर्दै भन्यो। "म तिमीलाई सिधै त्यो रुखमा लिएर जान्छु जहाँ तिमीले तिम्रो मुटु राखेका छौ। त्यसपछि त्यो पाकेका फलफूल भएको टापुमा लैजाउँला। पहिला रुखबाट मुटु लिएर मलाई देऊ, त्यसपछि मात्र म तिमीलाई त्यो फलफूल भएको टापुमा लैजाउँला।" बाँदरले भन्यो "ठीकै छ"। गोहीले बाँदरलाई नदीको किनारमा पुऱ्याउन लागेको के थियो बाँदर गोहीको पिठ्यूबाट उफ्रेर नदीको किनारमा आयो र तुरुन्तै रुखमा चढ्यो। सबैभन्दा माथिको हाँगामा बसेर बाँदरले तल नदीमा भएको गोहीलाई भन्यो "मेरो मुटु माथि छ, तिमी चाहान्छौ भने लिन माथि आऊ।"

## भाग दुई

त्यो बाँदर डरले भागेर अर्को रुखमा गएर बस्न थाल्यो। शान्तिपूर्वक बाँच्नका लागि त्यो बाँदर गोही भएको ठाउँबाट टाढा रहन चाहन्थ्यो। त्यो नदीको बीचमा फलफूल बगैचा भएको एउटा अर्को टापु थियो। नदी र टापुको वीचमा एउटा ठूलो ढुँगा नदीबाट निकै माथि उठेको थियो। त्यो बाँदर त्यो ढुङ्गा भएको ठाउँमा फाल हानेर आउँथ्यो र फलफूल भएको टापुमा जान्थ्यो। एकदिन त्यो बाँदर ढुङ्गामा फाल हानेर फलफूल भएको टापुमा जाँदै गरेको दृश्य गोहीले देख्यो।

गोहीले विचार गऱ्यो कि दिनभरी त्यो बाँदर टापुमा रहन्छ वेलुका यही बाटोबाट फर्कन्छ त्यहीबेला म त्यसलाई यही समात्छु । त्यो विचार गरेर दिनभरी त्यो गोही बाँदर कहिले फर्कन्छ भनेर नदीमा पौडिएर बाँदरको बाटो हेरीरहन्थ्यो भने राती भएपछि त्यो गोही नदीबाट निस्किएर त्यो ठूलो ढुँङ्गामा सुतेर बाँदरको बाटो हेरीरहन्थ्यो। एकदिन जव रात पर्न थाल्यो बाँदर टापुबाट आफ्नो बासस्थान फर्कने क्रममा नदीको किनारमा आयो र टक्क रोकियो।

बाँदरले ढुँगातिर एकछिन हेरेर सोच्यो कि यो ढुँगा अघिपछिभन्दा आज किन अग्लो भएको छ ? यो ढुँगा यस्तो अग्लो कहिल्यै थिएन। यहाँ के आएर बसेको छ ? पक्कै पनि यो ढुङ्गामा गोही सुतिरहेको हुनुपर्छ। अनि ऊ नदीको किनारतिर गएर भन्न थाल्यो "ए ढुङ्गा"। "ए ढुङ्गा" भनेर तीन चोटी करायो। उसले भन्यो "ढुङ्गा साथी आज राती तिमी किन बोल्दैनौ ?"

ओहो ! यो ढुङ्गाले त बाँदरसंग कुरा गर्दो रहेछ भनेर मूर्ख गोहीले सोच्यो । यसपटक चाही मैले उत्तर दिनुपर्छ । मूर्ख गोहीले विचार गऱ्यो । त्यसले उसले उत्तर दियो "हजुर बाँदर के भयो ?" बाँदरले हाँसेर भन्यो " ए तिमी पो रहेछौ ।" " हजुर म " गोहीले भन्यो । म तिमीलाई पर्खिरहेका छु । म तिमीलाई खान्छु ।" "ओहो ! यो पटक चाँही तिमीले मलाई पक्का समात्यौ ।" बाँदरले भन्यो । "घर जाने अर्को कुनै बाटो छैन । त्यसैले तिमी आफ्नो मुख बाऊ त म हाम फालेर तिम्रो मुखमा पस्छु ।" बाँदरलाई थाहा थियो जब गोहीले मुख बाँउछ उसका आँखा बन्द हुन्छन् । जव गोही च्यातेर मुख बाँउछ त्यहीवेला बाँदर गोहीको टाउकोमा उफ्रेर त्यहाँबाट सिधै नदीको पल्लो किनारमा हामफाल्छ र छिटोछिटो रुख चढछ । जब बाँदरले मलाई झुक्यायो भनेर गोहीले बुझ्छ त्यो वेला बाँदर त रुखमाथि पुगीसकेको हुन्छ । गोहीले भन्छ "बाँदर तिमी त साह्रै छट्टु रहेछौ । तिमीलाई डर लाग्दैन अब म तिमीलाई एकलै छाड्छु । धन्यबाद ! गोही, म चाँही तिमीलाई पहिले जस्तै हेरीरहन्छु । बाँदरले भन्यो ।

(स्रोत :www.accesstoinsight.org बाट साभार )

## यो कथाबाट प्राप्त शिक्षा

- **वीर्यता र चातुर्य**ः बाँदर चलाख मात्र थिएन, उसंग वीर्य पारमिता पनि थियो, त्यसैले उसले गोहीको टाउकामो टेकी उफ्रीएर नदी पारी पुगेर आफ्नो ज्यान जोगायो । यो कथाको मुख्य शिक्षा भनेको वीर्यता र चातुर्य नै हो ।

- **लोभ र द्वेष गर्नु हुदैन**ः यो कथाको अर्को शिक्षा भनेको लोभ र द्वेष गर्नु हुदैन भन्ने नै हा । गोहीमा अर्काको मुटु कलेजो खाने लोभ थियो अनि अरुलाई हानी पुऱ्याउने इच्छा थियो । त्यो लोभ र द्वेषले अरुलाई हानी पुऱ्याउन सकेन । आफै टाक्सिएर बस्नु पऱ्यो । बाँदरमा पनि पारी बगैचाका मीठा फल खाने (लोभ) राग थियो त्यसैले उसले पनि धेरै जोखिम मोल्नु पऱ्यो । जस्तो कर्म गऱ्यो त्यस्तै फल प्राप्त हुन्छ ।

- राग र द्वेषले हानी पुऱ्याउँछः गोहीकी आमालाई बाँदरको मुटु कलेजो खाने राग थियो । त्यसैबाट बाँदर मार्ने योजना बन्यो । त्यसैले राग संगसंगै द्वेष पनि आउँछ । तसर्थ राग लिनुहुन्न ।

अरु शिक्षा पाठक वर्गले पत्ता लगाउनुहुनेछ ।

# कछुवाले कसरी आफ्नो ज्यान जोगायो ?

एक जना राजाले नव अधिराजकुमारहरुका लागि आफ्नो दरवारको कम्पाउण्डभित्र नै तलाऊ बनाएका थिए । ती अधिराजकुमारहरु त्यहाँ पौडी खेल्थे, नौका चलाउथे र ऱ्याफ्टिङ गर्दथे । एकदिन राजाले तलाऊमा माछा हाल्नका लागि एउटा मानिसलाई अह्राए ।

ती माछा हेर्नका लागि अधिराजकुमारहरु दगुरेर आउँथे । अब त माछा संगसंगै एउटा कछुवा पनि राखिएको थियो । माछा देखेर अधिराजकुमारहरु खुशी हुन्थे तर उनीहरुले यस अघि कछुवा चाही देखेका थिएनन् । त्यसैले उनीहरु त्यो कछुवा देखेर डराउथे । उनीहरुलाई त्यो कछुवा राक्षस जस्तो लाग्दथ्यो । उनीहरु रुदै कराउदै आफ्ना बुबाकहाँ गएर भन्थे "त्यो तलाउको किनारमा एउटा राक्षस छ ।"

राजाले उनका मानिसहरु बोलाएर त्यो राक्षसलाई समातेर राजदरबारमा ल्याउने आदेश दिए । जव मानिसहरुले त्यो कछुवालाई समातेर ल्याए अधिराजकुमारहरु रुदै कराउदै भाग्न थाले । राजा आफ्ना छोराहरुलाई धेरै माया गर्दथे । तसर्थ जसले त्यो कछुवा समातेर ल्याएको थियो त्यसैलाई नै कछुवा मार्ने आदेश दिए । उनीहरुले राजालाई भने "यसलाई कसरी मार्नु ?" एउटाले भन्यो "यसलाई पीठोमा लटपट्याएर मार्नु पर्छ ।" यसै गरेर एक पछि अर्कोले भन्दै गए । यसै क्रममा एकजना पानी देखि डराउने बुढा मानिसले भने "यसलाई तलाऊमा फ्याकि देओ । जहा त्यो चट्टानमाथि बग्दै नदी सम्म पुग्छ । त्यसपछि त यो धेरै दुख पाएर मरीहाल्छ ।"

त्यो बूढाको कुरा सुनेर कछुवाले टाउको हल्लाउँछ । "हजुर मैले यस्तो के गरेकोछु र मलाई यस्तो डरलाग्दो सजाय दिनुहुन्छ ? अगाडिका योजना नै बरु ठीक छन् । हजुर मलाई त्यो तलाऊमै फ्याकिदिनुहुन्छ त ! यस्तो क्रुरतापूर्ण शब्द नबोल्नुहोस ।" कछुवाले भनेको सबै कुराहरु सुनिसकेपछि राजाले उनका मानिसलाई त्यो कछुवालाई तलाऊमा फ्याकिदेओ भनेर आदेश दिए ।

कछुवाले हास्दै सोच्यो अब त यो तलाऊ हुदै आफू त्यो नदीमा पुग्न सक्छु जहाँ मेरो पुरानो घर छ । ठीक छ । ती ब्यक्तिलाई थाहा छैन कि म पानीमा कति सुरक्षित छु ।

(स्रोतः www.accesstoinsight.org बाट साभार )

## यो कथाबाट प्राप्त शिक्षा

- **मूर्ख र चलाखः** मूर्ख राजाले कछुवालाई तलाऊमा फ्याकिदेओ भनेर आदेश दिए । कछुवालाई पानीमा फाल्दा दण्ड हुन्छ कि पुरस्कार भन्ने कुरा मूर्ख राजा र बूढा ब्राह्मणलाई के थाहा ? उता कछुवा चाही चलाख थियो । उसले पानीमा फ्याकिने दण्डबाट मनमनै खुशी भयो तर बाहिर प्रकट गरेन ।

- **राग र द्वेष गर्नु हुन्नः** दोश्रो शिक्षा भनेको कसैप्रति पनि राग र **द्वेष** गर्नु हुदैन भन्ने नै हो । राजाको राजकुमारप्रति धेरै माया थियो त्यसैले उनमा कछुवा प्रति द्वेष उत्पन्न भयो । राजकुमारहरुको माया कै कारण निरअपराधी कछुवालाई मार्ने आदेश दिए । व्देषले अर्काको हानी गर्न सक्दैन । राजाको द्वेषले कछुवालाई हानी गर्न सकेन ।

- तेश्रो शिक्षा भनेको रुप हेर्नुहुन्न, गुण हेर्नुपर्छ भन्ने नै हो । माछा राम्रो र कछुवा नराम्रो भन्नु रुप मात्र हो ।

अरु शिक्षा पाठकवर्गले पत्ता लगाउनुहुनेछ ।